


## ज्ञानकाजी मानन्धर

जन्मः सन् १९३८ नोभेम्बर १६

ठेगानाः वांख्यटोल (नालादोबाटो), बनेपा-५, काभ्रे

फोनः ०११-६६११८४

शिक्षाः बी.ए., बी.एड., टोफल


**प्रकाशित पुस्तकहरूः**

•Nepal-Legend and Drama • The Legends of Nepal • कुमारी • खड्गजोगिनी
• नेपालः आख्यान र नाटक • कपिलवस्तुस भगवान् • बनेपा-स्तवन • फुटकर रचनाहरू

**सम्पादित पत्रिकाहरूः**

• स्मारिका (आजाद मा.वि., बनेपा, २०३५) • स्मारिका (बनेपा न.पा., बनेपा, २०४०)
• स्मारिका (केन्द्रीय मानन्धर संघ, काठमाडौं, २०५७)

**शैक्षिक सेवाः**

• चैतन्य स्कुलका संस्थापक
• चैतन्य मा.वि. सञ्चालक समितिको स्थापनाकालदेखिका सचिव एवं पटक-पटक अध्यक्ष ।
• काभ्रे क्याम्पसका संस्थापक सदस्य
• चैतन्य क्याम्पसका संस्थापक सदस्य, सल्लाहकार तथा व्यवस्थापन समितिमा केही समयसम्म अध्यक्ष
• आजाद मा.वि. का शिक्षक (वि.सं. २०१७-२०४५)
• प्रौढ शिक्षानिकेतन (हाइस्कुल) का संस्थापक सदस्य तथा ६ वर्षसम्म प्रधानाध्यापक
• जिल्ला शिक्षा समिति काभ्रेमा एक अवधिसम्म सदस्य
• जिल्ला शिक्षक छनोट-समिति काभ्रेमा एक अवधिसम्म सदस्य
• वि.सं. २०२९ सालमा नयाँ शिक्षा योजना अन्तर्गत शारदा मा.वि. फलाँटेमा का.मु. प्रधानाध्यापक

**आबद्ध संस्थाहरूः**

• नेपालभाषा आकादेमी • प्रतिभा-सम्मान प्रबन्धगुठी

**निर्माण-सहयोगः**

• चैतन्य रा.प्रा. स्कुल भवन-निर्माण-समितिका (वि.सं. २०१८-२०२२) सचिव
• आजाद मा.वि. परिसरमा काभ्रे जेसिजका तर्फबाट क्यानेडियन सहयोग लिई निर्माण गरिएको बहुउद्देश्यीय भवनका प्रोजेक्ट डाइरेक्टर एवं निर्माण-समितिका अध्यक्ष
• बनेपा महायान समाज गुम्बा-निर्माण समितिका सचिव
• बनेपाली मानन्धर समुदायको जापाली-निर्माण-समितिका अध्यक्ष
• चण्डेश्वरी मन्दिर छानासुधार तथा पुनर्निर्माण समितिका सदस्य

**सम्मानः**

• नगद पुरस्कारः जिल्ला शिक्षा समिति, काभ्रे • दीर्घसेवापदकः आजाद मा.वि., बनेपा, काभ्रे
• कदरपत्रः नेपाल शिक्षक संघ, काभ्रे • कदरपत्र, २०५७ः चैतन्य मा.वि., बनेपा, काभ्रे
• सम्मानपत्र, २०५७ः राजदास बादे श्रेष्ठ स्मृति प्रतिष्ठान, बनेपा, काभ्रे
• कदरपत्र, २०५८ः बनेपा नगरपालिका, बनेपा, काभ्रे • कदरपत्र, २०५९ः काभ्रे जेसिज, काभ्रे
• कदरपत्र र दीर्घसेवापदक, २०५९ः प्रतिभा-सम्मान प्रबन्धगुठी, बनेपा, काभ्रे
• सम्मानपत्र, २०६१ः स्मृति छात्रवृत्ति कोष, बनेपा, काभ्रे
• कदरपत्र, २०६२ : काभ्रे बहुमुखी क्याम्पस, बनेपा, काभ्रे
• सम्मानपत्र, २०६३ : केदारनाथ प्रधान स्मृति तथा प्रकाशन समिति, बनेपा काभ्रे


ISBN 99946-2-131-9





# बनेपा-स्तवन

ज्ञानकाजी मानन्धर

| | | |
|---|---|---|
| कृति | : | बनेपा-स्तवन |
| कृतिकार | : | ज्ञानकाजी मानन्धर |
| भूमिकाकार | : | सत्यमोहन जोशी |
| | : | वेदनाथ रेग्मी |
| प्रकाशक | : | सुखवेती मानन्धर<br>बनेपा, काभ्रे |
| संस्करण | : | प्रथम |
| सर्वाधिकार | : | लेखकमा |
| प्रकाशनकाल | : | माघ २०६३ |
| प्रकाशनप्रति | : | ११११ |
| अक्षराङ्कन | : | गीता मञ्जुश्री<br>बनेपा, काभ्रे |
| मुद्रण | : | इन्द्रेणी अफसेट प्रेस<br>अनामनगर, काठमाडौं<br>दूरभाषाङ्क – ४७७१४४८ |
| मूल्य | : | रु. १५०।- |
| ISBN | : | 99946-2-131-9 |


समर्पण

# सम्पूर्ण बनेपालीहरूलाई !

ज्ञानकाजी मानन्धर

# दुई शब्द

नेपाली संस्कृतिका अनुरागी, ज्ञाता तथा अनुसन्धाता ज्ञानकाजी मानन्धरज्यूले लेख्नुभएको 'बनेपा-स्तवन' नामक यो पुस्तक नेपाली संस्कृतिको फाँटमा एउटा नौलो किसिमको उपलब्धि नै भएको छ। एक त यो पुस्तकका लेखक महोदय स्वयं बनेपानिवासी एक प्रतिष्ठित विद्वान् तथा सिद्धहस्त लेखक हुनुभएकाले बनेपा र बनेपाली समाजबारे उहाँमा ज्ञानको ठूलो भण्डार नै छ, फेरि उहाँका पिताजी मोहनलाल खिँ बनेपाका एक प्रसिद्ध संस्कृतिविद् (परम्परागत वाद्यवादनका गुरु र लोकनाटक-निर्देशक) हुनुभएकाले पनि पुत्रमा पिताको वंशानुगत गुण र कलाको प्रभाव त पर्ने नै भयो। त्यसैले ज्ञानकाजी मानन्धरले लेख्नुभएका तथा प्रकाशित भइसकेका अङ्ग्रेजी, नेपाली र नेपाल भाषाका पुस्तकहरू {(Nepal – Legend and Drama, The Legends of Nepal, कुमारी (पूर्णाङ्की नाटक), खड्गजोगिनी (पूर्णाङ्की नाटक), नेपाल : आख्यान र नाटक (एकाङ्कीसङ्ग्रह) र कपिलवस्तुस भगवान् (पूर्णाङ्की नाटक)} साहित्य र संस्कृतिका फाँटमा निकै स्तरीय र प्रशंसनीय भएका छन्। नेपाल भाषामा लेखिएको उहाँको 'कुमारी' त रूसको 'साहित्य प्रकाशन गृह' बाट रूसी भाषामा समेत प्रकाशनमा आइसकेको छ। प्रस्तुत पुस्तकको पनि पाठकवर्गबाट स्वागत हुने नै छ भन्ने कुरामा म विश्वस्त छु।

वास्तवमा यस पुस्तकमा पाइने एक प्रमुख विशेषता भनेको यसभित्र बनेपाको भौगोलिक अवस्थिति, पुरातात्त्विक र ऐतिहासिक महत्ताबारेका खोजपूर्ण ज्ञातव्य सामग्रीहरू प्रकाशमा ल्याइनुका साथसाथै बनेपाली समाजमा अमूल्य सम्पदाका रूपमा सुरक्षित अनेकन् पूजाआजा, कर्मकाण्ड (Rituals), जात्रा, पर्व-उत्सव, कला, वास्तुकला, मठमन्दिर आदिको परिचयात्मक विवरणहरूको प्रस्तुति समावेश गरिएको छ, तथा बनेपाली जनजीवन-शैली (Life-Styles) का संस्कारजन्य चित्रमय संस्कृतिहरू पनि निकै आकर्षक बनाइएको छ। अझ यसभित्र तोरी पेल्ने कोलसँग सम्बन्धित बनेपाली मानन्धरहरूको सामाजिक-आर्थिक (Socio-Economic) जीवनपद्धति र कोल

सञ्चालन गर्ने स्वजातीय प्रविधि (Indigineous Technology) का सन्दर्भहरू पनि विशेषतः ज्ञानमूलक भएका छन् ।

समग्रमा भन्नुपर्दा प्रस्तुत 'बनेपा-स्तवन' पुस्तक काठमाडौँ उपत्यकाबाहिरको पूर्वीय द्वार काभ्रे जिल्लाको बनेपासहर, बनेपाली समाज र जनताका विषयमा उच्चस्तरीय सूचनामूलक (Highly Informative) एवं ज्ञानवर्द्धक सामग्रीहरू एकत्रित गरी प्रकाशमा ल्याइएको बनेपाको सांस्कृतिक कोश (Cultural Encyclopedia of Banepa) नै भएको छ भन्नुमा अत्युक्ति हुनेछैन । अतः प्रस्तुत पुस्तक पठनीय र सङ्ग्रहणीय हुनुका साथै नेपालका अन्य जिल्ला, सहर, ग्राम्य क्षेत्रहरूका लागि पनि आ-आफ्ना छरिएका लुप्त सम्पदा र ओझेलमा परेका प्राकृतिक र सांस्कृतिक सम्पदाहरूको खोजीनिती गर्नका लागि पनि अनुकरणीय भएको छ ।

अन्त्यमा, यस किसिमको अमूल्य निधि भएको पुस्तक लेखी प्रकाशनमा ल्याउनुहुने मित्रवर ज्ञानकाजी मानन्धरज्यू धन्यवादका पात्र हुनुभएको छ । आफ्नो खोजपूर्ण लेखनकार्यमा उहाँको कलमले निरन्तरता पाओस् ।

**● सत्यमोहन जोशी**
**चान्सलर**
**नेपालभाषा आकादेमी**

**ल० पु० बखुंबहाल**
**२०६३ पौष १८**



# मेरो केही भन्नु

केही समयअघि बनेपामा बहुमुखी प्रतिभाका धनी एक व्यक्ति हुनुहुन्थ्यो – मोहनलाल खिँ मानन्धर । उहाँ आफ्नो स्ववासी नगर र वरिपरिको सांस्कृतिक जीवनप्रति हृदयदेखि समर्पित हुनुहुन्थ्यो । पुराना-पुराना गीत, भजन इत्यादिको अर्थ लगाई सटीक व्याख्यासमेत गरिदिनुहुन्थ्यो । शास्त्रीय, स्थानीय र स्वरचित आख्यायिकाहरूबाट राम्रा-रमाइला कथानकहरू बुनेर नाटक-नाटिकाहरू तयार गरी तिनको मञ्चन गराउनुहुन्थ्यो । बनेपाली मौलिक संस्कृति पछिपर्यन्त जीवन्त रहिरहोस् भन्ने उहाँको हार्दिक कामना थियो ।

प्रस्तुत पुस्तकमा सङ्कलित लेखहरूका प्रणेता ज्ञानकाजी मानन्धर यिनै मोहनलालका सुपुत्र हुनुहुन्छ । केटाकेटी छँदै आफ्ना बुबाद्वारा मञ्चित नाटक-नाटिकाहरू हेर्ने र पछि एकाध प्रस्तुतिमा पात्र भई खेल्ने अवसर पाएका अनि अङ्ग्रेजी साहित्यमा एम० ए० तहसम्मको अध्ययन गरेका ज्ञानकाजी मानन्धरमा पछि गएर नाटकहरू लेख्ने इच्छा जागृत हुनु स्वाभाविक थियो । त्यसैले उहाँले साहित्यतर्फ नाटकविधामा कलम चलाउने प्रयास गर्न थाल्नुभयो, सफल पनि हुनुभयो । नेपाली, नेपालभाषा र अङ्ग्रेजीमा गरी उहाँका केही नाटकहरू प्रकाशित भइसकेका छन् । कुनै एकाङ्की छन् त कुनै पूर्णाङ्की । कुनै नेपालीमा लेखिएका छन् त कुनै नेपालभाषामा र कुनै अङ्ग्रेजीमा ।

मैले उहाँको नाटकेतर पुस्तक 'Nepal - Legend and Drama' र केही नाटकहरू पढ्ने मौका पाएको छु । पढ्दा मैले के देखेँ भने यी सबैका कथावस्तु नेपाली उपत्यकाभित्र प्रचलित आख्यान-उपाख्यानहरूबाट लिइएका रहेछन् । यसबाट लेखकमा नेपालको आफ्नै 'लेजेन्ड'–परम्परा र संस्कृतिप्रति गहिरो प्रेमभाव रहेछ भन्ने छर्लङ्ग हुन्छ । यो विशेषता उहाँले आफ्ना पिताबाट विरासतमा पाउनुभएको हो ।

हाल आएर उहाँले नाटकलेखनबाट विराम लिनुभएको छ, तर पूर्णविराम भने अवश्यै होइन । यसपटक उहाँलाई नयाँ नाटकको रचना गरेर पाठकसमक्ष प्रस्तुत गर्नुभन्दा आफ्नो प्रिय जन्मस्थल बनेपाका सामाजिक, सांस्कृतिक,

ऐतिहासिक आदि पक्षहरूको चिनारी जनसमक्ष ल्याउने इच्छा भयो । प्रस्तुत पुस्तक 'बनेपा-स्तवन' यही कुराको साक्ष्य हो । यो पुस्तक नाटकजस्तै एकै आसनमा लगातार बसेर आद्योपान्त लेखिएको पुस्तक होइन, फुर्सत-फुर्सतमा आसन कसेर लेखिएका लेखहरूको सँगालो हो ।

यो 'बनेपा-स्तवन' मा जम्माजम्मी ११ वटा लेखहरू सङ्गृहीत छन् । यहाँदेखि मुनि मैले प्रत्येक लेखको सारसङ्क्षेप र बीचबीचमा आफूलाई भन्न मन लागेका कुराहरू प्रस्तुत गर्ने जमर्को गरेको छु ।

**१. बनेपा :**

यस लेखमा सर्वप्रथम बनेपासहरको भौगोलिक अवस्थिति र क्षेत्रफलको उल्लेख छ । साथै, इतिहासको कुनै बेला यसको नाम भगवान् गणेशको शुभनामबाट 'विनयापुरी' रहन गएको प्रसङ्ग प्रस्तुत गरिएको छ । उहिले-उहिलेका राजाहरू नयाँ नगरको निर्माण गराइसकेपछि त्यसलाई 'देश' भन्ने र देशरक्षाका निमित्त ८ कोणमा ८ मातृकापीठहरूको स्थापना गर्दथे । परन्तु भोलाखाटोलवरिपरिका स-साना बस्तीहरूलाई मिलाएर राजा आनन्ददेवद्वारा विकसित गरिएको बनेपानगरलाई ८ गणेशले परिवेष्ठित गराइएको थियो भन्ने उल्लेख पाइन्छ । कुनै स्रोतको आधार गरी लेखकले बनेपाको विकासक्रम किराँतकालदेखि नै आरम्भ भएको उल्लेख गर्नुभएको छ ।

बनेपाको इतिहास चिनाउने सिलसिलामा उहाँले कुनै बखत बनेपाको राजनीतिक परिदृश्यमा वर्द्धनखलकको शक्तिशालिता र भूमिकाको सङ्क्षिप्त चित्रण प्रस्तुत गर्नुभएको छ । यसै क्रममा जयस्थिति मल्ललाई भक्तपुर भित्र्याएर राजा बनाइएको र यसै खलकका जयसिंहराम वर्द्धनले त्यसको कडा विरोध गरेको प्रसङ्ग आउँदछ । यसपछि बनेपा लायकुलपरिसरमा स्थापित उत्कृष्ट कलाकृति सूर्यमूर्तिको चित्रण गरिएको छ ।

बनेपाकी आराध्य देवी चण्डेश्वरीसम्बन्धी किंवदन्तीहरूको प्रसङ्गमा बनेपाका राजा रण मल्लका पालामा चण्डेश्वरीमाईले धलंछेपरिवारका मोहनसिं मानन्धरलाई राँगाको सुनको टाउको वरप्रसाद दिनुभएको कुरो आउँदछ । उहिले बनेपामा ३२ गणदेवताले आवृत मुकुन्डोसहितको कुमारीनृत्य हुने गरेको र पछि गएर त्यो नृत्य मासिएको प्रसङ्ग अगाडि आउँदछ । लेखको अन्त्यतिर केही समयअगाडिसम्म काठमाडौं (नरदेवी) को श्वेतकालीनृत्य करिब १२-१२ वर्षमा बनेपा ल्याई यहाँको लाय्कुल डबलीमा प्रस्तुत गर्ने गरिएको र त्यस नृत्यको मूल कथा भगवती चण्डेश्वरीको कथासित मिलेको कुरो परेको छ ।



**२. बनेपाका अष्टविनायकहरू :**

यस लेखमा लेखकले बनेपासहर र वरिपरिका गणेशहरूका कुरा अघि सार्दै सहरको सुरक्षाका निमित्त प्रतिष्ठा गरिएका ८ विनायकहरूको छुट्टाछुट्टै वर्णन प्रस्तुत गर्नुभएको छ । यसअघि कुनै जमानामा बनेपानगरको उत्तरपट्टि रहेको 'तिनत्वापो' भन्ने स्थानमा प्यागोडाशैलीमा निर्मित ९ तले भगवतीमन्दिर भएको र त्यो मन्दिरको संरक्षण गर्न बसेका 'भुजङ्ग' नाम गरेका नागले ८ विनायकहरूका ८ पोखरीहरूलाई जल पुऱ्याइदिने गरेको अनुश्रुतिको उल्लेख छ । अष्टविनायकसमूहमा पर्ने ८ गणेशका नामहरू हुन् – तलापुखु, प्वाक:, थाच्छु, काँतु, वकु, कुबाहा:, तुकंप्व: र क्व:ला ।

**३. बनेपाको प्रसिद्ध चण्डेश्वरीमन्दिर :**

लेखको आरम्भमा लेखकले उहिले-उहिले मन्दिर, दरबार र घरको निर्माण प्राचीन वास्तुविद्यामा उल्लिखित निर्देशहरूको पालना गरेर गरिन्थ्यो भन्दै एउटा जीर्ण थ्यासफूका केही रङ्गीन चित्र र वाक्यहरू हाल मौजुद रहेको कुरो लेख्नुभएको छ । यसै सन्दर्भमा उहाँले वास्तुशास्त्रमा निर्माणस्थललाई (१) गरुड, (२) बाघ, (३) सिंह, (४) कुकुर, (५) नाग, (६) मूसो, (७) हात्ती र (८) फ्याउरो (स्याल ?) गरी बराबर भागमा विभाजित गर्नुपर्ने प्रावधान रहेको प्रसङ्ग प्रस्तुत गर्नुभएको छ ।

लेखकले चण्डेश्वरीमन्दिर उहिले १ (गरुडभाग) मा पारेर बनाइएको विश्वास राख्नुभएको देखिन्छ ।

निर्माणको कुरापछि मन्दिरको अङ्ग-प्रत्यङ्गमा रहेका विभिन्न कलाकृतिहरूको वर्णन गरिएको छ । यही प्रसङ्गमा मन्दिरको भुइँतलाको पश्चिम गाह्राको बाहिरी सतहमा अङ्कित भैरवनाथको उग्र किन्तु सुन्दर कलात्मक भित्तिचित्रको वर्णन गरिएको छ ।

लेखको अन्त्यमा २०५७ सालतिर 'चण्डेश्वरीमन्दिर छानासुधार समिति' को गठन भएको र मन्दिरको छानामा सुनको मोलम्वा लगाइएका ताँवाका पाताहरू जडान गर्न कोष खडा गर्ने उद्देश्यले कोटिहोम (२०५८ मङ्सिर ५ – १९) को आयोजना गरिएको उल्लेख छ । कोटिहोम भइरहँदा कतिपय नरनारीहरूले धन चन्दा दिनुका साथै शरीरमा लगाइएका गहनागुरियासमेत अर्पण गरेका थिए । पछि चण्डेश्वरीमन्दिर दक्षिणतिर ढल्किँदै गएको देखिएको हुनाले मन्दिरको पुनर्निर्माण गर्नुपर्ने आवश्यकता ठहर भएको हुँदा 'छानासुधार समिति' को 'चण्डेश्वरीमन्दिर छानासुधार तथा पुनर्निर्माण समिति' भनी पुनर्नामकरण गरियो ।

### ४. बनेपामा देशपूजा :

बनेपा कृषिकर्म र बन्दव्यापारका हिसाबले ख्यातिप्राप्त क्षेत्र हो । त्यसैले होला, लेखकले बनेपाको देशपूजालाई खेतीपातीका निमित्त आकाशबाट पानी माग्ने र व्यापारको उन्नतिका निमित्त देवीदेवीहरूबाट आशीष माग्ने समारोहका रूपमा हेर्नुभएको छ । देशपूजाको वर्णनमा उहाँले देशपूजाका व्रत-उपवासका विधिविधान, पूजामा प्रयोग गरिने सामग्रीहरू, मानिने देवीदेवता, गुठीहरू, हिँडिने बाटाघाटा, बजाइने सांस्कृतिक बाजा, लस्कर लागेर हिँड्ने थरीथरी समुदायका नरनारी इत्यादिको विस्तृत विवरण प्रस्तुत गर्नुभएको छ । साथै, आषाढ कृष्ण चतुर्दशीपछि आउने आइतबारका दिन सरकारी तहबाट माई चण्डेश्वरीलाई पूजा पठाइने कुरो पनि भन्नुभएको छ ।

### ५. बनेपाको मुकुन्डोनाच :

लेखको आरम्भमा चण्डेश्वरीभगवतीको लीला खास गरी चण्डासुरदैत्यको संहारको प्रकरणको व्याख्याका निमित्त धेरै अगाडि चण्डेश्वरीको कुमारीनृत्य डबलीहरूमा प्रस्तुत गर्ने गरिएको प्रसङ्ग परेको छ ।

यसपछि काठमाडौँ उपत्यकाभित्र र बाहिर प्रकाशित हुने विभिन्न अष्टमातृकानृत्य र दोलखा, बागलुङ, पाल्पा आदि स्थानहरूमा निकालिने गणनृत्यहरूको उल्लेख छ । यी नृत्यहरू कुनै-कुनै प्रतिवर्ष र कुनै-कुनै १२-१२ वर्षमा हुने र विभिन्न समुदायहरूबाट सञ्चालित हुने गरेको कुरा लेखिएको छ ।

लेखकले मातृकानृत्यहरूलाई आनुष्ठानिक र मनोरञ्जनात्मक गरी दुई थरीमा विभाजित गर्नुभएको छ । उहाँका अनुसार आनुष्ठानिक विधाको नृत्य तान्त्रिक विधि र संस्कार गरी शुभारम्भ गरिन्छ भने मनोरञ्जनात्मक विधाको नृत्य स्वतन्त्र सांस्कृतिक कार्यक्रमका रूपबाट प्रस्तुत गरिन्छ । आनुष्ठानिक प्रकृतिका दुर्गानृत्यहरू आफ्नो 'देश' बाट अर्को 'देश' मा लगेर प्रदर्शित गरिन्छन् ।

लेखक एकपटक फेरि बनेपाको हराइसकेको कुमारीगणनृत्यको प्रसङ्ग कोट्याउनुहुन्छ । बनेपाको कुमारीनृत्य लेखकले आफैँले देख्नुभएको होइन, यसबारे आफ्ना पिताका मुखबाट सुन्नुभएको मात्र हो । तथापि उहाँले अघि भव्य रूपमा चालू रहेको यो महत्त्वपूर्ण धार्मिक-सांस्कृतिक सम्पदालाई पुनरुज्जीवित गराउनुपर्ने आवश्यकता औँल्याउनुभएको छ ।



### ६. बनेपाको सूर्यमूर्ति र बनेपाली रामवर्द्धनहरू :

लेखको सिरानीमा लेखकले भगवान् सूर्यको महिमा गाउनुभएको छ । यस सन्दर्भमा उहाँले 'ऋग्वेद' मा आदित्यको पूजा, उपासना र उपस्थान हुने गरेको प्रसङ्ग प्रस्तुत गर्दै 'सूर्यतापिनी-उपनिषद्' (१ – ६) मा रहेको 'एष ब्रह्मा च विष्णुश्च रुद्र एष हि भास्करः' मन्त्र उद्धृत गरेर सूर्यदेवता ब्रह्मा, विष्णु र महेश्वरका संयुक्त रूप हुन् भन्ने धारणा व्यक्त गर्नुभएको छ । 'महाभारत' को 'वनपर्व' मा आदित्यका १०८ नामहरू भएको कुरो बताउनुभएको छ । साथै, ग्रीस र ट्रोयको युद्धमा सूर्यको भूमिका प्रभावकारी रहेको कुरालाई स्पर्श गर्नुभएको छ ।

यसपछि बनेपा लाय्कुलनजिकै स्थित ढुङ्गेधाराको समीपमा रहेको सूर्यमूर्ति र त्यसमा कुँदिएका कुराहरूको यथार्थ चित्रण छ । तत्पश्चात् लेखमा बनेपाको वर्द्धनपरिवारले नेपालको राजनीतिमा खेलेका भूमिकाहरूको वर्णन गरिएको छ ।

### ७. बनेपाको जालुद्योपर्व :

'जालुद्यो' को अर्थ 'भातको देउता' हो । बनेपामा हरेक साल जालुद्योको पर्व भाद्र शुक्ल पूर्णिमा (इन्द्रदह नुहाउने पूर्णिमा) ताक धुमधामसित मनाइन्छ । यो लेख यही जालुद्यो र जालुद्योसम्बन्धी सामाजिक-सांस्कृतिक परम्परालाई विषयवस्तु गराएर प्रस्तुत गरिएको छ ।

हाल जालुद्योपर्व येनकेन मात्र चलिरहेको छ । आर्थिक स्रोतको अभावले ह्रासोन्मुख हुँदै गइरहेको देखिन्छ । लेखकले यो पर्व मासिए बनेपाले आफ्नो एक महत्त्वपूर्ण संस्कृति गुमाउने डर व्यक्त गर्नुभएको छ ।

### ८. बनेपामा मानन्धरहरूको कोल :

आफ्नो जीवनकालमा वरिष्ठ विद्वान् ठाकुरलाल मानन्धरले एक भेटमा लेखकलाई ग्रीसका राजकुमार सिकन्दर देशविजयको अभियानका क्रममा भारत आउँदा 'मिल्यान्डर' हरूलाई युद्धध्वजा बोकाई अघि लगाएर आएका र मिल्यान्डरहरूले युद्धसम्बन्धी नापनक्सा, योजना, कौशल इत्यादिमा आफ्ना स्वामीलाई सघाउने गरेका कुरा बताउनुका साथै ग्रीस फर्कनुभन्दा अगाडि सिकन्दरले मिल्यान्डरहरूको एक समूह भारतमा छोडिगएका र यही समूहको एक फ्याक कालान्तरमा नेपाल आई कालिगडको व्यवसाय गरी बसेको कुरा गर्नुभएको रहेछ । कुराको निचोडमा ठाकुरलाल मानन्धरले 'ती मिल्यान्डर भनेका हामी नै हौँ' भन्ने दाबी पनि गर्नुभएको रहेछ ।

हो, ग्रीक मिल्यान्डरहरू नामी योजनाकार र कुशल शिल्पी थिए । तर यता हाम्रा मानन्धरहरू पनि कम दर्जाका कालिगड थिएनन् । परन्तु शिल्प र कालिगडीका कुरा मिल्दैमा र ग्रीक भाषाको 'मिल्यान्डर' शब्द र हाम्रो 'मानन्धर' शब्दको उच्चारणध्वनि उस्तै-उस्तै हुन खोजेकै आधारमा हाम्रा मानन्धरहरू ग्रीक मिल्यान्डरहरूका वंशज हुन् भन्न मिल्दथ्यो र ? 'मानन्धर' विशुद्ध संस्कृत शब्द हो, 'मानं धरति इति' को समस्त (कम्पाउन्ड) रूप हो । यहाँ 'मानं' को अर्थ कुनै पनि प्रकारको नाप वा तौल गर्ने वस्तु, उपकरण वा संयन्त्र हो । जुनसुकै ठाउँका हुन्, हाम्रा मानन्धरहरू शिल्पी हुन्, कालिगड हुन्, प्राविधिज्ञ हुन् । उनीहरू जात्रामात्रा र चाडपर्वहरूमा तेलबत्ती सजाउँदथे, रथ बाँढ्थे, लिङ्गो उभ्याउँदथे ।

तेलको उत्पादन गर्ने कोललाई नेपालभाषामा 'सा:' भनिन्छ । 'सा:' मा काम गर्ने वा 'सा:' को स्वामित्व-अधिकार राख्ने व्यक्तिलाई 'सायमि' अथवा 'साल्मि' भन्नु भाषिक दृष्टिले स्वाभाविकै हो । यहाँनेर लेखकले मानन्धरहरूलाई सायमि, साल्मि भनी उल्लेख गरिएको ने० सं० ७२० को ताडपत्र आफूसित मौजुद रहेको दाबी गर्नुभएको छ ।

**९. बनेपामा गुंलाधलं :**

बनेपाका बौद्धधर्मानुयायीहरू ऋतुअनुसार आफ्ना धार्मिक परम्पराहरूको विधिपूर्वक पालना गर्दै आएका छन् । बनेपालीहरूले आस्था र श्रद्धापूर्वक मान्ने धार्मिक परम्पराहरूमा गुंलाधर्म एक हो । श्रावण शुक्ल प्रतिपदादेखि भाद्र शुक्ल प्रतिपदासम्मको महिनादिनलाई नेपालभाषामा गुंला (वन गई धर्म गर्ने महिना) र गुंलाभर गरिने व्रतलाई 'गुंलाधर्म' भनिन्छ ।

बनेपाक्षेत्रमा गुंलापर्व आफ्नै किसिमको छ । यसैले यहाँका वासिन्दाहरूको सामाजिक, सांस्कृतिक जीवनमा एक विशिष्ट स्थान ओगटेको छ ।

**१०. बनेपाकी चण्डेश्वरी र पशुपतिनाथ :**

पुस्तकको दसौँ यो लेख पशुपतिनाथसित बनेपालीहरूको बेग्लै किसिमको सम्बन्ध रहेको र ने० सं० ६२२ देखि केही पछि कुनै संन्यासीले बनेपाका मोहनसिं मानन्धरलाई एकमुखे रुद्राक्ष दिएको प्रसङ्गबाट सुरु गरिएको छ । त्यसपछि एकमुखे रुद्राक्षको विशिष्टताको वर्णन आउँछ । अनि चण्डेश्वरीका भक्त उनै मोहनसिंले देवीदेवताहरूबाट राँगाको सुनको टाउको प्रसाद पाएपछि उनले त्यो सुन खर्च गरी माई चण्डेश्वरीलाई सुन्दर मुकुट र



पशुपतिनाथलाई कवच तयार गराई चढाएको वृत्तान्त प्रस्तुत गरिएको छ । काठमाडौँका ११ घर मानन्धरहरूले पशुपतिनाथलाई अखण्डदीप चढाउन प्रतिवर्ष पुरानो कुरुवाबाट भरेर ३६ कुरुवा तेल चढाई त्यसको भर्पाई लिने गरेको र बालाचतुर्दशीको भोलिपल्ट ती मानन्धरहरूले एकमुखे रुद्राक्षको दर्शन पाउने गरेको प्रसङ्ग उल्लेख गरिएको छ ।

**११. बनेपाका एक बहुमुखी प्रतिभा :**

यो लेखका पात्र लेखकका पिता मोहनलाल खिँ मानन्धर हुनुहुन्छ । यो लेख कुराकानीबाट सुरु गरिएको छ । मोहनलाल र राजदासबीच भएको कुराकानीबाट २००७ सालमा नेपालमा प्रजातन्त्रको अभ्युदय हुनअगाडि मोहनलाल राजनीतिक क्रान्तिमा सक्रिय हुनुहुन्थ्यो भन्ने कुरा स्पष्ट झल्किन्छ । पर्चा छर्ने कुरो, कलकत्ता र सीतामढीको नाम, नेपाली काङ्ग्रेसका नेता गणेशमान सिंह र सुन्दरराज चालिसे आदि नामहरूको उल्लेख अनि बनेपाको घोगेचौरमा राणासरकारको फौजद्वारा घेराबन्दी र मोहनलालको घरको खानतलासीको प्रसङ्गबाट यस कुराको पुष्टि हुन्छ ।

मोहनलाल खिँ समाजसेवी हुनुहुन्थ्यो । उहाँले बनेपाको साल्मीसमाजबाट अनावश्यक भोजभतेर हटाइदिनुभयो । उहाँ बैदाङ्गी (वैद्यकर्म) मा पनि दखल राख्नुहुन्थ्यो । सुत्केरी हुन गाह्रो परेका महिलाहरूलाई पानी खुवाएर सजिलो पारिदिनुहुन्थ्यो । ज्योतिषी पनि हुनुहुनाले उहाँ ग्रहगोचरका प्रभावबाट पर्न आउने शुभाशुभ बताइदिने, जग हाल्ने साइत हेरिदिने र व्रतबन्ध, विवाह, इहि इत्यादिका लागि शुभमुहूर्त निकालिदिने आदि काममा पनि पोख्त हुनुहुन्थ्यो । आफ्नो जीवनावधिमा बनेपासहरभित्र बनेका ७५ प्रतिशत घरहरूको शिलान्यास उहाँकै निर्देशनमा सम्पन्न भएका थिए । चिना हेरे-पढेर सम्बन्धित व्यक्तिको भूत, वर्तमान र भविष्य बताइदिनुहुन्थ्यो ।

लेखको पुछारतिर मोहन दुवालको भनाइ उद्धृत गर्दै लेखकले आफ्ना बुवा मोहनलाल खिँले 'लायकु साः दापाखल', काठमाडौँबाट स्वर्णपदक प्राप्त गर्नुभएको कुरो लेख्नुभएको छ ।

अन्त्यमा, बेलाबेलामा लेखिएका आफ्ना लेखहरूको सँगालोलाई पुस्तकाकारमा प्रकाशित गराई लेखक ज्ञानकाजी मानन्धरले विशेषत: बनेपाका जनतालाई ठूलो गुन लगाउनुभएको छ । पुस्तकमा परेका लेखहरूले बनेपाक्षेत्रका सामाजिक, ऐतिहासिक, धार्मिक, सांस्कृतिक, पौराणिक आदि विविध पक्षहरूको याथार्थिक वर्णन प्रस्तुत गरेर बीचबीचमा अनुसन्धानकर्ताहरूलाई भित्रैदेखि कुतकुती लगाइदिनुभएको छ ।

लेखहरूमा तथ्य र वस्तुगत विवरणहरू खचाखच छन् । कहीँ-कहीँ लेखनमा साङ्गठनिक कमजोरी र वर्णनहरूमा तार्किक संयोजन (लजिकल सिक्वेन्सिङ) को अभाव खट्किन्छ, अन्यथा प्रस्तुतीकरण राम्रो छ । नेवारी नामहरूका हिज्जेहरू बनेपाली परिवेशका छन् । यी हिज्जेहरूले वर्णनहरूको स्वाभाविकता बढाएका छन् । भाषा र शैली उपयुक्त छ ।

ज्ञानकाजी मानन्धरबाट यसपछि अझ गहकिला लेखहरू रचिने, प्रकाशित हुने अपेक्षा राख्तै उहाँको लेखन-प्रतिभाले अझ बढी प्रस्फुटन पाओस् भन्ने कामना गर्दछु ।

**● वेदनाथ रेग्मी**

**२०६३ मङ्सिर २८**
**बृहस्पतिबार**



# भूमिका

पूर्व, उत्तर र दक्षिणपट्टि जङ्गलले घेरिएको र चारैतिर पहाड-पर्वत भएको सानो उपत्यकामा अवस्थित बनेपासहर सुन्दर र रमणीय छ । नजिकैका डाँडा र पर्वतहरूमा रहेका स-साना बस्तीहरूले गर्दा यो सहर झन् राम्रो र आकर्षक देखिन्छ । ती बस्तीका मानिसहरू बनेपातिर आएर आफूसँग भएका मालसामान बिक्री गर्ने र यहाँ भएका मालसामान किनेर लाने गरेकाले यहाँको व्यापारमा चहलपहल बढेको छ । झन् काभ्रेपलाञ्चोक जिल्लाको मूल बाटोको बीचमा अवस्थित भएको कारणले यो सहर जिल्लाको व्यापारिक केन्द्र नै बनेको छ । त्यसैले यो सहरलाई वनेपुर (व्यापारको सहर) भनिएको हो । यसका चारैतर्फका गाउँ-सहरका लागि यो राजधानी नै कहलिएको कुरो बनेपा पुलबजारको ने० सं० ८७१ सालको शिला-अभिलेखले देखाउँछ ।

बनेपाको संस्कृति उच्च छ, चाडपर्वहरू हेर्नलायकका छन् र रीतिरिवाज अर्थपूर्ण छ । यो सहरमा पहिले नेवारहरूको मात्र बस्ती थियो । यहाँको पहिलेको सामाजिक संरचना अत्यन्तै वैज्ञानिक किसिमको थियो । यो सहर आठ गणेशले परिवेष्ठित थियो । आठ गणेशका आठवटै दाफाभजनहरू हुनुका साथै भोलाखागणेश, दक्षिणकाली, थानपतिनारायण, बहिल, भीमसेन आदि देवीदेवताहरूसँग सम्बन्धित अरू दाफाभजनहरू पनि थिए । तर हाल तलापुखुगणेश, थाछुगणेश र प्वाकगणेशका दाफाभजनहरू हराइसकेका छन् । अझ अरू कुनै-कुनै भजनहरू लोप हुने स्थितिमा छन् । अतः बनेपाको संस्कृति-संरक्षणमा मानिसहरूको ध्यान जानु जरुरी भइसकेको छ ।

बनेपाको लाय्कुदरबार, थानपतिनारायण, बहिल, स्वधा, दक्षिणकाली, वकुटोलको बाहाः, भोलाखाटोलको क्वाठ आदि विषयहरूमा अनुसन्धान गरिए बनेपाका धेरै महत्त्वपूर्ण ऐतिहासिक र सांस्कृतिक तथ्यहरू पत्ता लाग्ने थिए । मलाई लाग्छ, भविष्यमा इतिहास र संस्कृतिमा अभिरुचि राख्ने विज्ञहरूले यसका विषयमा अवश्यमेव लेख्नेछन् । कहँ, पोङा, धिमे, भुछ्या, मुहाली आदि विविध बाजासहित वैशाख १ गते यहाँ नववर्ष मनाउने, प्रतिवर्ष चण्डेश्वरीको

मुकुन्डोनाच हुने, करुणामय (मच्छिन्द्रनाथ) को रथयात्रा हुने, इन्द्रायणीको जात्रा हुने, ञन्यापुन्हिमा यमद्यः स्थापना गर्ने, माघ महिनामा बनेपादेखि चण्डेश्वरीसम्म सुतेर गुड्दै जाने (सिलामरी तुलेगु) आदि पर्वहरू हराइसकेका छन् । सीगुठी र खगुठीका मानन्धरहरूले बनेपामा नवदुर्गा ल्याउनुभन्दा केही दिनअगाडि धनेश्वरसमीप सिपाख्यःमा जाँडको घ्याम्पो (भैरवको प्रतीक) दुईजनाले बोकेर कहँ, मुहाली, पोङा, नाय्‌बाजासहित सिकाक्वः जाने चलन लोप भइसकेको छ । उहिले सिकाक्वः नगएसम्म नवदुर्गालाई बनेपामा ल्याइँदैनथ्यो । सिकाक्वःमा अर्थपूर्ण संस्कृतिको विविधता थियो । यहाँका धेरै पाटीहरू निजी भइसकेका छन् । ९९ वटा इनारहरूमध्ये धेरै नै गायब भइसकेका छन् । ढुङ्गेधाराहरू नाम मात्रका छन् । ननी (चोक) हरूलाई साँगुरो पारिँदैछ । डबलीका रूपहरू बिग्रिसकेका छन् । अतः बनेपाको सांस्कृतिक सम्पदाको संरक्षणमा चासो राख्ने मानिसहरू अबको बनेपालाई चाहिएको छ ।

पूर्वमध्यकालसम्म पर्खालले घेरिएर आठ ढोकामा आठ गणेशको स्थापना गरिएको यो बनेपामा जनसङ्ख्यावृद्धि र बसाइँसराइको कारणले चारैतिर बस्ती विस्तार भएकोले यी आठ गणेश अब सहरको बीच भागमा पर्न आएका छन् र धनुषाकारको बनेपाको स्वरूप अकै बनिसकेको छ । आषाढ महिनामा खेतको रोपाइँ सकिएपछि गठामुग चह्रे (घण्टाकर्ण) अगावै सिनाज्या बेंकेगु (असारको समयमा रोपाइँ गर्दा जानी-नजानी कीराहरू मारेबापत आफूलाई चोख्याउने काम) पनि अचेल धेरै परिवारहरूले विधिवत् रूपमा गरेको देखिँदैन । नेवारजातिका आ-आफ्ना समूहले विधिपूर्वक गर्नुपर्ने यस्ता रीतिरिवाजहरू धमाधम लोप हुँदै गइरहेका छन् । पर्वपर्वमा गरिने परम्परागत कार्यहरूमा आ-आफ्नै किसिमका अर्थ लुकेका छन्, तिनीहरूले आ-आफ्नै प्रकारका संस्कृति बोकेका छन् । तर तिनीहरूको लोप हुने खतरासँगसँगै जातीय मौलिक परिचय र अस्मितासमेत लोप हुने खतरा बढिरहेको छ ।

हालको यस्तो अवस्थामा बनेपाको संस्कृतिसम्बन्धी केही विषयहरूलाई लिएर मैले यो पुस्तक तयार गरेको छु । यसभित्र उल्लिखित केही कुराहरू लोप भइसकेका छन् भने केही कुराहरू लोप हुन लागेका छन् । मुकुन्डो लाएर ३२ पात्रहरू भई नाचिने बनेपाकी देवी चण्डेश्वरीको नाच लोप भइसकेको १०८ वर्ष भइसक्यो । यो मुकुन्डोनाच अर्थपूर्ण र सनसनीपूर्ण थियो भन्ने कुरा मैले आफू सानै छँदा सुनेको थिएँ । यसलाई पुनर्जीवित गर्नुपर्ने थियो र गर्न सकिएको भए बनेपाको एउटा महत्त्वपूर्ण संस्कृति जीवन्त रहिरहने थियो । बनेपाको देशपूजाको महत्त्व पनि कम छैन । यो पनि पहिलेजति विधिपूर्ण हुन छोडेको देखिन्छ । बनेपाका विविध देवीदेवताहरूमा गरिने यो देशपूजा उहिले



अत्यन्तै विधिपूर्ण थियो भनी बूढापाकाहरू भन्दछन् । बनेपाको जालुद्योपर्व पनि मुस्किलले चलिरहेको छ । यो पर्व चलाउने गुठीयारहरू थिए । गुठीका सामानहरू थिए । तर हाल सामानहरू सबै हराइसकेका छन् । गुठीयारहरूमध्ये धेरैले गुठी छाडिसकेका छन् । यसो हुनुको मुख्य कारण यसबाट गुठीयारहरूलाई कुनै फाइदा नहुनु हो कि भन्ने अनुमान गर्न सकिन्छ । जीवनको व्यस्तताको कारणले यस काममा यी व्यक्तिहरूको चासो हराएको पनि हुनुपर्दछ । जालुद्योजात्रा चलाउनेहरूबाट 'अब यो वर्ष (वि० सं० २०६३ साल) मात्र चलाउने' भन्ने कुरा सुनिन्छ । साउन महिनामा गरिने बौद्धव्रत (धलं) को पनि उस्तै अवस्था छ । यसको पनि विधि ठूलो छ । टोलभरिका युवायुवती र केटाहरू महिनाभरि यसका लागि लागिपर्नुपर्दछ । यो धेरै खर्चिलो पनि छ । त्यसमा पनि पुराना बाजा (नौबाजा) बजाउन जान्नेहरू अब त्यति छैनन् । बाजा सिकाउनेतर्फ कतैबाट प्रोत्साहन र व्यवस्था छैन । बाजा बजाउनेहरू नै नभएपछि यो धलं लोप हुने नै भयो । पुरानो प्रविधिबाट तेल उत्पादन गर्ने बनेपाका मानन्धरहरूका कोलहरू हराइसकेका छन् । कोललाई बिगारेर मानिसहरूले कोल भएका ठाउँहरूमा घर बनाई बसोवास गरिसकेका छन् । उहिले यसको विधि के थियो, यसको रूप कस्तो थियो आदि कुराहरू पछिका पुस्ताहरूलाई थाहा हुनेछैन । धेरैजसो यस्ता विषयहरूलाई लिएर केही ज्ञान होला कि भन्ने हेतुले मैले यो पुस्तक लेखेको हुँ ।

बनेपा मेरा जन्मस्थल हो । यहीँकै हावा, पानी, अन्न, माटो आदिले म हुर्किएँ । यहाँका विविध देवीदेवताहरूप्रति मेरो अगाध आस्था छ । यहाँ आकर्षक र अर्थपूर्ण संस्कृतिका विविध पक्षहरू छन् । यहाँका केही विषयहरूलाई लिएर लेखिएको यो मेरो पुस्तक मेरा लागि एक किसिमले बनेपाप्रतिको मेरो स्तुति हो । त्यसैले यो पुस्तकको नाउँ नै 'बनेपा-स्तवन' राखेको हुँ । यो नै बनेपाको गाथा हो, गायन हो । मेरा लागि यो नै बनेपाको स्तवन हो ।

'काभ्रे टाइम्स' का सम्पादक आर० एल० श्रमजीवीले मसँग आफ्नो साप्ताहिक पत्रिकाका लागि एक-दुईवटा लेखहरूका लागि अनुरोध गर्नुभएको थियो । मैले उहाँलाई केही लेखहरू छाप्नका लागि दिएको थिएँ । त्यसले गर्दा पनि यो पुस्तकका लागि केही लेखहरू बने । अरू पत्रिकाहरूका लागि पनि एक-दुईवटा लेखहरू लेखिदिएँ । यसरी छरिएका लेखहरूका साथमा अरू एक-दुईवटा लेखहरू थपेर यो पुस्तक प्रस्तुत गरेँ । यो पुस्तकमा हरि मञ्जुश्रीले भाषा-व्याकरण मिलाइदिनुभएको छ । उहाँ भाषाविशेषज्ञ हुनुहुन्छ । यसमा केही अभिलेखहरू पनि छन् । ती अभिलेखहरूलाई उतार्न र अनुवाद गर्न पाटनबाट बनेपासम्म आई छत्रबहादुर कायस्थले मलाई सहयोग गर्नुभयो । उहाँ

अभिलेख-विशेषज्ञ हुनुहुन्छ । आफूसँग नभएको जालुद्यो र बनेपाको तस्बिर मैले भुवन भोछिभोयाबाट पाएँ । संस्कृतिमा ज्यादै अभिरुचि राख्ने विद्वान् लेखक शुक्रसागर श्रेष्ठले भक्तपुर सुकुलढोकाका ख्यातिप्राप्त कलाकार काजीमान कर्माचार्यद्वारा चित्रित वि० सं० १९९६ सालको चण्डेश्वरीमन्दिरको सुन्दर चित्र मलाई उपलब्ध गराइदिनुभयो । ने० सं० ६२२ सालमा बनेपामा घटित मोहनसिं मानन्धरसँग सम्बन्धित घटनालाई लिएर देवीदेवताका गणसहितको एउटा सुन्दर चित्र सन् १९८२ मा मेरो पुस्तक Nepal - Legend and Drama का लागि नेपालका ख्यातिप्राप्त कलाकार चन्द्रमान मास्केले श्याम/श्वेत रूपमा तयार पारिदिनुभएकोमा त्यही चित्रजस्तै एउटा राम्रो रङ्गीन चित्र मेरा विद्यार्थी नेपालसुधार भैलले तयार पारिदिनुभयो । त्यो चित्र पनि मैले यस पुस्तकमा समावेश गरेको छु ।

एकपटक वेदनाथ रेग्मी गम्भीरमान मास्केका साथ मकहाँ आउनुभएको थियो । त्यस बखत 'काभ्रे टाइम्स' मा प्रकाशित 'बनेपाका अष्टविनायकहरू' शीर्षकको मेरो लेख उहाँले देख्नुभयो र पढ्नुभयो । उहाँ अङ्ग्रेजी साहित्यका विद्वान् हुनुहुन्छ । उहाँ नेपाली संस्कृतिका विज्ञ पनि हुनुहुन्छ । त्यस बखत मैले उहाँलाई मेरा सबै लेखहरू एकपटक हेरिदिन आग्रह गरेँ । उहाँले मेरा सबै लेखहरू पढेर धेरै परिश्रमसाथ राम्ररी सच्याइदिनुभयो र पुस्तकका लागि एउटा राम्रो भूमिका पनि लेखिदिनुभयो ।

नेपालभाषा आकादेमीका कुलपति वरिष्ठ एवं ख्यातिप्राप्त संस्कृतिविद् सत्यमोहन जोशीसँग आकादेमीको बैठकलगायत अन्य कार्यक्रमहरूमा मेरो बरोबर भेट हुने गर्दछ । उहाँ मलाई आफ्नै भाइसमान माया गर्नुहुन्छ । उहाँसँग एकपटक यो पुस्तकका लागि एउटा भूमिका लेखिदिन अनुरोध गरेँ । उहाँले मुसुक्क हाँसी मेरो अनुरोधलाई स्वीकार गर्नुभयो र अत्यन्त व्यस्त हुँदाहुँदै पनि एउटा गहकिलो भूमिका लेखिदिनुभयो ।

यसरी मेरो यो पुस्तक तयार पार्नका लागि प्रोत्साहन र सहयोग गर्नुहुने 'काभ्रे टाइम्स' का सम्पादक आर० एल० श्रमजीवी, छत्रबहादुर कायस्थ, शुक्रसागर श्रेष्ठ, भुवन भोछिभोया, नेपालसुधार भैल, हरि मञ्जुश्री, वेदनाथ रेग्मी र लोकसंस्कृतिका ज्ञाता सत्यमोहन जोशीप्रति आभार व्यक्त गर्दछु । साथै, यो पुस्तकका लागि अक्षराङ्कन गरिदिने गीता मञ्जुश्री र पुस्तक-प्रकाशन गरिदिने मेरी श्रीमती सुखवेती मानन्धरलाई पनि धन्यवाद छ ।

**● ज्ञानकाजी मानन्धर**

**९ पुस २०६३**
**बनेपा, नालादोबाटो**
**दूरभाषाङ्क : ०११-६६११८४**



# विषयक्रम

# बनेपा



बनेपा
तस्बिर : भुवन भोछिभोया

**बनेपाको परिचय :**

पूर्वमा रक्तचन्दनवन भनिने चण्डेश्वरीजङ्गल, उत्तरमा थागुजङ्गल र दक्षिणमा कोगुजङ्गलको पृष्ठभूमिमा काठमाडौँबाट २६ कि० मि० पूर्व समुद्री सतहदेखि ४,८०० फिट उचाइमा रहेको एउटा सानो र रमणीय उपत्यकामा अवस्थित प्राचीन नगरी बनेपा एक महत्त्वपूर्ण ऐतिहासिक र धार्मिक क्षेत्र हो ।

पूर्वमा चण्डेश्वरीखोला र पश्चिमबाट दक्षिण हुँदै बग्ने पुण्यमाताखोला अनि पहाड-पर्वतले घेरिएको र करिब ५.३१ वर्ग कि० मि० परिधिको यो

सहरलाई 'विनयापुरी' भनी पुराना-पुराना ताडपत्रहरूमा उल्लेख गरिएको छ। 'विनयापुरी' नामका अन्य अर्थहरू पनि होलान्, तर यहाँ अर्थको प्रसङ्गमा एउटा तर्क प्रस्तुत गरिन्छ, जुन तर्क संभवतः तथ्यको नजिकै पुग्दछ। 'विनया' को अर्थ 'विनायक' (गणेश) हो र 'पुरी' को अर्थ 'सहर' हो। अतः प्राचीन बनेपालाई आठ गणेशले घेरेर निर्माण गरिएको हुनाले यो सहरको नामकरण 'विनयापुरी' भनी गरिएको हुनुपर्दछ। ने० सं० ४८५ सालमा बनेपाका राजा जयार्जुनको समयमा बनेपाका मानन्धरहरूको 'सीगुठी' का विषयमा लेखिएको ताडपत्रमा पनि बनेपालाई 'विनयापुरी' भनी उल्लेख गरिएको छ।

उहिले अष्टमातृका, अष्टभैरव, अष्टश्मशान अथवा अष्टदिक्पालहरूले परिवेष्ठित गराई देशनिर्माण गर्ने गरिन्थ्यो। त्यसैअनुरूप बिघ्नबाधा हटाउने हेतुले आठ दिशामा आठ गणेशहरूको स्थापना गरी यो सहरको निर्माण गरिएको छ। साथै, आठ पाटी, आठ पोखरी र आठ ढोकाहरूद्वारा परिवेष्ठित गराइएको यो सहरलाई वर्णिपुर, बनेपुर, बनेकापुर, व्यनेपे, वनियुप्य पनि भनी उल्लेख गरिएको पाइन्छ। नेवारहरूको समुदायमा यो सहरलाई भोंत या भोदे पनि भन्ने गरिन्छ। प्राचीन कालदेखि भोट (तिब्बत) सँग यसको राम्रो र बलियो व्यापारिक सम्बन्ध भएकाले यसलाई भोंत या भोदे भनिएको हुनुपर्छ। हुन पनि काभ्रे जिल्लाका ठूला-ठूला सहरहरू (जस्तै : साँगा, नाला, धुलिखेल, चौकोट, श्रीखण्डपुर र पनौती) का बीचमा अवस्थित यो बनेपा काठमाडौँ उपत्यकादेखि बाहिर पूर्वी भेगको व्यापारिक केन्द्र हो। नेवारीमा 'बने' शब्दले 'व्यापार' भन्ने बुझाउँछ र 'पा' ले 'देश' अथवा 'बस्ती' भन्ने बोध गराउँछ। त्यसैले सातवटा मूल सडकको बीचमा अवस्थित यो सहर पुर्खौंदेखि नै व्यापार गर्दै आएका व्यापारीहरूको थलो हो।

किराँतकालदेखि बस्तीका रूपमा विकसित हुँदै आएको यो क्षेत्र उत्तरप्राचीनकालदेखि नै राजनीतिक, आर्थिक, शैक्षिक आदि क्षेत्रमा पनि विकसित हुँदै आएको देखिन्छ। सम्वत् ५२० को शिवदेव – अंशुवर्माको अभिलेखमा स्थानीय पाञ्चालीलाई नै स्वशासनको सबै अधिकार सुम्पिदिएको कुरा र सम्वत् ५१५ को बनेपाको शिवदेव – अंशुवर्माको अभिलेख र साँगाको अंशुवर्माको सम्वत् ३२ को अभिलेखबाट दुनियाँको दुःख बुझेर करमिनाहा गरी राजाहरूले बनेपालाई व्यापारक्षेत्रका रूपमा विकास गर्ने नीति अख्तियार गरेको खुल्न आउँछ।[1]

[1] लिच्छविकालका अभिलेख, ग्रन्थकार : धनवज्र वज्राचार्य, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, कीर्तिपुर, आषाढ २०३७



'गोपाल राजवंशावली' मा उल्लेख भएअनुसार मध्यकालीन नेपालमा बनेपाक्षेत्रले राजनीतिमा ठूलो भूमिका खेलेको मात्र होइन, बनेपालीहरूको अगुवाइमा देशको राजनीतिमा उलटपुलटसमेत हुन गएको पाइएको छ।[2]

**इतिहासमा वर्द्धनहरूको भूमिका** :

नेपालको राजनीतिक घटनाक्रममा प्रभावकारी भूमिका खेल्नेहरूमा बनेपाको रामवर्द्धनपरिवार अति महत्त्वपूर्ण थियो। त्यस बखतका शिलालेख, वंशावली, स्वर्णपत्र आदिमा जयसिंहराम वर्द्धन मात्र नभई उनैका पुस्ता रामवर्द्धनहरूको नै ठूलो गुणगान देखिन्छ। 'गोपाल राजवंशावली' मा पनि यी रामवर्द्धनहरूको चर्चा धेरै ठाउँहरूमा पाइन्छ। जयसिंहराम वर्द्धनका बाजे ज्योतिराम महामन्त्री थिए। त्यस बेला राजदेव (राजा ?) सँग मिली बनेपा पनि जितेको कुरा 'गोपाल राजवंशावली' मा उल्लेख गरिएको छ। ज्योतिरामका छोरा अनेकराम पनि महामन्त्री थिए।[3]

देवलदेवी र अनेकरामले आपसमा मिलेर मनिगल, कीर्तिपुर, बलम्बु आदि कब्जा गरेका थिए। त्यस बखत भारदारहरूले बखत-बखतमा विद्रोह गर्दा अनेकरामले धेरैपटक हतियार उठाई विद्रोहदमन गरेर राजालाई मद्दत गरेका हुँदा दरबारमा रामवर्द्धनपरिवारको शक्ति बढेको थियो। यसले गर्दा सानैदेखि राजकुमार जयार्जुनदेव र अनेकरामका छोरा जयसिंहरामका बीचमा राम्रो सम्बन्ध कायम भएको थियो।

अनेकराम बनेपाली थिए। उनको मृत्यु वि० सं० १४१३ मा भएको थियो। त्यस बखत पूर्वी भेगमा शासन चलाउने केन्द्रस्थल (राजधानी) बनेपा थियो। अनेकरामका छोरा जयसिंहरामको जन्म पनि बनेपामा नै भएको थियो। पछि जयसिंहराम पनि महामन्त्री भए। तर वि० सं० १४२९ मा स्थापित इटुमबहालको शिलालेखमा 'जयसिंहराम वर्द्धनस्य प्रतिपालित ......' भनी उल्लेख भएकाले काठमाडौँको शासनभार पनि उनैमाथि थियो भन्ने कुरा स्पष्ट छ। 'पूर्णिमा' (अङ्क ७) मा धनवज्र वज्राचार्यद्वारा लिखित 'शक्तिशाली भारदार रामवर्द्धनहरू' भन्ने लेखमा उल्लेख भएअनुसार यी रामवर्द्धनहरूको सङ्क्षिप्त वंशावली यसप्रकार छ –

[2] गोपाल राजवंशावली, पत्र नं० ३८, ५०, सं० धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल, नेपाल रिसर्च सेन्टर पब्लिकेसन, सन् १०८५

[3] गोपाल राजवंशावली, पत्र नं० ५१, ऐ० ऐ०




वि० सं० १४११ मा जयस्थिति मल्ललाई भक्तपुरमा भित्र्याइयो । केही समयपछि राजकुमारी राजल्लदेवीसित उनको विवाह भयो । त्यसपछि जयस्थिति मल्ललाई नेपालका राजा भनी घोषणा गरियो । 'यसरी बाहिरबाट आएको व्यक्तिलाई हामी राजा मान्दैनौं, जयार्जुनदेव नै राजा हुनुपर्दछ' भनी पूर्वी क्षेत्रका सबै जनताको नेतृत्व गरी जयसिंहरामले घोर विरोध गरे, ४-५ वर्षसम्म सङ्घर्ष गरिरहे । त्यसै बखत जयार्जुनदेवको मृत्यु भयो र जयस्थिति मल्लले पनि जयसिंहरामलाई हातमा नलिईकन शासन राम्ररी चलाउन नसकिने देखेर उनलाई ठूलो पद दिई देशको शासन-व्यवस्था चलाउन थाले । आफ्ना राजाको स्वर्गारोहण भएकाले, जयसिंहरामले पनि जयस्थिति मल्ललाई मद्दत गर्ने वचन दिए । जयसिंहरामका सन्तान थिएनन् । रामवर्द्धनहरूको शक्ति ठूलो छँदै थियो । बनेपाअन्तर्गत पलाञ्चोकका राजा जयसिंहराम वर्द्धनका भतिजा शक्तिसिंहराम वर्द्धनलाई चीनका सम्राट् ताइमिङले ने० सं० ५३५ सालमा 'महाराजा' मानी फरमानपत्र पठाएका थिए ।[४]

जयसिंहराम राजनीतिज्ञ, कूटनीतिज्ञ तथा धर्ममा आस्था राख्ने महान् व्यक्ति थिए । ने० सं० ५२१ को पनौती इन्द्रेश्वरमहादेवको मन्दिरभित्रको स्वर्णपत्रमा जयसिंहराम (जसले जयार्जुनदेवको पुष्पाभिषेक र जयस्थिति मल्लको पट्टाभिषेक गरे) ले इन्द्रेश्वरमहादेवको हाताभित्र तुलानारायण स्थापना

[४] परराष्ट्र मन्त्रालयबाट प्रकाशित अभिलेखालयमा सङ्कलित बट्टा नं० १५ पत्र नं० १३९



गरी अनेक धर्मकर्म गरेका थिए । त्यस स्वर्णपत्रमा जयसिंहरामको व्यक्तित्वको बखान गरिएको छ ।[५]

**उत्कृष्ट कलाकृति :**

बङ्गालका राजा सुल्तान समसुद्दीनको आक्रमणको कारण नेपालमा धेरै मूर्तिहरू र देवालयहरू ध्वस्त भएका थिए । तिनमा भगवान् पशुपतिनाथको मूर्ति पनि परेको थियो । यिनै पशुपतिनाथको पुनःस्थापना ने० सं० ४८० (वि० सं० १४१७) मा जयसिंहराम वर्द्धनले गरेका थिए ।[६]

पनौतीको इन्द्रेश्वरमहादेव पनि ने० सं० ४१४ (वि० स० १३५१) मा बनेपाका प्रभावकारी राजकुमार जयादित्य (वि० सं० १२३८ – १२९३) की विधवा राजकुमारी विरमदेवीले बनाएकी हुन् ।[७]

बनेपाका उत्कृष्ट कलाकृतिमध्ये एक उत्कृष्ट कृति लायकुदरबारमा स्थापित सूर्यमूर्ति हो । सो सूर्यमूर्तिमा सात रङ्गका प्रतीक सात घोडाहरूले सूर्यरथ तानेका छन्, अरुण सारथि छन्, धनुषधारी दुइटी स्वास्नीमानिसहरू बाण हान्दैछन् र अन्धकारका प्रतीक दुई दैत्यहरू दुईतिरको कालिमातर्फ दौडिरहेका छन् । एउटा राम्रो ढुङ्गामा अति कलात्मक ढङ्गले कुँदिएको यो सूर्यमूर्ति कलापूर्ण मात्र छैन, यसको अर्कै विशेष महत्त्व पनि छ । उहिले कुनै पनि कलाकारहरूले कलाकृतिमा आफ्नो नाम अङ्कित गर्न पाउँदैनथे । त्यसैले कलाकारको नाम अङ्कन भएका कलाकृतिहरू त्यति देखिएका पनि छैनन् । तर वि० सं० १४५० (ने० सं० ५१४) मा प्रतिस्थापित यो सूर्यमूतिको पादपीठमा दुईजना कलाकारको नाम उल्लेख गरिएको छ । तिनीहरू दाजुभाइ थिए । दाजुचाहिँ राज मुल्मी थिए र भाइचाहिँ जयत मुल्मी थिए ।[८]

अभिलेखको केही अंश यसप्रकार छ :

"श्रीमत् श्रीजयसिंहराम राज्ञस्यानुज श्रीमद् श्रीमदनरामया पालित श्री वर्णिकापुर स्थाने । संस्थापिता आदित्यमूर्ति देवता ......"

[५] पनौतीको स्वर्णपत्र, 'स्मारिका' पेज नं० ७५, प्रकाशक : बनेपा नगरपञ्चायत
[६] गोपाल राजवंशावली, पत्र नं० ५९, ऐ० ऐ० नं० २
[७] (क) Nepal : Valley of Gods, Gills Begwin
(ख) गोपाल राजवंशावली, पत्र नं० २७, ऐ० ऐ० नं० २
[८] नेपालको मध्यकालीन कला, ग्रन्थकार : मनवज्र वज्राचार्य, प्रकाशक : श्री ५ को सरकार, सूचना तथा प्रचार मन्त्रालय, सूचना विभाग

यस अभिलेखमा पनि जयसिंहरामलाई पनौती इन्द्रेश्वरमन्दिरभित्रको स्वर्णपत्रमा जस्तै 'राजा' भनी उल्लेख गरिनुका साथै उनैका भाइ 'मदनरामद्वारा प्रतिपालित' भनी वर्णन गरिएको छ । त्यसैले ती रामवर्द्धनहरूको प्रभुत्व र कीर्ति यस क्षेत्रमा रहिरहेको देखिन्छ ।

**सहर-विकासको इतिहास :**

काठमाडौँ उपत्यका ठूलो तलाउको रूपमा छँदा बनेपा एक सानो राज्यका रूपमा थियो भन्ने किंवदन्ती नभएको होइन । समय-समयमा यो एक स्वतन्त्र राज्यका रूपमा चलेको देखिन्छ । यक्ष मल्लका छोरा रण मल्लको शासनकालमा पनि बनेपा एक स्वतन्त्र राज्य नै थियो । एक समय बनेपाको क्षेत्र पूर्व दूधकोसीदेखि पश्चिम साँगासम्म र उत्तर साँगाचोकदेखि दक्षिण मेदिनाको जङ्गलसम्म फैलिएको वर्णन पनि नभएको होइन ।[९]

काठमाडौँ उपत्यकाको पूर्वपट्टिको व्यापार, शिक्षा, राजनीति आदि क्षेत्रमा बनेपासहरले मुख्य भूमिका खेलेको हुँदा यो सहर केन्द्रस्थल नै बन्न पुगेको थियो । यो नै यस क्षेत्रको राजधानी बन्यो । ने० सं० ८७१ मा बनेपा पुलबजारमा राखिएका दुईवटा अभिलेखहरूमा बनेपालाई 'राजधानी' भनी उल्लेख गरिएको छ ।[१०]

यहाँको स्वधाःटोलस्थित ने० सं० ६३७ को एउटा पाटीको अभिलेखमा विद्याश्रीपीठको बयान गरिएको छ । अतः त्यस बखतमा पनि शैक्षिक क्षेत्रमा बनेपा महत्त्वपूर्ण थलो थियो भन्ने कुरा स्पष्ट छ ।

'देवी चण्डेश्वरीको निर्देशन पाई राजा आनन्ददेवले कलिगत वर्ष ४१९७ मा चण्डेश्वरीपीठनजिक बनेपा, नेपालको प्रयागतीर्थनजिक पानवती (पनौती), नालाभगवतीनजिक नाला, नारायणनजिक धुलिखेल, धनेश्वरनजिक श्रीखण्डपुर, चकोरऋषिको आश्रमनजिक चौकोट र नासिकापीठनजिक साँगा' सहरहरू निर्माण गरे ।[११]

---

[९] भरतखण्ड और नेपाल, शेखरसिंह गौतम, प्रकाशक : मानव-जीवन-संस्थान (न्यास), गोरखपुर, सन् १९६९

[१०] स्मारिका, पेज नं० ४७ र ६६, प्रकाशक : बनेपा नगरपञ्चायत

[११] Nepal – History of the Country and the People, Daniel Wright, Cosmo Publication, 1983 A. D., New Delhi



सम्भवतः यो सहर पहिले एउटा टोल (भोलाखाटोल) मात्र थियो । पछि यसको क्षेत्र बिस्तारै ठूलो हुँदै गयो । आनन्ददेवले यसको आसपासमा छरिएका स-साना बस्तीहरू (जस्तै : नालाको दक्षिणपट्टिको सोगद्यो (सोमुद्यो ?), बनेपाको दक्षिणतिरको बहीकेवा, पश्चिमको क्वाताल, उत्तरको ग्वाछे (मगरगाउँनजिकको), पूर्वको भिनादे (भीमसेनस्थानको), बुडोल (वर्णिपुर) र चण्डेश्वरीगाउँ) लाई एकीकृत गरी यो सहरको निर्माण गरे भन्ने कुरा बूढापाकाहरू भन्ने गर्दथे । त्यसैले होला बौद्धधर्मावलम्बीहरू एक महिनासम्म व्रत बसी व्रतको अन्त्यतिर यज्ञ गर्नुभन्दा चार दिनअगाडि पहिले बस्ती बसालेका ती ठाउँहरूका विभिन्न थरीका बाजागाजासहित परिक्रमा गर्ने, पुरोहितले त्यहाँका विभिन्न देवीदेवताहरूको पूजा गर्ने र ती देवीदेवताहरूलाई साधना गरी ल्याउने चलन अद्यापि चल्दै आएको छ । यो कार्यलाई 'नपि वानेगु' भन्दछन् ।

यसका साथसाथै बनेपाका विभिन्न खलकका मानिसहरू आफ्नो देवालीपूजा यिनै ठाउँमा गएर गर्ने चलन पनि अहिलेसम्म चलिआएकै छ ।

**बहाल, चोक, पाटी आदि :**

यहाँ नौवटा बहालहरू {(जस्तै : इनाबहा, गःबहा, द्योबहा, काःबहा (कोलाबहा ?), तःबहा, ज्याबहा, थाबहा, कोबहा र सहरको मध्यभागमा अवस्थित मूबहा (बहिल)} छन् । यहाँ नौ ननी (चोक) हरू (जस्तै : नासननी, धलंछेननी, सुःननी, मनाछेननी, तःननी, द्योननी, ज्यासननी, सःननी र गाभाननी) छन् । पर्व-पर्वमा व्रत बस्नेहरू विधिवत् नुहाउने नौवटा ऐतिहासिक ढुङ्गेधाराहरू पनि छन् ।

स्वायांपुन्हिको दिन चण्डेश्वरीको रथजात्रा हुने बनेपाको केन्द्रीय स्थल स्वधाःमा स्वधाःयिति (तीनवटा ढुङ्गेधारा) छन् । यी धाराहरू कहिले बनाइए भन्ने कुरा उल्लेख भएको अभिलेख अहिलेसम्म पाइएको छैन । तर हालै प्राप्त भएको ने० सं० ५११ को एक ताडपत्रमा 'सोधार यिति' (तीनवटा ढुङ्गेधारा) भनी ती धाराको नाउँ उल्लेख भएको हुनाले कलिगत वर्ष ४१९७ मा राजा आनन्ददेवले छरिएका स-साना बस्तीहरूको एकीकरण गरी नयाँ बनेपाको निर्माण गर्दा त्यससँगसँगै सम्भवतः यी धाराहरूको निर्माण भएको हुनुपर्दछ भन्ने अनुमान गर्न सकिन्छ, किनभने बनेपाको निर्माण गर्दा ९ बाहाः, ९ ननी, ९९ इनार र ९ ढुङ्गेधाराको पनि निर्माण गरिएको थियो भन्ने जनश्रुति छ ।



**स्वधाःयिति (तीनधारा)**
**तस्बिर : प्रकाश मानन्धर**

यीबाहेक विभिन्न देवालयहरू, मठहरू, डबलीहरू, ९९ इनारहरू, पाटीहरू आदि पुरातात्त्विक महत्त्वका वस्तुहरू भएको यो सहरले प्राचीनता अँगालेको थियो । हाल आएर धेरै इनारहरू पुरिइसके, पाटीहरू भत्किएर हराइसके, कुनै-कुनै ढुङ्गेधाराहरू अलप भइसके ।

नेवारसमाजको संरचमा राम्रो छ र वैज्ञानिक किसिमले पनि व्यवस्था मिलेको छ । पहिले निश्चित ठाउँमा सार्वजनिक चर्पी हुन्थे, टोल-टोलमा चोकहरू, पाटीहरू, इनारहरू हुन्थे र मिल्ने ठाउँमा पोखरीहरू पनि निर्माण गरिएका हुन्थे । त्यसो हुँदा बस्तीहरू हावा, पानी, घाम (प्रकाश) र वातावरणको दृष्टिले सुविधायुक्त हुन्थे । केटाकेटीहरू चोकमा खेल्थे, बूढापाकाहरू पाटीमा बसेर गफसफ गरी फुर्सदको समय बिताउन पाउँथे । बनेपाको प्राचीन संरचनाको नक्सा हेर्दा आठ ढोकासँगै आठ गणेश, आठ पोखरी र आठ पाटी थिए । प्रत्येक गणेशस्थानको टोलका मानिसहरूका आ-आफ्ना छुट्टै भजन-खलक थिए । बिहान-बिहान ती पोखरीमा मुख धोई गणेशको दर्शन गर्ने चलन त्यस बखतका मानिसहरूको थियो । उनीहरू बेलुकी पाटीपौवाहरूमा बसेर बाजा बजाई देवीदेवताहरूको भजन गर्दथे ।



**भजनगीत र पुराना बाजाहरू :**

बनेपाका मानन्धरहरू नौबाजामा नामी थिए । उहिले यहाँ वाख्यः र कोभा भजन-खलकहरू थिए । पछि गएर कोभा भजन-खलक टुक्रियो र मानन्धर-समुदायमा तीनवटा भजन-खलक बने । अब ती तीनै भजन-खलकहरू कमजोर भइसके । बाजा बजाउनेहरू धमाधम घट्तै गए । नयाँ पिँढीका मान्छेहरूले बाजा बजाउन सिक्ने अग्रसरता देखाएनन् । बाँसुरी, खिँ, ढोलक, पछिमा, कहँ, पोँगा, नगरा, पस्ता, धिमे, भुछ्या, नापखिँ, कोँचाखिँ, टीँ, चटकी, दबदबु आदि बाजा बजाउन जान्ने व्यक्तिहरू खोजेर पनि नपाइने स्थिति आइसक्यो । भजनकापीहरू जीर्ण भइसकेका छन् । पुराना-पुराना अर्थ-अलङ्कारले भरिएका गीत-गाथाहरू हराउने भइसकेका छन् । ती गीतहरू पाएर पनि तिनीहरूको अर्थ बताउन सक्नेहरू नपाइने भइसकेका छन् । यस विषयमा समाज र सम्बन्धित निकायलाई कुनै चासो छैन । हाम्रो सम्पत्ति नै हाम्रो संस्कृति हो । अतः सबै वस्तुहरू हराइसकेपछि हामी सभ्य मानिस भए पनि संस्कृतिका धनी हुनेछैनौँ । सम्पत्तिमा जतिसुकै धनी भए पनि संस्कृतिमा गरिब हुनेछौँ । चण्डेश्वरी, जालुद्यो (भातको देवता) र अन्य पर्वमा कहँबाजा नभई नहुने बाजा हो । यो विधिविधानसम्बन्धी बाजा हो । अहिले कहँ बजाउने दुईजना पनि मानिसहरू नभएपछि अरू कसलाई बजाउन लगाउने ? कसले कसरी सिक्ने त्यस्तो विधिको बाजा बजाउन ? यो कुरा कोसँग सोध्ने ? मुहाली बजाउने मानिसहरू कहाँबाट ल्याउने ? यी सबै कुराहरू विचारणीय छन् । बनेपालीहरूले सोच्नुपर्ने भइसकेको छ ।

**भगवती चण्डेश्वरी :**

यहाँकी आराध्यदेवी चण्डेश्वरी हुन् । आफ्नो ठूलो तपस्याले गर्दा पुरुषशक्तिबाट ननासिने वर पाएको चण्डासुर दैत्यले तीनै लोक जिती सबैलाई अति दुःख दिएको हुँदा जगज्जननी माई चण्डेश्वरी प्रत्यक्ष भई उक्त दैत्यको वध गरेको बयान 'नेपालमाहात्म्य' मा उल्लेख भएको छ । 'देवमाला वंशावली' अनुसार चण्डेश्वरीको उत्पत्ति सत्ययुगको प्रथम पादमा भएको थियो । चण्डेश्वरीमन्दिर भत्काउने क्रममा प्राप्त भएको एउटा ताम्रपत्रमा वि० सं० १६६४ मा चँदुवा चढाइएको कुरा उल्लेख छ । चण्डेश्वरीसम्बन्धी ३९९ वर्षभन्दा पुरानो कुनै अभिलेख अथवा अन्य कुनै दस्तावेज अहिलेसम्म नपाइएकोमा स्वायांपुन्हिमा सुरु हुने दुईदिने चण्डेश्वरीजात्रामा ५ वटा बत्ती बाल्नुपर्ने कुरा ने० सं० ५११ सालको ताडपत्रमा उल्लेख भएको पाइएको हुँदा सम्भवतः यो ताडपत्रलाई चण्डेश्वरीसम्बन्धी हालसम्म प्राप्त भएको सबैभन्दा पुरानो अभिलेख भन्न सकिन्छ ।

चण्डेश्वरीसँग गाँसिएका धेरै किंवदन्तीहरू पनि नभएका होइनन् । तर एउटा जनश्रुति र वंशावलीहरूका अनुसार यहाँका धलंछेपरिवारका मोहनसिंह मानन्धरलाई बनेपाका राजा रण मल्लको शासनकाल (ने० सं० ६२२, सन् १५०२) मा देवी चण्डेश्वरीले राँगाको सुनको टाउको वरप्रसाद दिएकी थिइन् । त्यसैले मोहनसिंह धेरै धनी भए । उनले पशुपतिमहादेवलाई चढाएको एकमुखे रुद्राक्ष अद्यापि पशुपतिमा सुरक्षित छ ।[१२]

**परम्परागत जात्रा र नृत्यहरू :**

भनिन्छ, प्रतिवर्ष यहाँ हुने भैरव, काली, ख्याक, कवां, भुया (भूत) सहित ३२ गणको खिं, ढोलक, कनाल, तुरही आदि विविध बाजासहित हुने कुमारी (दागी) नृत्य अत्यन्तै रोचक तथा रोमाञ्चकारी थियो । यस नृत्यमा बनेपाका विविध जातिका मानिसहरूको सहभागिता हुन्थ्यो । छुट्टाछुट्टै खलकका मानिसहरू छुट्टाछुट्टै मुकुन्डो लगाएर नाच्ने गर्दथे । भनिन्छ, प्रधानखलकले भैरवको मुकुन्डो लाउने गर्दथे भने दुवालखलकले गणेशको मुकुन्डो लाएर नाच्ने गर्दथे । बाजा बजाउनेहरूमा यहाँ मानन्धरहरू पनि हुन्थे । सबै बनेपालीहरूको सहभागिता रहने यस्तो किसिमको सजीव संस्कृतिको नाट्य-प्रदर्शन टुटेको १०८ वर्ष भइसकेको छ ।[१३]

ज्येष्ठ शुक्लपक्ष षष्ठीका दिनमा कोभागणेशढोका र तुकंप्वःगणेशढोकामा बसी एक दलका युवकहरूले अर्को दलमाथि ढुङ्गा हानी खेल्ने गरिन्थ्यो । त्यो प्रथा श्रीस्कन्दस्वामीले राजा गुणकामदेवलाई निर्देशन गरेदेखि लागू भएको थियो । प्रधानमन्त्री जङ्गबहादुर राणाका पालामा सो ढुङ्गा हान्ने तमासा (खलं थ्वायेगु) हेर्दै गरेका बेला अङ्ग्रेज रेजिडेन्ट कोल्भिनलाई सन् १८७० मा ढुङ्गाले लागेदेखि उक्त प्रथा हटाइएको[१४] भए तापनि यहाँचाहिँ २००७ सालको क्रान्तिपछि मात्रै हटेको थियो ।

देवी चण्डेश्वरीको रथयात्राबाहेक यहाँ तुकंप्वःगणेश, नारायण र भीमसेनका पनि प्रतिवर्ष आ-आफ्ना पर्वहरूमा जात्रा हुन्छन् । अक्षयतृतीयाको दिन बोकखःजात्रा र करुणामयको तिकंपा राखी धान्यपूर्णिमा (योमह्रिपुन्ही) को

[१२] Nepal – History of the Country and the People, Daniel Wright, Cosmo Publication, 1983 A. D., New Delhi

[१३] स्व० मोहनलाल खिं मानन्धरको कथनअनुसार

[१४] Nepal – History of the Country and the People, Daniel Wright, Cosmo Publication, 1983 A. D., New Delhi



दिनमा गरिने अर्को रथयात्रा हटेको झन्डै १०३ वर्ष हुन लाग्यो । त्यस्तै, चैत्र मसान्तमा भक्तपुरमा जस्तै विविध बाजागाजासहित लिङ्गो उभ्याउने र इन्द्रजात्रापर्वमा इन्द्रको प्रतीक यमद्योचा उभ्याउने चलन पनि हराइसकेको छ । पौष मासको कृष्णपञ्चमीको दिन धनेश्वरमा ठूलो मेला लाग्दछ । माघ महिनामा बनेपाबाट चण्डेश्वरीसम्म सुतेर गुड्दै जाने (सिलामरी तुला वनेगु) चलन पनि अब हटिसकेको छ । अद्यापूर्णिमाका दिनको भोलिपल्ट मलामीबाजा (सीबाजा) बजाई भातले बनाएको देवता (जालुद्यो) को रथको जात्राको कथा रहस्यपूर्ण छ । यहाँ प्रतिवर्ष नवदुर्गाको नाच र प्रत्येक लगभग १२ वर्षको हिसाबमा श्वेतकालीकी छोरी कुमारीले दैत्यको वध गर्न नरदेवीगणको भावपूर्ण नृत्य लायकु डबलीमा प्रस्तुत हुने गर्दछ । यीबाहेक यहाँ विविध बाजासहित श्रावण मासमा गणेशपूजा, महादेवपूजा, भगवान्पूजा र कृष्णपूजा हुन्छन् । त्यस्तै गरी माथि र तल टोलका गरी दुईपल्ट कन्यापूजा पनि हुन्छ । कन्यापूजामा हजारौं कन्याहरू अति भव्य ढङ्गले बनेपाबजारका सडकका दुवै किनारामा बस्तछन् । त्यसबखत विविध बाजासहित श्रद्धालु भक्तजनबाट रिबन, चुरा, मिठाई, बिस्कुट, पुरी, स्वारी, दूध, दक्षिणा आदि वस्तुहरू चढाएर कन्याहरूको पूजा गर्ने चलन अत्यन्तै भव्य देखिन्छ । रामनवमीको दिन यहाँ हनुमानको पनि पूजा हुन्छ ।

**अनुसन्धानको खाँचो :**

सबै बनेपालीहरूको आस्थाको केन्द्र उग्रतीर्थस्थित उग्रतीर्थ-महादेवस्थलमा सबै मिली तीर्थस्थल बनाई अनुसन्धानकार्य गरेमा बनेपाको इतिहासमा अज्ञात कुराहरू पत्ता लाग्ने ठूलो सम्भावना छ ।

**(साभार : कन्या स्मारिका, प्रकाशक : सनातन कन्यापूजा प्रबन्ध समिति, बनेपा, २०५९)**

●

# बनेपाका अष्टविनायकहरू

हात्तीको जस्तो टाउको र मानिसको जस्तो शरीर भएका, निर्विघ्नताका प्रतीक गणेशलाई गणपति, वक्रतुण्ड, विनायक, एकदन्त, गजानन, लम्बोदर, भालचन्द्र, धूम्रकेतु आदि नामहरूले पनि पुकारिन्छ । पाञ्चायन देवता (गणेश, सूर्य, देवी, शिव र विष्णु) मा गणेशको अग्रपूजा हुने गर्दछ । सृष्टिको सुरुदेखि नै असुरहरूले बिघ्नबाधा उत्पन्न गर्ने-गराउने हुँदा बिघ्ननाशक गणेशको आवश्यकता महसुस गरी महादेव र पार्वतीको प्रयासबाट यी देवता प्रकट भएका हुन् ।

हाम्रो समाजमा व्रतबन्ध, विवाह, भीमरथारोहण (जङ्को), घरनिर्माण र जीवनका अन्य महत्त्वपूर्ण कामहरू प्रारम्भ गर्दा बिघ्नबाधा आइनपरून् भन्ने हेतुले सर्वप्रथम गणेशको पूजा गर्ने चलन छ । हाम्रा वरपर चोक, घाट, देवालय, सडकछेउ, घरको ढोका, चौतारा, पोखरीछेउ, ढुङ्गेधारापरिसर आदि ठाउँहरूमा गणेशका मूर्तिहरू प्रतिष्ठापित गरिएका पाइन्छन् । शिल्पकारहरूले धातु, ढुङ्गा, काठ, माटो आदि वस्तुहरूबाट यी देवताका मूर्तिहरू दुईदेखि सोह्र हातसम्मका बनाएका छन् र ती मूर्तिहरू स्थानक, आसीन र नृत्यमुद्राका छन् । चित्रकारहरूले बनाएका यी देवताका चित्रहरू पनि तिनै मुद्रा र त्यत्तिकै बाहु भएका छन् । गणेशको महिमाले नेपालमा मात्र नभई भारत, चीन, पाकिस्तान, बङ्गलादेश, श्रीलङ्का, जापान, कम्बोडिया, थाइल्यान्ड, इरान आदि मुलुकहरूमा पनि प्रसिद्धि पाएको छ ।

गणेशका शक्तिस्वरूपा सँगिनीहरू ऋद्धि र सिद्धि हुन् । यी सँगिनीहरूबाट शुभ र लाभ नामका मानसपुत्रहरू जन्मिए भन्ने मानिन्छ । विभिन्न ठाउँहरूमा साँढे, मयुर, गरुड, सिंह, शव र हात्तीमाथि गणेश आरूढ भएको पाइए पनि मूसोमाथि आरूढ गणेशका मूर्तिहरू बढी सङ्ख्यामा पाइन्छन् । त्यस्तै, गणेशले समाएका हतियारहरूमा वज्र, शक्ति, दण्ड, खड्ग, पास, अङ्कुश, गदा, त्रिशूल, पद्म, चक्र, बन्चरो आदि छन् । विद्या, ज्ञान, बुद्धि,



सिद्धि, कीर्ति, सीप, धन, स्त्री, पुरुष र सन्तानप्राप्तिका लागि यी देवताको आराधना गर्नेहरूमा हिन्दू र बौद्ध दुवै पाइन्छन् ।[1]

परापूर्वकालमा नेपालभित्र अष्टदिक्पाल, अष्टभैरव, अष्टश्मशान अथवा अष्टमातृकाले परिवेष्ठित गराई देश निर्माण गर्ने चलन थियो । यस्तै ढङ्गले चारैतिर छरिएर रहेका स-साना बस्तीहरू नाला र बनेपाबीचको सोमुदे, भिनादे (भीमसेनस्थान), वर्णिपुर (बुडोल), क्वाताल, बहीकेवा आदि क्षेत्रको एकीकरण गरी त्यसलाई राजा आनन्ददेवले कलिगतवर्ष ४११७ मा बनेपासहरको निर्माण गरी आठ पाटी, आठ पोखरी, आठ ढोका, आठ बहाल र आठ गणेशले परिवेष्ठित गराएका थिए । भनिन्छ, त्यतिखेर तीनत्वापो (बनेपाको उत्तर भाग आजाद मा० वि० नजिकैको स्थान) मा प्यागोडाशैलीको नौतले भगवतीमन्दिर थियो रे । सो ठाउँमा भुजङ्ग नाम गरेका साक्षात् नाग बस्तथे रे । त्यहींबाट पानीको मूल फुटेको र त्यहाँको पानी आठै गणेशमन्दिरका पोखरीहरूमा जाने गर्दथ्यो भन्नेहरू अद्यापि भेटिन्छन् । आठ गणेशका मन्दिरआसपास रहेका पाटीहरूमध्ये केही अझै अस्तित्वमा छन् । कुनै पाटीहरू व्यक्तिगत स्वार्थका कारण र कुनै पाटीहरू बाटो फराकिलो पार्दा विलीन भइसकेका छन् । नगरको चारैतिर घेरिएको ढुङ्गाको पर्खालको कुनै चिह्न नभए पनि ढोकाका अवशेषहरू अझै केही ठाउँमा देख्न सकिन्छ ।

बनेपा दक्षिणाभिमुख छ । दक्षिणदिशा शुभकार्यका लागि उचित छैन भन्ने जनधारणा छ । नेवारी परम्परामा सगुन लिँदा दक्षिणदिशातर्फ फर्केर लिने गरिँदैन । दक्षिणदिशाबाट बिघ्नबाधा आउन सक्ने हेतुले आठ दिशामा आठ विनायकले परिवेष्ठित गराएर बनेपाको निर्माण गरिएको छ । विनायकले घेरिएर निर्माण भएको यो देशलाई पुराना ताडपत्र र अन्य अभिलेखहरूमा 'विनायकपुरी' भनी उल्लेख गरिएका थुप्रै प्रमाणहरू छन् । त्यस बखत बनेपा ढुङ्गाको पर्खालले घेरिएको थियो । पर्खालभित्र पनि बनेपाभित्र गणेशका थुप्रै मूर्तिहरू छन् । बस्तीवृद्धिका साथसाथै ठाउँठाउँमा गणेशका मूर्तिहरू प्रतिष्ठापित भएका छन् । तर पनि भोलाखागणेश सबैभन्दा पुरानो हुनुपर्दछ । किनभने राजा आनन्ददेवले नयाँ बनेपाको निर्माण गर्नुभन्दा अगाडि बनेपा भोलाखा भन्ने एउटा सानो बस्ती मात्र थियो । सम्भवतः यही भोलाखाको आधारले बनेपालाई नेवारसमुदायमा भोदे (भोलाको देश) भनेको हुनुपर्छ ।[2]

---

[1] श्री गणेशाय नमः, जीतबहादुर मानन्धर, प्रकाशिका : श्रीमती तारादेवी मानन्धर, लायकुसाल, काठमाडौं, २०३१

[2] बनेपा एक सिंहावलोकन, ज्ञानकाजी मानन्धर, स्मारिका, आजाद मा० वि० बनेपा, २०३५

विष्णुप्रसाद सेवाचार्यको बगैँचामा सबै गणसहित एउटै शिलामा कुँदिएका भोलानाथको एक सुन्दर कलाकृति अद्यापि छँदैछ । भोलाखागणेश बनेपाका आठ गणेशमध्येमा पर्दैनन् । तर बनेपामा बर्सेनी हुने कन्यापूजा प्रारम्भ गर्दा यी गणेशको अग्रपूजा हुने गर्दछ । बनेपाको दक्षिणभाग कोसा भन्ने ठाउँमा एउटा अमूर्त गणेश छन् । यी गणेशलाई अष्टविनायकमध्ये एक हुन् भन्नेहरू पनि छन् । यी गणेशका मन्दिरको द्वार (ढोका) छैन । किंवदन्तीअनुसार एकपटक शत्रुहरूले बनेपामा आक्रमण गर्दा यहाँका राजा यही मन्दिरको द्वारबाट भागेकाले यहाँका बासिन्दाले यो द्वार भत्काइदिएका थिए । त्यसैले अहिले पनि कोसाटोलका मानिसहरूलाई 'ध्वाखा मदु कोसामि' अर्थात् ढोका नभएका कोसालका मानिसहरू भन्ने गरिन्छ । तर यी गणेश पनि आठ गणेशभित्र परेका देखिँदैनन् । यी गणेश पूर्वाभिमुख छन्, दक्षिणाभिमुख छैनन् ।

अब यहाँ बनेपाका आठ गणेशबारे चर्चा गर्ने प्रयास गरिएको छ ।

### १. तलापुखुगणेश :



तलापुखुगणेश
तस्बिर : प्रकाश मानन्धर

विद्युत प्राधिकरणको नजिकै रहेको तलापुखु (पोखरी) सँगै बनेपाको पश्चिम द्वारमा तलापुखुस्थानक गणेश छन् । पहिले यो पोखरी परिक्रमा गर्न चारैतर्फ फराकिलो बाटो थियो र यहाँ भजन गर्ने पाटी पनि थियो । तर अहिले यहाँ घरहरू बनिसकेका छन् । बनेपाको राजकुलसँग सम्बन्धित यस पोखरीबारे संस्कृतिविद् जीतबहादुर मानन्धरले लेख्नुभएको छ – "बनेपाको लायकुसँगै रहेको हुँदा 'तलेजुपुखुगणेश' बाट 'तलापुखुगणेश' हुन गएको मात्र हो कि भनी अन्दाज गर्न सकिन्छ ।



अर्को, नेपालको राजधानीबाट भोटतर्फ जाने सार्थवाहका मार्गहरूमध्ये बनेपा एक ..... बनेपा भई भोट जाने बाटाको प्रवेशद्वारमै रहेको हुँदा ..... बिघ्न हर्ने मार्गदेवका रूपमा पनि यी गणेशलाई मान्ने गरिएको थियो कि ?"[३]

भक्तपुरको नवदुर्गागण बनेपामा प्रवेश गर्दा सर्वप्रथम यही गणेशस्थानमा आइपुगेपछि देवदेवीका मुकुन्डो र वस्त्रहरू बिसाइन्छन् । त्यसपछि गथुहरूले कालो टीका लगाई आ-आफ्ना वस्त्र र मुकुन्डो लगाई प्रारम्भको बाजा बजाएर गंछी प्याखँ (गणनृत्य) सुरु गरी विधिवत् रूपमा बाजागाजासहित नगरप्रवेश गर्ने गर्दछन् ।

### २. प्वाक:गणेश :



प्वाक:गणेश
तस्बिर : प्रकाश मानन्धर

बनेपाको वायव्यकोण ज्या:सननीमा अवस्थित यी गणेशलाई प्वाक:गणेश भन्ने गरिन्छ । नेवारी शब्द 'प्वाक:' को अर्थ खोबिल्टो हो । खोबिल्टोमा रहेका हुनाले यिनलाई प्वाक:गणेश भनिएको हुनुपर्छ । यी गणेश अरूझैँ जमिनमाथि छैनन् । अहिले जमिनबाट तीन इन्चजति उठेका यी गणेश सम्भवत: पहिले खोबिल्टाभित्र नै हुनुपर्दथ्यो । नेवारसमुदायमा विभिन्न चाडपर्वमा जाँड, रक्सी, ह्याउँथ्वँ (विशेष किसिमको जाँड) को प्रयोग गरिन्छ ।

पहिले-पहिले बनेपालीहरू जाँड-रक्सी तयार गरेपछि पहिले यी देवतालाई चढाउन आउँथे । यी देवताको पाटी लोप भइसकेको छ भने पोखरी

[३] बनेपाका आठ विनायक, जीतबहादुर मानन्धर, कन्या स्मारिका, सनातन कन्यापूजा प्रबन्ध समिति, बनेपा, २०५९

रहेको ठाउँमा हाल वडाकार्यालय सञ्चालित छ । दक्षिणाभिमुख यी देवतालाई हाल सिमेन्टको गारो लगाएर पूर्वाभिमुख पारी राखिएको छ, जुन युक्तिसङ्गत छैन ।

ज्याःसननीमा अर्को एक गणेश पनि छन् । स्थानीय बासिन्दाहरू यिनलाई विश्कर्माका रूपमा मान्दछन् । प्रजापतिहरूको बाहुल्य रहेको यो ठाउँमा यी गणेशलाई सीपका देवता विश्वकर्माका रूपमा प्रतिष्ठापित गरिएको हुनुपर्दछ ।

### ३. थाच्छुगणेश :



**थाच्छुगणेश**
**तस्बिर : प्रकाश मानन्धर**

बनेपा थाःगुँ (उत्तरपट्टिको माथिल्लो जङ्गल) र क्वःगुँ (दक्षिणपट्टिको तल्लो जङ्गल) का बीचको भागमा यी गणेश अवस्थित छन् । यही हिसाबले बनेपाको उत्तरी क्षेत्रको माथिल्लो ठाउँका यी गणेशलाई थाच्छुगणेश भनिन्छ । बनेपाका बादेहरूको बाहुल्य रहेको क्षेत्रमा रहेका यी गणेशका समीपमा पुरानो ढुङ्गेद्वारका अवशेषहरू छन् । यी देवताको पनि मन्दिर छैन, बरु स्थानीय बासिन्दाले सानो चौतारोजस्तो उठाएर मन्दिरजस्तै बनाई पूजा गर्ने व्यवस्था मिलाएका छन् । नजिकै एउटा पोखरी छ, तर व्यवस्थित छैन । ठूलो चौरको छेउमा अवस्थित यी देवतासम्बन्धी पाटी भने देखिँदैन ।

### ४. काँथुगणेश :

उत्तरप्राचीनकालमा यी काँथुगणेशदेखि अलि पर उत्तरपश्चिमपट्टिको अलि माथिल्लो भागमा बनेपाको क्वाःठ (गढ) थियो । त्यहाँ बनेपाका महाप्रतापी राजनीतिज्ञ, क्वाःठनायक महामन्त्री जयसिंहराम वर्द्धनको दरबार





**काँथुगणेश**
**तस्बिर : प्रकाश मानन्धर**

थियो । त्यही क्वाःठसँगैका यी देवता क्वाःठगणेश हुन् । 'क्वाःठ' बाट अपभ्रंश भई यी देवतालाई काँथुगणेश भन्ने गरिएको हो । एउटै श्रेष्ठखलकका दुई भिन्नाभिन्नै थर लेख्नेहरू (कोख श्रेष्ठ अथवा कोत र राजवंशी) को बाहुल्य भएको यो परिसरमा कायस्थ थरको अर्को खलकको पनि बाहुल्य छ । कोत अथवा कोख श्रेष्ठ क्वाःठसँग सम्बन्धित छ । राजकाजसँग सम्बन्धित भएका हुँदा यी खलकका कसैकसैले राजवंशी लेख्ने गरेका छन् । कायस्थ खलकका मानिसहरू दरबारसँग सम्बन्धित छन् ।

दरबारमा कागजपत्र लेख्नेहरू यहाँ मात्र नभई भक्तपुर, पाटन, काठमाडौँ आदि ठाउँहरूमा पनि कायस्थहरू नै हुने गर्दथे । तलापुखुगणेश राजकुलसँग सम्बन्धित भएजस्तै क्वाःठ (काँथु) गणेश गढसँग सम्बन्धित छन् । ढुङ्गेधारासमीप प्यागोडाशैलीको मन्दिरभित्र अमूर्त यी गणेशको पूजा गरे घाँटी दुखेको निको हुन्छ भन्ने जनविश्वास छ । त्यसैले यी देवतालाई काँथुगणेश भनिएको हुनुपर्छ । यी देवतासँग सम्बन्धित द्वारको हाल अवशेष मात्र बाँकी छ ।

### ५. वकुगणेश :

नेवारी भाषामा वा (ता) को अर्थ पूर्व हो । अतः बनेपाको पूर्वी द्वारमा अवस्थित यी गणेशलाई वकुगणेश भनिन्छ । वकुटोलमा विभिन्न किसिमका पुरातात्त्विक देवदेवी, वस्तु र अन्य सामानहरू छन् । यिनीहरूको अनुसन्धान र उत्खनन हुन सके बनेपाको महत्त्वपूर्ण इतिहास पत्ता लाग्न सक्छ । यहाँ द्यःदपुखु (देवीदेवता भएको पोखरी) र वकुपुखु छन् । द्यःदपोखरीमा शिवलिङ्ग, विष्णु, सूर्य, गणेश आदि देवदेवी छन् । व्यापारमा प्रसिद्धि पाएको 'बनेपाबाट वा बनेपाको बाटो भई भोट जाने व्यापारिक मार्ग बनेपामा



वकुगणेश
तस्बिर : प्रकाश मानन्धर

अवस्थित यी वकुगणेशले धन भित्र्याउने कार्यमा सहयोग पुऱ्याउने विश्वास गरिन्छ ।'[४] बिघ्ननाशक गणेश कला, कौशल, सङ्गीत, वाद्यवादन, ज्ञान र बुद्धिका साथै धन र द्रव्यका पनि देवता हुन् । वणिपुर कहलिएको यो बनेपाको वकुटोल बनेपाको व्यापारिक थलो हो । अतः वकुगणेश वाणिज्यसँग सम्बन्धित हुनुपर्छ । दायाँतिर शक्तिस्वरूपा बुद्धि र बायाँतिर सिद्धिका साथ विराजमान यी देवताको पोखरी बाटो फराकिलो पार्दा पुरिइसकेको भए पनि पाटी भने अहिले पनि रहेकै छ ।

### ६. क्वबाहाःगणेश :

मानन्धरहरूको बाहुल्य रहेको बनेपाको आग्नेयकोणस्थित क्वबाहाःमा अवस्थित यी क्वबाहाःगणेश कृषिसँग सम्बन्धित छन् । आषाढ कृष्ण चतुर्दशीपछिको आदित्यबारमा यहाँ सरकारी स्तरबाट पृथक्-पृथक् समूहले विविध देवदेवीको विधिपूर्वक पूजा गर्दा यी आठ गणेशलाई पनि पूजा गर्ने चलन छ । एक समूहले तलापुखुगणेश, थारूदीपका भैरव र चसीगुँकी बालकुमारीलाई पूजा गर्ने गर्दछन् भने अर्काथरी मानन्धरसमूहका सीगुठी र खगुठी (देवी चण्डेश्वरीको रथ बनाउने गुठी) ले संयुक्त रूपमा धनेश्वरका गणेश, क्वरदीपका भैरव र क्वबाहाःगणेशलाई कुखुराको बलिसहित पूजा गर्ने चलन अद्यापि चल्दै आएको छ । त्यो दिन देशभित्र र बाहिर चण्डेश्वरीसहित विविध देवदेवीहरूको पूजा गर्ने कार्यलाई देशपूजा भनिन्छ । पानी नपरी रोपाइँ गर्न नसकिएको बेला उक्त देशपूजाको दिन ठूलो झरी हुने विश्वास गरिन्छ । कृषिप्रधान यो बनेपाक्षेत्रमा खेतीपाती राम्रो होस् भन्ने हेतुले गरिएको देशपूजामा

[४] ऐ० ऐ० ३





क्वबाहाःगणेश
तस्बिर : प्रकाश मानन्धर

क्वबाहाःगणेशलाई कृषिका देवता मानिआएको पाइन्छ । पाञ्चायनअन्तर्गतका देवदेवीहरूमा 'शिवलाई पृथ्वीका, देवीलाई तेज (शक्ति) का, सूर्यलाई वायुका, विष्णुलाई आकाशका र गणेशलाई जलका अधिष्ठाता मानिएको छ ।'[५] यी गणेशको प्यागोडाशैलीको मन्दिरसमीप बौद्धचैत्य, इनार र पाटी छन् । २०१७ सालमा भएको बनेपाको ठूलो अग्निकाण्डमा क्वबाहाःपुखु (पोखरी) को पानीले आगो निभाउन ठूलो मद्दत पुऱ्याएको थियो ।

### ७. तुकंप्वःगणेश :

बनेपाको दक्षिणदिशा चैतन्य मा० वि० समीप इनाबहाःमा अवस्थित तुकंप्वःगणेशका विषयमा संस्कृतिका ज्ञाता (मेरा बुबा) मोहनलाल खिं मानन्धरले मलाई बरोबर भन्ने गर्नुहुन्थ्यो – "राजा आनन्ददेवले बनेपाको निर्माण गर्दा चौकोटबाट एउटा राम्रो शिला ल्याई सर्वप्रथम तुकंप्वःगणेशको जीवप्रतिष्ठा गरेका थिए । उक्त शिला ल्याएको थाहा पाई चौकोटका मानिसहरू यहाँ आए र उक्त शिला फिर्ता लान खोजे । ती मानिसहरूले त्यो शिलाको माथिल्लो भाग मात्र काटी चौकोट लगेर त्यहाँ गणेशका रूपमा स्थापना गरे । चोका (माथिल्लो भाग) लगेकाले त्यो ठाउँको नाउँ चोखा भयो । अहिले पनि नेवारहरूले चौकोटलाई चोखा भन्दछन् । बाँकी टुक्रा यहाँ भएकोले यी देवताको नाम तुकंप्वःगणेश भयो ।"

[५] गणेश एक : स्वरूप अनेक, चेतोनाथ शर्मा आचार्य, प्रकाशक : सूर्यचन्द्र बादे श्रेष्ठ, २०६०



तुकंप्वःगणेश
तस्बिर : प्रकाश मानन्धर

तुकंप्वःगणेशको पूजा गरे विदेशिएका आफन्तको खबर आइपुग्ने र हराएको सामान पनि फेला पर्ने विश्वास गरिन्छ । यी देवताको पोखरीको जग्गामा चैतन्य मा० वि० को भवन निर्मित छ । काठमाडौँको अशोकविनायक (मरुगणेश) को जस्तै तुकंप्वःगणेशको पनि प्रतिवर्ष विजयादशमीको दिन धातुनिर्मित सुन्दर मूर्ति खटमा राखेर क्वःनेसाः (तेलको कोल) का मानन्धरहरूको आयोजनामा भोज खाइसकेपछि विधिवत् बाजागाजासहित जात्रा हुन्छ । ७० वर्षजति अघिसम्म पनि बनेपाका सात-आठ भजनखलकहरू आई भजन गर्ने गर्दथे भन्ने कुरासम्म सुनिन्छ । तर जात्रा कहिलेदेखि सुरु भयो भन्ने कुराको कुनै अभिलेख पाइँदैन ।



तुकंप्वःगणेशको रथजात्राको प्रतिमा / तस्बिर : प्रकाश मानन्धर



वि० सं० १९७३ सालमा रथ बिग्रिएमा बनाउनका लागि भनी भोलाखाटोलनिवासी जहरमुनि बोह मानन्धरले ६ रुपियाँ २९ पैसा राखिदिएको कुरो अभिलेखले बताउँछ । उनै जहरमुनिले यी देवताका नाउँमा साढे एक रोपनी जग्गा यसै कार्यका लागि राखिदिनुका साथै ने० सं० १००८ को अभिलेखअनुसार वांख्य भजनखलःलाई सघाउन एक बारी राखिदिनुका अतिरिक्त अर्को वि० सं० १९४८ को अभिलेखअनुसार एउटा गजुर राखिदिनुका साथै बिहान-बिहान मुहाली बजाउने कृष्णवीरसहित दुई कुसले, ढोलक बजाउने कालुदों र माताबाजा बजाउने एकजनालाई गरी जम्मा तीन बारी दिए । हाल मुहाली बजाउने कार्य बन्द छ । यिनै जहरमुनिले तुकंप्वःगणेशको परिसरमा वि० सं० १९५१ मा ढुङ्गाले छापेको कुरा अर्को एक अभिलेखमा उल्लेख छ ।

### ८. क्वःलागणेश :



क्वःलागणेश
तस्बिर : प्रकाश मानन्धर

बनेपाको नैऋत्यकोणमा अवस्थित यी क्वःलागणेश यहाँको लायकुदेखि तलतिर छन् । नेवारी शब्दमा क्व (य्) को अर्थ तलतिर र लँ (ला) को अर्थ बाटो हो । त्यसैले लायकुतलतिर (क्वय्) को बाटो (ला) छेउ रहेका यी देवतालाई क्वःलागणेश भनिएको हो । यी नाचिरहेका गणेश हुन् भन्ने जनविश्वास पनि पाइन्छ । हुन पनि गणेशका विविध रूपहरूमा विश्वकर्मा, नाट्येश्वर आदि रूपहरू पनि पर्दछन् । क्वःला बनेपाको पुरातात्त्विक दृष्टिकोणले उत्खनन र अनुसन्धानयोग्य छन् । भाद्र महिनाको कृष्णपक्षमा यहाँ हुने देशव्यापी पूजाहरू (जस्तै : महादेवपूजा, कृष्णपूजा, भगवान्पूजा, कन्यापूजा आदि) का सिलसिलामा भाद्रकृष्ण चौथीका दिन गणेशपूजा क्वःलाबाट सुरु भएपछि मात्र अन्य पूजाहरू हुने गर्दछन् ।

बनेपाका आठ ढोकाका अवशेषहरू धेरै ठाउँमा हाल देखापरेका छैनन् । तर क्वःलागणेशको ढोकाका अवशेषहरू अहिले पनि दर्शन गर्न जानेहरूका लागि खुड्किलाका रूपमा प्रयोग भइरहेका छन् । पोखरी देवस्थलसँगै छ । तर पाटी कहाँ थियो, ज्ञात हुन सकेको छैन । क्वःलागणेश भजन खलःले पर्व-पर्व र चतुर्मासमा यहाँ अटुट रूपले भजन गर्दछन् ।

किंवदन्तीअनुसार धनेश्वरको समीप धनराजाको राज्यमा धर्मपुर नामले पनि कहलिएको यो बनेपामा बिघ्नहर्ता, रक्षक र पालकका रूपमा पूजिने गणनायक गणेशलाई आठ दिशामा आठ दिक्पालका रूपमा प्रतिष्ठापित गरी चण्डेश्वरीको निर्देशन पाई राजा आनन्ददेवले बनेपाको निर्माण गरेको कुरा वंशावलीमा उल्लेख छ । विनयापुरी कहलिएको यो बनेपाको निर्माणपछि ती राजाले चण्डेश्वरी (कुमारी) को मुकुन्डोनृत्य चलाएका थिए । ३२ गणको विनयापुरीको त्यो नृत्य (हराएको १०८ वर्ष भइसक्यो) मा गणनायक गणेशको भूमिका अत्यन्तै ठूलो र प्रभावकारी थियो भन्ने कुरा मेरा पिताजीले मलाई बताउनुभएको थियो । अष्टगणेश नै आठ दिशाका संरक्षक हुन् । यहाँका ती आठ गणेशहरूका छुट्टाछुट्टै नाम भने छैनन्, तर पनि आश्रित ठाउँहरूको नामबाट नै तिनीहरूको नामकरण भएको पाइन्छ । कुनै-कुनै पुस्तकमा गणेशका आठ अवतारबारे चर्चा गरिएको पाइन्छ । यी आठ अवतार छुट्टाछुट्टै रङ्गका थिए भन्ने पनि उल्लेख गरिएको पाइन्छ । तर यस विषयमा त्यति धेरै उल्लेख गर्नु आवश्यक नभएकोले अहिलेलाई यत्ति नै ।

**(साभार : काभ्रे टाइम्स, २०६२ मङ्सिर ७ गते मङ्गलबार)**

●



# परिशिष्ट

**बनेपा तुकंपोल गणेद्योया द्योगलय् च्वंगु वि० सं० १९४८ या शिलापत्र**

**मूल पाठ :**

१) स्वस्तिश्री सम्वत १९४८ साल वैसाष मासे सुकल पक्षे पुर्नेमा १५ रोज

२) २ स विंसाक्षानस्छेत्र परे जोगेस जंबुदिपे भरत षंण्डे वागमत्यायां पुर्वकुले

३) कौसिकायां पश्चिम कुले ॥ ॥ माइ संनिधान भोत देसया साल तोल बोह बुंस चोङ लक्षमुनि मानं-

४) धर कका धनारां, कका सिंघविर, काय जहरमुनि, छयचा हर्षमुनि मानंधर भोसलया मनोमाननं तुकंपोल दिक माइयाके सुथा तेलं मोहालि पु-

६) युम्ह कृष्णविर राम्वा जुगि २, धा थाइम्ह कालु दों १, माताबाजा थायुपुं पा-

७) यायात षानगि जिमिसेन विर्ता न्याङा भोग चलन्य याङा वयागु भोत देय-

८) स कोला टोलया किबा स्वको तुकंपोल १ याता प्रती याना बाजा थाइ, पुइम्ह स्व-

९) म्हयात धानसिकी बोहोकोठुको कमाइ यानाव्वगु बाली नायगु दयका यात

१०) याना तया जुलो, सुथा तेलं स्वम्हसेन बाजा मथासे, मपुसें बालि नय स-

११) न नलसा पाप लाई, किबात न्ह्ययया संतानयाता, क्यनेयातसा जुगि दोंया म्हा-

१२) षाये याना मेपुं तयगु, थो जुगि २, दों १ या संतानन नेवालिन थासे बाजा पुतल्यें

१३) थातलें प्रीती याना सुन षोसे याय मदु, बाली काया नय मदु थ्वथे प्रति याना-

१४)	गु बाजा पुपिं थापिंता कीबा मयाकसें किंबाखोया बालि कया नलसां

१५)	वा सुंने यातसा पाप लाइ, बाजा पुइ थायीपिं थ्व स्वम्हसिन बाजा पुया थाया न-

१६)	यगु मेपिंता बंधक तय, मिय नय मदु, बंधक तल मिलसा षोसे याना मेपिंता

१७)	याका तल्सीं बोटि बियेगु धका जिमि मनोमान किबा तुकंपोलरया ख-

१८)	वनसें सुथां तेल मुहालि २ पुइपिं खमेरु, मानविर जुगी नेम्हं धा थाइम्ह का-

१९)	लु दों छम्हयाता, बाजा थाइपु स्वम्हायात किबा स्वम्हेस्यान नयगु जुल धकं प्र-

२०)	ती याना तयधुन, थो किबा तम्हेसेन सगं १२५ सगुन न्ह-

२१)	स तुकंपोल १ या अगाडी लाछेया चिगु कुत गजु छायाया दोलछि

२२)	कातीम्ह थाक मानंधरया गृहे कोस तयागु ची गुथो सिलापत्र स्व

२३)	ना निसे

२४)	तासेन सालमि संतानं फतसा ल्होने दयके ॥ थोतेया साछि

२५)	भोत देसया लाषा खेलस चोङम्ह लछिमिदास कसत कोयद्य

२६)	त बिङ

## बनेपा तुकंप्व:गणेशको मन्दिरमा रहेको वि० सं० १९४८ को शिलापत्रको नेपाली भाषामा भावार्थ

सम्वत् १९४८ वैशाख शुक्ल पूर्णिमा सोमबार विशाखा नक्षत्र परजुगमा जम्बुद्वीप, भरतखण्ड, बागमतीको पूर्वतिर कौशिका (सप्तकोसी) को पश्चिमतिर माईको सन्निधानमा अवस्थित भोत देश (बनेपा) को साल तोल बोह बुंमा बस्ने लक्षमुनि मानन्धर, काका धंनारां, काका सिंघवीर, पुत्र जहरमुनि, नाति हर्षमुनि मानन्धरको सकल परिवारको साहुतिले तुकंपोलमा विराजित माईस्थानमा बिहान सुप्रभातमा भजनको व्यवस्था गरियो । भजनमा मोहाली (सहनाईबाजा) बजाउने कृष्णवीर, राम्बाजुगी जवान २, धा: बजाउने कालु दों



जवान १, माताबाजा बजाउने पाचालाई समेत खान्गीको व्यवस्था गर्न हामीले किनेर राखेको आयस्ता लिई राख्नू । बिहान सबेरै यी तीनैजनाले बाजा नबजाई आयस्ता (बाली) खान खोजे पाप लाग्छ । यी खेतबारीको खान्गीमा नियुक्त गरेका जोगी (कुसले), दोंहरूलाई बर्खास्त गरी अरू नियुक्त गर्नू । यी जोगी २, दों १ का सन्तानहरूले बजाउने काम गरेसम्म प्रीति गर्नू । खोस्न पाइँदैन । दाताहरूले बाली उठाई खानु हुँदैन । बाजा बजाउनेहरूलाई बाजा बजाउन नदिई बाली उठाई खाएमा, धर्म नष्ट गरेमा पाप लाग्छ । बाजा बजाउनेहरूले पनि यी खेतबारी तीनजनाले बन्धक राख्न र बेच्न पाइँदैन । बन्धक राखेमा र बेचेमा खान्गीबाट खोसेर अरूलाई नियुक्त गर्नू । बिहान सबेरै मुहाली बजाउने दुईजना खमेरू र मानवीर जुगी (जोगी), धा: बजाउने कालु दों एकजनासमेत बाजा बजाउने यी तीनजनाले बाली उठाई खानू भन्ने धर्मपत्र गरिदिने काम भयो । यो आयस्ता राख्ने अर्थात् खेतबाली राख्नेले तुकंपोलदेवताको मन्दिर १२५ सगुणसहित गजुर चढाइयो । एक हजार कातिम्ह बजाउने थाक मानन्धरको घरको परिसरको मन्दिरमा यो शिलापत्र प्रतिष्ठा गरियो । यी दाताका सन्तान-दरसन्तानले यी मन्दिरको सकेसम्म जीर्णोद्धार गर्नू । यस पुण्यकार्यका साक्षी भोतदेशको लाखाखेलमा बस्ने लक्ष्मीदास कस: ............... आदि हुन् ।

**लिपि उतार तथा अनुवाद : छत्रबहादुर कायस्थ**

धर्मपत्र

### श्री तुकंपोल

१.	सम्वत् १९७३ साल मिती असोज सुदि १५ रोज ४ स

२.	भोत देस भोलाषा तोलसे चोनह्म जहरमुनि

३.	मानंधर्न धर्मस मचैन १ गणेसया जात्ररा

४.	यायगु षत सेंनसा ल्होनेता जगेरा तया मोह

५.	तका ६।२९ खुतका व निगुग धेवा १ गने-

६.	सया सालस चोपुं २६ मानंर्धयाता दुता विया जु-

७. ल थो दामया अम्दानि जुया वलसा थो दामया अम्दा-

८. नि ल्होने माल, थो दामया आम्दानी जुया मवसा थो

९. दाम मोथ सेनका थोषत ल्होनेमाल सुभं ।

**अभिलेख उतार्ने : छत्रबहादुर कायस्थ**

**भावार्थ :**

सम्वत् १९७३ साल असोज १५ रोज ४ मा बनेपा भोलाखाटोलका जहरमुनि मानन्धरले गणेशको जात्रा गर्ने रथ बिग्रेमा रु. ६।२९ पैसा गणेशको कोलका २६ जना मानन्धरहरूलाई दिई यो रकमले तुकंप्व:गणेशको जात्रा गर्ने र रथ बिग्रेमा यसको आम्दानीले नभए मोठले नै रथलाई मर्मत गर्ने ।





# बनेपाको प्रसिद्ध चण्डेश्वरीमन्दिर

आजकल प्राय: सिमेन्ट, रड आदिको प्रयोग गरेर नयाँ प्रविधिबाट घर निर्माण गर्ने चलन आएको छ । नयाँ प्रविधिबाट बनाइएका घरहरू बलिया पनि हुन्छन् । कतै कुनै-कुनै मन्दिरहरूमा पनि सिमेन्टको प्रयोग गरिएको पाइएको छ । उहिले-उहिले निर्माणकार्य छुट्टै किसिमले गर्ने गरिन्थ्यो । वास्तुशास्त्रको एउटा थ्यासफू (हस्तलिखित पुस्तक) मा घर अथवा मन्दिरको निर्माण कसरी गर्नुपर्दछ भन्ने कुरा उल्लेख गरिएको छ । तर उक्त थ्यासफू जीर्ण भएर च्यातिई २-४ पृष्ठका केही रङ्गीन चित्र र केही वाक्यहरू मात्र बाँकी रहेका छन् । त्यो पुस्तकमा उल्लेख गरिएका केही कुराहरू मैले मेरा बुबाबाट सुनेको पनि थिएँ । त्यसैका आधारमा दरबार, घर र मन्दिरको निर्माण उहिले कसरी गर्ने गरिन्थ्यो भन्ने कुरालाई यहाँ सचित्र प्रस्तुत गर्न चाहन्छु ।



गृहमाजु

घर अथवा मन्दिरको निर्माण गर्दा सर्वप्रथम निर्माणस्थल योग्य छ कि छैन भनी माटो जँचाउनुपर्दछ। त्यो स्थलको अलिकति माटो शास्त्र जान्ने एकजना पुरोहित या ज्योतिषीकहाँ पुऱ्याउनुपर्दछ। त्यो माटो एउटा थ्यासफू (पुरानो हस्तलिखित पुस्तक) माथि राखी विधिवत् जाँचेर जान्ने व्यक्तिले त्यो स्थलमा घर अथवा मन्दिरको निर्माण गर्न हुन्छ या हुँदैन भनी निर्णय गर्दछ। निर्माणकार्य सुरु गर्न जग्गा यति लिने भनी रेखाङ्कन गर्नेबित्तिकै त्यहाँ गृहमाजु (गृहमाता) ले ठाउँ लिइसकेकी हुन्छिन् भन्ने जनविश्वास रहिआएको छ। शास्त्रमा गृहमाता (निर्माणस्थल) लाई ८ भागमा विभाजित गर्नुपर्ने प्रावधान राखिएको छ। ती ८ भागहरू हुन् :

१. गरुड, २. धुम (बाघ), ३. सिंह, ४. श्वान (कुकुर),
५. नाग, ६. मूषक (मूसो), ७. गज (हात्ती), ८. ध्वाँछे (फ्याउरो)






यसरी निर्माणकार्य सुरु गर्दा राजदरबार बनाउने भए नं० ३ सिंह (अर्थात् सिंहासन) मा, घर बनाउने भए नं० ५ नाग अथवा नं० ७ हात्तीमा र मन्दिर बनाउने भए नं० १ गरुडमा पार्नुपर्दछ। १ देखि ८ सम्मको विभाजित हिसाब मानिसको हातले नापेर लिने गरिन्छ। निर्माणस्थलको कूल क्षेत्रफललाई ८ ले भाग गर्नुपर्दछ। ८ ले भाग गर्दा जति शेष आउँछ, त्यो माथि उल्लिखित ८ मध्ये कुनैमा पर्न जान्छ। यो वास्तुविद्या (शास्त्र) को हिसाब हो। उदाहरणका लागि २१ हात लम्बाई र १९ हात चौडाईको कुनै जग्गाको कूल क्षेत्रफल २१ x १९ = ३९९ हुन्छ। त्यसलाई ८ ले भाग गर्दा शेष ७ हात्तीमा पर्दछ। त्यसैले मानिसको घर बनाउँदा त्यस हिसाबले त्यो जग्गा योग्य छ। फेरि ८ ले भाग गरेर २ मा पर्दा त्यो घरका परिवार धमाधम घट्तै जाने (बाघले खाने), ४ मा पर्दा त्यो घरमा जहिलेसुकै पनि कलह भइरहने (कुकुरहरूको जस्तै झगडा भइरहने), ६ मा पर्दा भाग्य नफस्टाउने र ८ (ध्वाँछे) मा पऱ्यो भने त्यो घरका मानिसहरू सबैजना एकैचोटि दुर्घटनामा पर्न सक्छन् भन्ने शास्त्रको मत छ। तर ५ र ७ मा परेको घर सुलक्षणयुक्त हुन्छ।

घरको निर्माण गर्दा जमिनमुनि बसिरहेका नाग (अनन्तनाग) लाई धक्का पर्न दिनु हुँदैन भन्ने पनि छ। ५ मा पर्दा धक्का नपर्ने हुन्छ। निर्माणकार्य सुरु गर्दा चन्द्रमालाई शिरमा या दायाँ पार्नुपर्दछ भने योगिनीलाई शिरमा या दायाँ पार्नु हुँदैन भन्ने ज्योतिषशास्त्रको भनाइ छ। चन्द्रमा र योगिनीको स्थान त्यो दिनको राशि र नक्षत्रको हिसाबले निर्धारित गरिन्छ। त्यो पनि बारअनुसार बारबेलाचक्रमा विभाजित उद्वेग, चर, लाभ, अमृत, काल, शुभ र रोग आदि बेलामध्ये कुनै एकमा हुन्छ। घर अथवा मन्दिरको जग हाल्दा अथवा छाना छाउँदा शुभ बेला (साइत) ज्योतिषीबाट लिनुपर्दछ। ज्योतिषीले शास्त्रअनुसार राम्रो दिन र बेला बताउँछन्। त्यो बेला निर्माणकार्य सुरु गर्नुपर्दछ।

जग राख्ता पूजा गर्ने बेलामा पूजासामग्रीका साथसाथै गर्भमा सुन-चाँदीका कछुवाहरू, पवित्र तीर्थस्थलको अलिकति माटो, अन्न (स्वाँवा), पूर्णकलश, पञ्चरत्न, सिक्काहरू, यज्ञका चारवटा इँटाहरू आदिका साथै जति माथि पहाडको टुप्पाको माटो ल्याएर तल जगमा राख्न सकिन्छ, उति उत्तम हुन्छ र जति तलको माटो ल्याएर माथि छानामा राख्न सकिन्छ, निर्माण हुन लागेको त्यो घर अथवा मन्दिर सुलक्षण बन्दछ भन्ने वास्तुशास्त्रको भनाइ छ। तर निर्माणकार्यको सुरुवात र जग राख्ने अथवा छाना छाउने काम आइतबार र मङ्गलबार गर्नु हुँदैन भन्ने छ। निर्माणकार्यमा कुनै किसिमको बिघ्नबाधा पर्न नआओस् भन्ने हेतुले त्यहाँ चारैतर्फ बौ होलेगु (लावा छर्ने कार्य) गरिन्छ।

बनेपाकी आराध्यदेवीको उत्तराभिमुख मन्दिरअगाडिका दुई बेग्लाबेग्लै

शिलास्तम्भमाथि प्रतिष्ठापित मयुरहरूले मन्दिरभित्रकी मूल देवी कुमारी हुन् भनी इङ्गित गर्दछन् । आफ्नो कडा तपस्याले गर्दा महादेवबाट आफूलाई कुनै पनि पुरुषशक्तिले नाश गर्न नसक्ने वर पाइसकेपछि तीनै लोकमा विजय प्राप्त गरी मात्तिएको क्रूर दैत्यराज चण्डासुरलाई काटिएको चम्पकवृक्षको फेदबाट प्रकट भएकी कुमारीले चण्डेश्वरीभगवतीको रूप धारण गरी वध गरिन् भन्ने आख्यान छ । अतः यी देवीलाई भगवती मानी मन्दिरअगाडि उठाइएका दुई शिलास्तम्भहरूमाथि दुईवटा सिंहहरूका प्रतिमा पनि छन् । धंजु भारो, टौटिक भारो, अनन्तनारायण भारो, अर्को धंजु भारो र पाहासिं भारो गरी जम्मा ५ जना भारोहरूले ने० सं० ९०७ मा तेलिया इँटाले छापेकोमा हाल ढुङ्गाले मिलाएर छापिएको चण्डेश्वरी जगती (चोक) लाई पूर्व, उत्तर र पश्चिमपट्टि पाटीले घेरिएको छ । दक्षिणपट्टि सुन्दर बगैँचाभित्र चौताराहरू बनाएर रमणीय वनभोजस्थल बनाइएको छ ।

चण्डासुरदैत्यको वध भएको ठाउँ रक्तचन्दनवन हो भनी आख्यानहरूमा उल्लेख गरिएको हुँदा अहिलेको मूल मन्दिर भएको ठाउँ त्यस बखत एउटा ठूलो जङ्गल हुनुपर्दछ । अहिले पनि चण्डेश्वरीमन्दिरको पूर्वपट्टि चण्डेश्वरी (चाँस गुँ) जङ्गल नामक एउटा ठूलो र घना जङ्गल छ । जङ्गलको मुनितिर चण्डेश्वरीखोला (चाँस खुसी) बगिरहेको छ । मन्दिरपरिसरमा एउटा शिवमन्दिर छ । त्यहाँको शिवलिङ्गलाई 'चण्डेश्वर' भनी 'गोपाल राजवंशावली' मा उल्लेख गरिएको छ ।[1] यो शिवलिङ्ग उही चण्डासुरदैत्यले आफ्नो वध हुनुअगाडि स्थापना गरेको कुरा कवि जगत्केशरीरचित 'श्री चण्डेश्वरीस्तोत्र' मा उल्लेख छ ।[2] तर देवीद्वारा दुष्ट दैत्यको वध भइसकेपछि 'त्यो असुरको देहबाट अनुपम तेज निस्कियो, त्यसबाट चण्डेश्वर नामका महापुण्यशाली शिवलिङ्ग बन्यो ।'[3] महादेव र चण्डेश्वरीमन्दिरको बीचमा गणेशको मन्दिर पनि छ ।

नेपाल भाषाको शब्द 'देग' संस्कृत शब्द 'देवगृह' को अपभ्रंशबाट आएको हुनुपर्दछ । देवीदेवताको प्रतिष्ठा गरी निर्माण गरिएको गृह नै 'देवगृह' अर्थात् 'देग' हो । वास्तुशास्त्रअनुसार, माथि उल्लेख गरिएजस्तै देवालयले ओगटेको ठाउँ ८ मध्ये २, ३, ४, ५, ६, ७, ८ मा नभई १ (गरुड) मा पार्नुपर्छ । त्यसैले मन्दिरहरू ठीक चारपाटे हुन्छन् । तर पनि कुनै-कुनै

---

[1] गोपाल राजवंशावली, पत्र नं० ३९, धनवज्र बज्राचार्य र कमलप्रकाश मल्ल, नेपाल रिसर्च सेन्टर पब्लिकेसन, सन् १९८५

[2] श्री चण्डेश्वरीस्तोत्र, कवि जगत्केशरी

[3] चण्डेश्वरी, हरिराम जोशी, चण्डेश्वरी स्मारिका, प्रकाशक : बनेपा नगरपालिका, २०५०



मन्दिरहरू त्यस्ता नभएका पनि छन् । पहिले-पहिले नाप गर्दा गज अथवा फुट हुँदैनथ्यो । नाप्ने काम कुनै एकजना प्राविधिज्ञको हातबाट हुन्थ्यो । चण्डेश्वरीमन्दिर बनाउँदा पनि आवश्यक जग्गा कुनै प्राविधिज्ञको हातले नै नापिएको हुनुपर्दछ । यो मन्दिरको लम्बाई-चौडाई लगभग २६ x २६ फिट भएकोले त्यस बखत हातले नाप्ता १७ x १७ हातको हुनुपर्दछ । त्यसो हुँदा १७ x १७ = २८९ हुन आउँछ र त्यसलाई ८ ले भाग गर्दा रहन आउने शेष १ (गरुड) मा पर्दछ, जुन वास्तुशास्त्रअनुसारको छ । जगमा मन्दिरका चार कुनामा चार गर्भगृह र ठीक मध्यभागमा अर्को गर्भगृह राख्ने गरिन्छ । कुनै-कुनै मन्दिरमा चार कोणमा चार गर्भगृह नराखीकन बीचमा एउटा मात्रै गर्भगृह राख्ने चलन पनि छ ।

दैत्यद्वारा काटिएको रूखको फेदलाई नै देवी चण्डेश्वरी मानी मानिसहरूले पूजा गर्दै आइरहेका छन् । त्यही फेदबाट देवी चण्डेश्वरी प्रकट भएकी हुन् भन्ने मानिसहरूको विश्वास छ । यो विश्वासका आधारमा विचार गर्दा मन्दिरको ठीक बीच भागमा देवीको प्रतिष्ठा गरिएको भए तापनि जग राखेर गर्भगृहमा शिलान्यास गरी निर्माणकार्य भएको थिएन होला, किनभने देवी प्रकट भएको रूखको फेदलाई बिगारेर त्यसमा गर्भगृह बनाइएको नहुनुपर्ने हो । तर त्यस बखतका कुनै एक तान्त्रिकले रूखको फेदमा देखिएकी देवी चण्डेश्वरीको प्रतीकस्वरूप तन्त्रद्वारा सम्भवतः एक कलशको स्थापना गरेको हुनुपर्दछ, किनभने देवीदेवताको प्रतिष्ठा तन्त्रविधिद्वारा कलशको स्थापना गरेर गर्ने गरिन्थ्यो । पशुपतिक्षेत्रकी गुह्येश्वरी, पचलीभैरव, भक्तपुर नवदुर्गाकी महालक्ष्मी (सिफ्वद्यः), काठमाडौं असनकी अन्नपूर्णा आदि देवीदेवतालाई तन्त्रद्वारा कलशका रूपमा स्थापना गरी मन्दिरको निर्माण गरिएको छ । त्यस्तै आर्यावलोकितेश्वर करुणामय (रातो मच्छिन्द्रनाथ) लाई पनि बन्धुदत्त आचार्यले साधना गरेर कलशका रूपमा नै कामरूप कामाक्षाबाट नेपालमा ल्याएका थिए भन्ने भनाइ वंशावलीको छ ।

उत्तराभिमुख चण्डेश्वरीमन्दिरको मूल ढोकाको माथिल्लोपट्टि दुई फ्याकमा जडिएका भैरवको मुखाकृतिअगाडि सिँढी चढ्दा पेटीका दायाँ-बायाँ दुई ठूला-ठूला ढलोटका सिंहहरू देखिन्छन् । मूल प्रवेशद्वारबाट पस्नेबित्तिकै बायाँतर्फ काठ कुँदेर बनाइएका सरस्वतीका त्रिमूर्ति छन् भने दायाँपट्टि एक शिला छ । त्यो शिलालाई भक्तजनहरू कुमारीका रूपमा पूजा गर्दछन् । चण्डेश्वरीलाई बलि दिइँदा सोझै देवीलाई दिइँदैन, कुमारीका रूपमा मानिएको त्यही शिलालाई दिइन्छ । दोस्रो द्वारबाट प्रवेश गर्नेबित्तिकै चण्डेश्वरीदेवीको दर्शन पाइन्छ । देवीका अगाडि ठूला-ठूला र साना-साना घण्टाहरू



**चण्डेश्वरीमन्दिर**

झुन्ड्याइएका छन् । भक्तजनहरू तिनै घण्टाहरू बजाई श्रद्धाभक्तिपूर्वक दुईतले तोरणसहितको एउटा सानो खटमुनि भएकी त्रिनेत्रादेवी चण्डेश्वरीको दर्शन गर्दछन् । बायाँपट्टि शीतलामाई छन् भने दायाँपट्टि माटोबाट बनाइएकाले हातखुट्टा भाँचिएका देवीदेवताहरूका धेरै पुराना मूर्तिहरू छन् ।

मन्दिरको प्रवेशद्वारमाथि काठको अथवा काठमा धातुपाता जडान गरिएको अर्धगोलाकार बुट्टाहरू भएको कलाकृतियुक्त तोरण राखिएको हुन्छ । तोरणलाई मन्दिरको ऐना भनिन्छ । यसमा सम्बन्धित देवदेवीका बारे गहन ज्ञानका कुराहरू झल्किएका हुन्छन् । तोरणका दुवै पार्श्वमा एक-एकवटा मकर (जलदेवता वरुणका वाहन) हुन्छन् भने माथिल्लो भागको टुप्पामा गरुड (छेपु) ले आफ्ना दुई हातले दुई नागलाई समाई दाँतले टोक्तै गरेको कलाकृति हुन्छ । मध्यभागमा उक्त मन्दिरको मूल देव या देवी आफ्ना गणदेवताका साथमा हुन्छन् । तोरण सुन्दर हुन्छ । यस्तो तोरण सम्बन्धित देवी या देवताप्रति देखाइएको उच्च भाव र भक्तिको प्रतीक हो । तोरणमा कीर्तिमुख, नाग, छत्र, फूलका बुट्टा, किन्नर आदि पनि हुन्छन् ।



चण्डेश्वरीमन्दिरको पहिलो र दोस्रो प्रवेशद्वारमाथि तोरण छन् । मन्दिरको पहिलो, दोस्रो र तेस्रो तलामा चारैतर्फ परस्पर जोडिएका काठका ३-३ वटा कलापूर्ण झ्यालहरू छन् । प्रत्येक तलाका तीन झ्यालहरूमध्ये बीचका झ्यालहरू ठूला छन् । पहिलो तलाका झ्यालहरूभन्दा दोस्रो र तेस्रो तलाका झ्यालहरूका आकार साना-साना हुँदै गएका छन् । माथिल्लो तलाका दुवैतर्फका झ्यालहरू खोपा जस्ता छन् । यसरी प्रत्येक तलाको चारैतर्फ जडान गरिएका ती ३-३ वटा झ्यालहरू ब्रह्मा, विष्णु र महेश्वरका प्रतीक हुन् कि भन्ने लाग्दछ । मन्दिरमा प्रवेश गर्ने पहिलो र दोस्रो द्वारमाथिका तोरणहरू र पहिलो र दोस्रो तलाका चारैतर्फ ४-४ वटा ठूला झ्यालहरूमाथिका १० वटा तोरणले पनि चण्डेश्वरीमन्दिरको सुन्दरता बढाएका छन् ।

चण्डेश्वरीमन्दिर कहिले बनाइयो भन्ने कुराको अभिलेख कतै पाइएको छैन । तर पनि राजा आनन्ददेवले कलिगत वर्ष ४१९७ मा बनेपालगायत ७ गाउँहरूको निर्माण गर्दा देवी चण्डेश्वरीको मन्दिर पनि निर्माण गराएका थिए भन्नेहरू छन् । ने० सं० ४४४ मा सिम्रौनगढबाट राजा हरिसिंहदेव आउँदा उनैका मन्त्री चन्द्रशेखरले चण्डेश्वरीमन्दिर बनाउन लगाएका थिए भन्नेहरू पनि नभएका होइनन् । 'देवमाला वंशावली' मा चण्डेश्वरीको प्राकट्य सत्ययुगको प्रथम पादमा भएको भन्ने उल्लेख पाइएको हुँदा यी देवीको मन्दिर धेरै पहिले पनि बनेको हुनुपर्दछ । 'चण्डेश्वरीमन्दिर भत्काउने क्रममा एउटा जीर्ण ताम्रपत्र प्राप्त भएको छ । उक्त ताम्रपत्रमा शिवसिंहदेवका समयमा वि० सं० १६६४ मार्गसिर शुदी ३ का दिन नारायणसिंहलगायतका विभिन्न व्यक्तिहरूले चँदुवा चढाएको उल्लेख गरिएको छ ।'[४] उक्त ताम्रपत्रले चण्डेश्वरीमन्दिर पहिले नै बनाइसकिएको थियो भन्ने देखाउँदछ । तर पनि मन्दिरको आकार-प्रकार र त्यस बेलाको कलाको स्वरूप कस्तो थियो भन्ने कुरा अज्ञात नै छ । ने० सं० ७६७ (वि० सं० १७०४) मा वैशाख शुक्ल पूर्णिमाका दिन जगत्सिंहले चण्डेश्वरीजात्रा गर्ने रथ बिग्रिएमा मर्मत गर्न र नैमित्तिक पूजाका लागि रु. ५०।- चढाएका थिए ।[५]

यी कुराहरूबाट चण्डेश्वरीमन्दिर धेरै पहिले नै बनाइएको थियो भन्ने स्पष्ट हुन्छ । चण्डेश्वरीमन्दिरभित्र ने० सं० ८०१ (वि० सं० १७३८) मा बनेको

---

[४] चण्डेश्वरीमन्दिरको कला वास्तुकला, उद्धव आचार्य, श्री चण्डेश्वरी महात्म्य, प्रकाशक : श्री चण्डेश्वरीमन्दिर पुनर्निर्माण तथा छानासुधार समिति, २०६१

[५] कुमारी, ज्ञानकाजी मानन्धर, प्रकाशिका : सुखवेती मानन्धर, ने० सं० ११२३

एउटा खट छ । दुईतले छानाको उक्त खटले तत्कालीन चण्डेश्वरीमन्दिर त्यसै शैलीमा रहेको हुनुपर्दछ ।[६] भद्रकाली गुठी तहसिल कार्यालयबाट प्राप्त एक लगतअनुसार वि० सं० १८८६ आषाढमा माई चण्डेश्वरीको पूर्वमन्दिर जगैसहित भत्किएकोले पुनर्निर्माणका लागि खर्चको व्यवस्था गरिएको देखिन्छ ।[७]

तीनतले चण्डेश्वरीमन्दिरको पहिलो तलाका १४४ मुसीमाथि कालो माटो लगाएर त्यसमाथि झिँगटी छापेर बनाइएको विशाल छानामुनिको प्रत्येकतर्फ ६-६ वटा कलापूर्ण काष्ठकलाकृति भएका टुँडाल (त्वानासि) र चार कुनामा अरू चारवटा त्यस्तै कलापूर्ण टुँडालहरूले यो मन्दिरको भव्यता अझ बढाएका छन् । दुर्गा, महालक्ष्मी, काली, भैरव, मातृकादेवी र अन्य विविध देवीदेवता कुँदिएका तीनै तलाका टुँडालहरू मल्लकालीन देखिन्छन् । चारै कुनाका टुँडालहरूमा पखेटा भएका सुन्दर र सजीव सिंहशार्दूल छन् । यी अजीव प्राणीहरू अलौकिक शक्ति र सामर्थ्य भएका देखिन्छन् । उनीहरू नै मन्दिरका दिक्पाल हुन् । यिनीहरू दुष्ट प्रवृत्तिका प्राणीहरूलाई र अमङ्गलकारी कुराहरूलाई मन्दिरभित्र प्रवेश गर्न नदिने सिपाहीहरू हुन् ।

पहिलो तलाको छानामुनि पश्चिमपट्टिको गारोको बाहिरपट्टि करिब साढे १५ फिट लम्बाई र करिब साढे १४ फिट चौडाईको लिउन प्लास्टर गरिएको परिधिमा शिरमा अर्धचन्द्र धारण गरेका, वेतालमाथि उभिएका र धेरै नागनागिनीहरूद्वारा अलङ्कृत भैरवको विशाल सुन्दर चित्र छ । देवालयका गाराहरूमा कोरिएका रङ्गीन तर अमूल्य चित्रहरू पनौतीको ब्रह्मायणीमन्दिरमा, हनुमानढोका (वसन्तपुर) को कुमारीघरमा, कीर्तिपुरको बाघभैरवमन्दिरमा, भक्तपुरको पचपन्नझ्याले दरबारमा, जयवागेश्वरीमन्दिरको भित्तामा पनि पाइन्छन् । तर ती अमूल्य र अर्थपूर्ण चित्रहरू संरक्षणको अभावले नष्ट हुने डर छ । हाम्रो संस्कृतिमा भैरवको ठूलो महत्त्व छ । 'भैरव नै एक यस्ता देवता हुन् जसलाई हिन्दूहरू शिवको उग्ररूप मान्दछन् भने बौद्धहरू अक्षोभ्यबुद्धका सन्तान वा समूहभित्रका देवता ठान्दछन् ।'[८]

[६] ऐजन नं० ४

[७] बनेपास्थित चण्डेश्वरीमन्दिरको वास्तुकला, कृष्णा श्रेष्ठ (अमात्य), चण्डेश्वरी (स्मारिका), प्रकाशक : बनेपा नगरपालिका, २०५०

[८] चण्डेश्वरीका भैरव, विरिञ्चिनारायण, जीतबहादुर मानन्धर, प्रकाशिका : श्रीमती तारादेवी मानन्धर, लायकुसाल, काठमाडौं, २०४६





**चण्डेश्वरी मिनागभैरव**
**तस्बिर : भुवन भोछिभोया**

आठ बाहु भएका चण्डेश्वरीका यी भित्तिभैरवले दाहिनेपट्टिका पहिलो, दोस्रो, तेस्रो र चौथो हातमा क्रमशः गजचर्म, डमरु, कर्तृ र पात्र धारण गरेका छन् भने बायाँतर्फका पहिलो, दोस्रो र तेस्रो हातले क्रमैसँग गजचर्म, खट्वाङ्ग र नरमुण्ड धारण गरेका छन् । चौथो हात भावमुद्रामा छ । यी भैरवको तेस्रो आँखामाथि चित्राङ्कित ब्रह्मालाई २ फ्याक पारिएको छ । शिरमाथि दक्षिणबाट उत्तरतिर गइरहेका जस्ता देखिने अनि शिर र पुच्छरमा आगोको ज्वाला निस्किरहेका हरितनाग छन् । यी नागलाई मिनाग (आग्नेयनाग) भन्दछन् । यी नागलाई मूल देवी चण्डेश्वरीले गहनाका रूपमा लगाइरहेकी छन् । रथयात्रा गर्ने चण्डेश्वरीको प्रतिमा पनि नागाभूषणयुक्त छ । चण्डेश्वरीखोलाछेउ (देवालयको पूर्वपट्टि) शिलाका रूपमा पनि मिनाग छन् । विज्ञहरूले नीलो वर्णका यी भैरवलाई चण्डेश्वरीभैरव, मिनागभैरव, मसानभैरव, कालभैरव आदि नामले लेख्ने र चर्चा गर्ने गर्दछन् । यी भैरवलाई प्रतिवर्ष भक्तपुरबाट आएका दुईजना चित्रकारहरूले विधिपूर्वक नयाँ रङ्ग लगाउने (लँपु छायेगु) गर्दछन् । यो

काम निश्चित समयमा गर्नुपर्दछ । नवौँ दिनमा ती चित्रकारहरू आफ्नो काम सिध्याएर घर फर्कन्छन् ।

चण्डेश्वरीमन्दिर तीन तलाको छ । पहिलो र दोस्रो तलाका छाना झिँगटीका छन् । सबैभन्दा माथिल्लो छानाको चारै कुनामा एक-एकवटा पूर्णकलश झुन्ड्याइएका छन् । ताँबाको छानामा सुनको जलप लागेको छ । वि० सं० १९३२ फागुन शुक्ल द्वितीयामा बनेपाका वर्यलक्ष्मी, नारायण, पुण्यलक्ष्मी आदिले चढाएको अभिलेख मुठलमा अङ्कित छ ।[१] तीनै तलाको छानाको मुठलमा झुन्ड्याएर राखिएका स-साना घण्टीहरू हावा लाग्दा बज्दछन् । घण्टीहरूको आवाजले भक्तजनहरूले देवीप्रति देखाएको भाव र भक्ति प्रकट भएको आभास हुन्छ । माथिल्लो तलाको छानाको बीच भागमा धातुनिर्मित एउटा गजुर छ । प्रत्येक गजुरको मास्तिरको भाग माथिमाथि लक्षित गरी साँगुरिँदै चुच्चिएकाले आकाशसँग यसको नित्य सम्बन्ध हुनुका साथै यो दिव्यात्माको प्रतीक पनि हो । गजुरले प्रत्येक मन्दिरको शोभा बढाएको हुन्छ ।

भक्तजनहरूलाई छानामुनिबाट मन्दिरको प्रदक्षिणा गराउन उत्तर, पूर्व र दक्षिणतर्फ ३ फिट चौडाईमा बनाइएका पेटी छन् । पश्चिमपट्टिको भित्तामा भैरवको चित्र तल भुइँसम्म अङ्कित गरिएको कारणले चित्रमुनि पेटी लगाइएको छैन । मन्दिरका दायाँ र बायाँ उठाइएका दुई-दुईवटा शिलास्तम्भहरूका बीचमा ढलोटका घण्टाहरू झुन्ड्याइएका छन् । भक्तजनहरू यी घण्टाहरू बजाएर देवीप्रति भावभक्ति देखाई मन आनन्दित पार्दछन् । झुन्ड्याइएको अर्को एउटा घण्टा गणेशको मन्दिरपछाडि पनि छ ।

देवालयका चारैतर्फ डेढ फिटका काठका दलिनमा पित्तलका पालाहरू छन् । श्रद्धालु भक्तजनहरू ती पालाहरूमा तेल हालेर बत्ती बाली देवीप्रति आस्था र भक्तिभाव देखाउँछन् । देवालयअगाडि दायाँपट्टि देवीलाई भक्तिभाव गरिरहेका दुईजना स्त्री-पुरुषका सालिकहरू पनि छन् । चण्डेश्वरीप्रति मानिसहरूको भाव र भक्ति उच्च छ ।

२०५७ सालतिर 'चण्डेश्वरीमन्दिर छानासुधार समिति' को गठन भयो । यस समितिको आयोजनामा कोटिहोम गर्ने निर्णय भयो । कोटिहोमको शुभारम्भ २०५८ साल मङ्सिर ५ गते भई त्यही महिनाको १९ गते समापन भयो । तत्कालीन सम्माननीय प्रधानमन्त्री श्री शेरबहादुर देउवाबाट उद्घाटन भएको

[१] ऐजन नं० ४



र अति हर्ष र उत्साहका साथ सम्पन्न भएको उक्त कोटिहोमको उद्देश्य चण्डेश्वरीमन्दिरको छानामा सुनको मोलम्बा लगाइएका ताँबाका पाताहरू लगाउनु थियो । त्यसैले समितिको नाम नै 'चण्डेश्वरीमन्दिर छानासुधार समिति' भयो । कोटिहोममा आएका भक्तजनहरूले शरीरमा लगाएर आएका सुनका गहनाहरू पनि देवीका नाममा चन्दास्वरूप चढाएका थिए । विभिन्न व्यक्तिहरूले नगद चन्दा पनि दिएका थिए । ठूलो रकम जम्मा भयो । तर मन्दिर दक्षिणतिर ढल्कँदै गएकोले निकट भविष्यमा नै भत्कने सम्भावना देखियो । तल भुइँमा ठूला-ठूला काठका खम्बाहरू अड्याइएका ठूला तेपु ल्वहँ (जग-ढुङ्गाहरू) फुटिसकेका थिए । प्राविधिज्ञहरू र पुरातत्त्व विभागबाट खटिई आएको उत्खननटोलीका व्यक्तिहरूले पनि मन्दिरको पुनर्निर्माण गर्नुपर्ने राय प्रकट गरे । अतः सम्बन्धित निकायबाट स्वीकृति लिई 'चण्डेश्वरीमन्दिर छानासुधार समिति' लाई 'चण्डेश्वरीमन्दिर छानासुधार तथा पुनर्निर्माण समिति' भनी पुनर्नामकरण गरियो । विविध व्यक्ति र सङ्घ-संस्था आदिबाट सहयोग लिई पुरातत्त्व विभागको रेखदेखमा अहिले मन्दिर अति बलियो र भव्य ढङ्गले पुरानै स्वरूपमा बनाइसकिएको छ । सुनको छानाका लागि पनि राम्रो प्रयास भइरहेको छ ।

●

# बनेपामा देशपूजा

बनेपाकी आराध्यदेवी चण्डेश्वरी हुन् । यी देवीलाई भगवती, उग्रतारा, तारिणी, योगिनी, एकजटी, कुमारी आदि विविध नामहरूले पुकारिन्छ । इन्द्रादि देवताको अनुरोधमा शक्तिशाली क्रूर दैत्यराज चण्डासुरको वध गर्न देवी चण्डेश्वरी सत्ययुगको प्रथम पादमा चाँपको रूखबाट रक्तचन्दनवनमा प्रकट भएकी हुन् । चाँपको रूखबाट प्रकट भई चण्डासुरलाई वध गरेकी हुँदा यी देवीको नाम चण्डेश्वरी भएको हुनुपर्दछ ।

बनेपानजिकै रक्तचन्दन भनिने जङ्गलमा दुष्ट दैत्यको वध गरी तेत्तीसकोटि देवताको रक्षा गरिदिएकी हुनाले यी देवीलाई सबै प्राणीकी रक्षिकाका रूपमा मानिएको छ । अतः बनेपा र बनेपाक्षेत्रका मानिसहरूका साथै चण्डेश्वरीसम्बन्धी गुठीहरूका गुठीयारहरूले श्रद्धा र भक्तिका साथ यी देवीलाई पूजा गर्ने गरेका छन् । सम्बन्धित गुठीका मानिसहरूले त पर्वपर्वमा देवी चण्डेश्वरीको नियमित रूपले विधिअनुसार पूजा गर्दै आइरहेका छन् । चण्डेश्वरीलाई क्षमापूजा, चापूजा (साँझपख इच्छुक परिवार गई गर्ने पूजा), टकपूजा, पञ्चबलिपूजा, मतापूजा (सयौँ-सयौँ मानिसहरूले विविध बाजागाजाका साथ चिराक हातमा लिई चण्डेश्वरी देवालयनिर गएर गरिने पूजा), हाँयपूजा (हाँस बलि दिई प्रत्येक आइतबार देवीलाई गरिने पूजा) आदि विविध पूजाहरू गर्ने गर्दछन् । यीमध्ये एउटा महत्त्वपूर्ण पूजा देशपूजा हो ।

काभ्रेपलाञ्चोक जिल्लाको केन्द्रीय स्थल बनेपा व्यापारीहरूको थलो भए पनि यहाँका सबैजसो मानिसहरूको मुख्य व्यवसाय कृषि हो । व्यापारीहरूले पनि केही न केही खेती गर्ने गर्दछन् । हुन पनि बनेपाको पूर्व, पश्चिम, उत्तर र दक्षिणमा कृषियोग्य जमिनका फाँटहरू छन् । त्यहाँ खेती गर्ने गरिन्छ । खेतीका लागि पानीको खाँचो हुन्छ । पानीका लागि पुकारा गर्दै आषाढ कृष्णपक्ष चतुर्दशीपछिको पहिलो आइतबारको दिन देवी चण्डेश्वरीलाई सरकारी स्तरबाट गरिने पूजालाई देशपूजा भनिन्छ । त्यस बखत विविध समूहका मानिसहरूलाई बनेपाका आठगणेशलगायत अन्य देवीदेवताहरूलाई सरकारी स्तरबाट



आयोजना गरी पूजा गर्न लगाउने चलन अद्यापि चल्दै आएको छ । देशपूजा भनेको देशका (बनेपाका) विविध देवीदेवताहरूका साथै आफ्नै आराध्यदेवी माई चण्डेश्वरीलाई उक्त दिन र तिथिमा सङ्गठित रूपले प्रतिवर्ष गरिने पूजा हो । चण्डेश्वरीको कुनै ठूलो पूजा गर्नुपर्दा आइतबारको दिनमा गर्ने गरिन्छ । भनिन्छ आइतबार देवी चण्डेश्वरीको प्रिय बार हो । भगवतीको दिन शनिबार भए पनि चण्डेश्वरीलाई आइतबारको दिन कँलपूजा गर्न जाने श्रद्धालु भक्तजनहरूको घुइँचो लाग्दछ । त्यस्तै, अन्य मानिसहरू पनि आइतबार बिहान चण्डेश्वरीमा पुग्छन् र त्यहाँ विशेष भीड हुने गर्दछ ।

पाञ्चायन देवीदेवताहरू (विष्णु, दुर्गा, शिव, सूर्य र गणेश) मा आकाश विष्णुसँग, अग्नि दुर्गासँग, वायु सूर्यसँग, पृथ्वी शिवसँग र जल गणेशसँग सम्बद्ध छन् । गणेशका विविध गहनाहरूमध्ये नाग पनि एक भएकाले यी देवताको जलसँग निकट सम्बन्ध छ । चोभारको क्वयनामा शिलाका रूपमा रहेका जलविनायकको मूर्ति पनि यसैको एउटा बलियो उदाहरण हो । जलसँग गणेशको बलियो सम्बन्ध भएको हुँदा नै आठै दिशामा गणेशले परिवेष्ठित गराएर निर्माण गरिएको यो विनयापुरी नगरी बनेपामा कृषि राम्रो होस् भन्ने हेतुले आषाढको आगमनमा गर्ने गरिएको देशपूजामा बनेपाका आठै गणेशलाई पृथक्-पृथक् समूहले पूजा गर्दछन् र त्यस पूजाका सन्दर्भमा अन्य देवीदेवताहरूको पनि पूजा हुन्छ । पहिले यो पूजाको आयोजना जसरी गरिएको थियो, अचेल ती विधिहरूमध्ये केही-केही विधिहरू हराइसकेका भए तापनि हालसम्म यो देशपूजा सङ्गठित रूपले चल्दै आएको छ । देशपूजा कहाँ-कहाँ र कसरी-कसरी गर्ने गरिन्छ, यहाँ उल्लेख गर्नु सान्दर्भिक नै होला ।

तलापोखरी (तलापुखु) बाट माथि बनेपाको वायव्यकोणमा अवस्थित ज्यासःननीमा प्वाकगणेश छन् । यी देवता बनेपाका आठगणेशमध्येमा पर्दछन् । यसका साथै माथि बादेखलकको बाहुल्य भएको एउटा ठूलो चौरको उत्तरी किनारमा ध्यानकुटी बौद्धविहारनजिकै बनेपाका आठगणेशमध्येका थाच्छुगणेश छन् । त्यहाँबाट उत्तरपूर्व मगरगाउँतिर जाने ठाउँमा भैरव र ग्वादे (गोठालाहरूका देवता) छन् । यी देवताहरूको पूजा सकिएपछि नालातिर पुण्यमाताखोलामा एउटा शिलाखण्डलाई कमलामाईका रूपमा स्थापना गरी पूजा गर्ने गरिन्छ । यी देवीदेवताहरूलाई कुखुराको बलि दिई पूजा गर्ने व्यक्ति पहिले बुद्धिलाल (सुत्रु) बैदार हुनुहुन्थ्यो । उहाँको निधन भएपछि हाल अन्य व्यक्तिबाट यो पूजा गर्ने गरिएको छ ।

बनेपा दछुटोलस्थित थानपतिनारायणस्थान पुरातात्त्विक दृष्टिकोणले अत्यन्तै महत्त्वपूर्ण छ । देवालयको उत्तरपूर्वीकोणमा गणेशको एउटा मूर्ति छ ।

नारायणस्थानको पूर्वपट्टि भोलाखागणेश छन् । यी गणेशहरू बनेपाका आठगणेशहरूमा नपरे पनि देशपूजामा यी देवताहरूको पनि पूजा हुन्छ । त्यसका साथै बनेपाको ईशानकोणस्थित काँथुगणेश (बनेपाका अष्टगणेशमध्येका एक) को पूजा हुन्छ । काँथुगणेश बनेपाको क्वाठसँग सम्बन्धित छन् ।

यसै पूजाको सिलसिलामा आजाद माध्यमिक विद्यालयनजिकै भुजङ्ग कहलिएको नागले बसोवास गरिरहेको ठाउँ तीन त्वापो (तीन ढिस्को) मा यी नागलाई प्वीँ (कपासका डल्ला-डल्लाले नागजस्तै उनेर बनाएको पिउरी) राखी पूजा गरिसकेपछि त्यहीँकी भगवतीको पनि पूजा हुन्छ । त्यसपछि त्यहाँबाट बनेपाको उत्तरी डाँडादेखि तलतिरका धःगाःगणेशको पूजा हुन्छ । धःगाः बनेपालीहरूका लागि अत्यन्तै महत्त्वपूर्ण छन् । बनेपाका ढुङ्गेधाराहरूको पानीको स्रोत पनि धःगाः नै हो । त्यसका साथै बनेपाको पूर्वपट्टिको खेतमा धःगाःकै पानी लाग्ने गर्दछ । पहिले यी सबैको पूजाको काम दिलु बैदारले स्वधाटोलस्थित दक्षिणकालीमा टुङ्ग्याउने गरेकोमा उहाँ स्वर्गे भइसकेपछि यो पूजा देशपूजासमूहका कुनै एक व्यक्तिद्वारा गराउने गरिएको छ ।

बनेपाको पूर्वी द्वारमा वकुगणेश छन् । यो देशपूजामा यी देवताको पूजा गरिसकेपछि यहाँबाट आधा किलोमिटर पूर्वस्थित भीमसेनको पूजा हुन्छ । भीमसेनस्थानको पर्खालमा तीनवटा पातहरू राखी आकाशभैरवको पनि पूजा गर्ने चलन छ । बलिसहित हुने यो पूजा पहिले लालु भालूले गर्नुहुन्थ्यो भने हाल आयोजक समूहका कुनै एक व्यक्तिबाट यो काम गर्न लगाइन्छ ।

मानन्धरहरूको बाहुल्य भएको कोभाटोलमा कोभाःगणेश छन् । यी देवता कृषिसँग सम्बद्ध छन् भनी मानिएको छ । खगुठी र सीगुठी मिलेर बनेको बनेपाका सबै मानन्धरहरूको एउटा जापालीगुठी छ । यो गुठीमा खगुठीका दुईजना र सीगुठीका दुईजना गरी जम्मा चारजना नाइकेहरूको नेतृत्वमा गुठीका सबै कामहरू अद्यापि चल्दै आएका छन् । देशपूजामा राजाराम गाथा, हरिनारायण भकू, ज्ञानकाजी पुलाँ र रामकृष्ण वासु गरी चारजना नाइकेहरूले कोभाःगणेश, क्वःरुदीका भैरव र धनेश्वरका गणेशको हालसम्म पूजा गर्दै आइरहेका छन् । तर पूजाका सामग्री जोरजाम गर्ने अभिभारा हरेक वर्ष एकपछि अर्को गरी पालो फेरिँदै जान्छ र पालो पर्नेको घरमा ती चारजना नाइकेहरूले आफूहरूले देवताहरूलाई बलि दिएको कुखुराको सीकाभ्वय् खाने गर्दछन् ।

बनेपास्थित चैतन्य माध्यमिक विद्यालयसँगैको तुकंप्वःगणेशको पूजा लालु चाकुबजीद्वारा गराइन्थ्यो । उनले गर्ने पूजामा वकुटोलस्थित भीमसेन र गुन्हेकाली (गुठीकाली ?) पर्दथे । यी तीन देवीदेवताहरूलाई तीनवटा बलिसहित



पूजा गरिन्थ्यो । लालु चाकुबजीको निधनपछि हाल आयोजक समूहको कुनै एक व्यक्तिद्वारा पूजा गराइने गरिन्छ ।

लायकुदरबारको तलतिरको मूलबाटोको छेउमा कोलागणेश छन् । यी देवतालाई पहिले न्हुच्छे मकै (सागर) ले पूजा गर्नुहुन्थ्यो । यो देशपूजामा उहाँले पूजा गर्ने देवीदेवताहरूमा थारूदीपका भैरव र चसीगुं (चसीजङ्गल) की बालकुमारी पनि पर्दछन् । तीन देवीदेवताहरूलाई तीन भाले बलि दिई गरिने उक्त पूजा हाल उहाँ वृद्ध हुनुभएको कारणले गर्दा अरूहरूले नै गर्दछन् । चसीजङ्गलतिर एउटा दुरुबुङ (दूधजस्तै मीठो पानी भएको पँधेरो) मा नाग र नागिनीहरूलाई प्वीँ दिएर वर्षा राम्रो होस् भन्ने कामना गर्दै यहाँ पूजा गरिन्छ ।

पूजा राख्ने कोतहरू, सुकुन्दा, कँलाली (बाँसले बनाएको विशेष पूजासामग्री राख्ने टोकरी), बौपिचा, चार दिनअगाडि द्वारेद्वारा तयार पारिएको कतथ्वँ (पूजाविधिको जाँड), बौपा, बौकुना, काँयपका (एक किसिमको ध्वजा), कलँपका (अर्को किसिमको ध्वजा), नागछत्र, हाँस, कुखुरा, बोको, राँगो, इहीपटासी, चाँदीको दृष्टि ९, केही नखाईकन बुनेको उरे दृष्टि, द्वापस्वाँ, ओ (बारा) ३२, चटामरी (चामलको रोटी) ३२, मिमिया आदि विविध पूजाका सामानहरूका साथ देशको नाइकेका रूपमा मानिएका एकजना जोशी, द्वारे (हाल श्याम मुनाकर्मी), नायो माहाँ (धेरै वर्षपहिलेदेखि हालसम्म भइरहेका मच्छेनारायण रन्जित), माहाँहरू (हाल बालकृष्ण रन्जित र रामभक्त कारन्जित), कहँ, पोङ्गा बजाउनेहरू (हाल काजीलाल पुड्क्या, ज्ञानकाजी गैँडा, जोगलाल लिवी र अभिषेक पुड्क्या), नायबाजा बजाउने कसाईहरू, जापूजा, घ्याम्पो र अन्य सामानहरू बोक्ने किसानखलकका मानिसहरू, राजबाहकहरू, नागछत्र बोक्ने, कहँपिचा बोक्ने कारन्जितहरू, मुहाली, झ्याली, तमचा, बजाउने कुसलेहरू, ढोलक बजाउने द्वो (डुम ?), विविध जातका विविध खलक र विधाका बनेपाका मानिसहरू अपराह्न लायकुदरबारमा उपस्थित हुन्छन् ।

मालाकारनी (गथुनी) गाईको गोबरले भुइँ लिपिदिन्छन् । कर्माचार्य (हाल दिलबहादुर कर्माचार्य) ले पूजासामग्री मिलाउन सुरु गर्दछन् । त्यसपछि लायकुदरबारको समीपमा रहेको बनेपाको पश्चिम द्वारमा तलेजूसँग अर्थात् राजकाजसँग सम्बद्ध भएको तलापुखुगणेशलाई सर्वप्रथम देशको नाइकेका रूपमा मानिआएका श्रीकृष्ण जोशी पूजा गर्न जान्छन् । यो पूजा सरकारी स्तरबाट गरिने भएको हुँदा सबभन्दा पहिले यी देवतालाई पूजा गर्ने गरिएको हुनुपर्दछ । कर्माचार्यले पूजासङ्कल्प गरेपछि नायोपमाँबाट महादेवको कोतपूजा, भारीपमाँबाट गणेशको कोतपूजा तथा चण्डेश्वरीको कलाँलीपूजा र मूल कोतपूजा सम्बन्धित व्यक्तिहरूबाट हुन्छ । उक्त पूजा जोशीले लिइसकेपछि

दिलबहादुर कर्माचार्य चण्डेश्वरीतर्फ प्रस्थान हुन तयार हुन्छन् ।

अघिअघि मुहाली बजाउने कुसलेहरू, नायखिँ बजाउने कसाईहरू र कहँ, पोङ्गा बजाउने मानन्धरहरू, पछिपछि कोतपूजा, कलालीपूजा लिने क्रमसँगै मिलेर जाने मानिसहरू र पूजाका सामग्री लिई जाने व्यक्तिहरू अनि बलि दिनका लागि अर्पण गरिएको राँगो, बोको, हाँस र भालेका साथै सम्बन्धित व्यक्तिहरू (जस्तै : द्वारे, नायोमाहाँ, माहाँहरू) र अन्य व्यक्तिहरू सम्मिलित भएको यो देशपूजाको झाँकी अत्यन्त रमाइलो र रोचक देखिन्छ ।



देशपूजाको झाँकी
तस्बिर : प्रकाश मानन्धर

लायकुदरबारबाट सुरु भएको यो देशपूजाको झाँकीमा बौकोना बोक्ने रामकृष्ण (किसानखलकका व्यक्ति) अग्रपङ्क्तिमा बसेर बाटाका दुवैतिर पर्ने बौद्ध र हिन्दू दुवैथरी देवीदेवताहरूलाई पूजा गर्दै हिँड्छन् । यसलाई लाँपूजा अथवा बाटोमा गर्ने पूजा भनिन्छ । बाजागाजा बज्दै जान्छन्, बीचबीचमा कहँ, पोङ्गा विधिवत् बजाउँदा तिनको आवाजले सहरको कुनाकुना गुन्जायमान हुन्छ । यी बाजाको ध्वनिले देशका बिघ्नबाधा हट्छन् भन्ने जनविश्वास छ । मानिसहरू झ्यालबाट र सडकको छेउमा उभिएर हेरिरहन्छन् र झाँकी चण्डेश्वरीतर्फ लागिरहन्छ ।



झाँकी जब चण्डेश्वरीको जगती (चोक, Courtyard) मा पुग्दछ, तब पूजा र अन्य सामग्रीहरू देवालयका अगाडि बिसाइन्छन् । त्यसपछि त्यहाँ विधिको पूजा गर्नेतिर सम्बन्धित मानिसहरू लाग्दछन् । सबैभन्दा पहिले चण्डेश्वरीको पूर्वपट्टि रक्तचन्दनवनछेउको चण्डेश्वरीखोलामा एकजना कारन्जित नागछत्र र प्वीं लिई मिनागको पूजा गर्न जान्छन् । मिनागलाई पूजा नगरीकन अन्य देवीदेवताहरूलाई पूजा गर्न नहुने यो देशपूजाको चलन छ । मिनाग चण्डेश्वरीका नाग हुन् । देवालयभित्र चण्डेश्वरीलाई सधैं यिनै नागले अलङ्कृत गरिरहेका हुन्छन् । देवीका सबै गहनाहरू सन्ध्याको पूजापछि राति पालो पर्नेको घरमा लगिन्छ, तर मिनाग एउटाचाहिँ देवीसँग सधैं राखिन्छन् । त्यस्तै, रथजात्रा गर्ने देवी चण्डेश्वरीलाई पनि धातुनिर्मित एक अर्को नाग पनि पहिऱ्याइएको हुन्छ । देवीसँगै सधैं साथमा हुने ती नाग पनि मिनाग नै हुन् । चण्डेश्वरीको देवालयको पश्चिमपट्टिको भित्तामा विशाल भैरवको चित्र छ । त्यहाँ अनगन्ती नागनागिनीहरू छन् । भैरवको शिरमाथि दक्षिणबाट उत्तरतिर गइराखेजस्तो देखिएका शिर र पुच्छरमा ज्वाला भएका हरितनाग पनि मिनाग हुन् । देवी चण्डेश्वरीका यी मिनागसम्बन्धी रोचक आख्यानहरू पनि नभएका होइनन् ।

यो देशपूजा रोपाइँका लागि पानीसँग सम्बन्धित भएको हुँदा सर्वप्रथम मिनागलाई नै पूजा गर्नुपरेको हुनुपर्दछ । हुन पनि नागबाट 'ना' (बनेपाली भाषामा 'पानी') आउने भन्ने बनेपालीहरूको धारणा छ । हाम्रो समाजमा आइतबारको दिन नागको पूजा गर्न नहुने चलन छ । नागपूजा गर्ने दिन सोमबार हो । तर बनेपामा भने देशपूजाको दिन र अरू दिनमा पनि मिनागलाई पूजा गर्नुपर्ने दिन आइतबार नै हो । यसो हुनुको मुख्य कारण मिनाग आग्नेय नाग हुनु हो । पहिले-पहिले यो देशपूजामा मिनागको पूजा हेरा कारन्जितले गर्नुहुन्थ्यो भने हाल यो काम रामभक्त कारन्जितले गर्नुहुन्छ ।

त्यसपछि चण्डेश्वरीप्राङ्गणमा सुकुन्दाको पूजा गरिन्छ । गणेश, विष्णु, सूर्य र वृहस्पति (देवीदेवताहरूका गुरु) का प्रतीक सुकुन्दा[१] को पूजा सकिएपछि यहाँ सर्वप्रथम महादेवको पूजा हुन्छ । त्यसपछि गणेशको पूजा गरिन्छ । गणेशको पूजापछि चण्डेश्वरीपीगँ मतलब देवालयभित्रका सबै देवदेवीहरूको समूहको पूजा गरिन्छ । दुईतिर दुई मिमिचामा ३२-३२ वटा भातका ठूला-ठूला गोजाहरूको पनि त्यसबखत पूजा हुन्छ । यी ६४ वटा गोजाहरूलाई कसैले तेत्तीसकोटि देवीदेवता हुन् भन्छन् त कसैले ६४ योगिनीका रूपमा मान्दछन् ।

---

१ चण्डेश्वरमहादेवका पुजारी गौप्रसाद शिवाचार्यको कथनअनुसार

हुन पनि चण्डेश्वरीलाई योगिनीका रूपमा मानिएको प्रसङ्ग दाफाभजनगीतमा पनि नभएको होइन। त्यहाँ बलि दिन राखिएका हाँस, कुखुरा, बोका र राँगाको पूजा सकिएपछि कसाईहरूद्वारा तिनको बलि दिइन्छ। देवालयभित्र चण्डेश्वरीलाई कर्माचार्य पुजारीले पूजा गर्ने सिलसिलामा मन्दिरभित्र झुन्ड्याइराखेका घण्टहरू अकस्मात् शङ्खध्वनिका साथ बजाइन्छन्। त्यस बखत बाहिर बसिरहेका वादकहरूले कहँ र कसाईबाजा बजाउँछन्।

यसरी पूजाको विधि सकिएर बोकँ छाये (बलि दिइएका बोका आदिका मासु पकाएर चण्डेश्वरीदेवी र अन्य देवताहरूलाई चढाउने काम) गरेपछि त्यहाँ सिकाभ्वय खाइन्छ। भोजको काम सकेपछि गणेशका अगाडि एउटा सुपारी फुटाइन्छ, अनि अर्कै किसिमको कहँ र पोङ्गाको ध्वनि बजाएर बनेपातिर फर्किइन्छ। यसरी विधिवत् बर्सेनी मनाइने देशपूजा लायकुदरबारमा पुगेपछि सिद्धिन्छ। देशपूजाको दिन देशमा भल बग्ने गरी पानी पर्दछ भन्ने जनविश्वास छ।

उपर्युल्लिखित पूजाको विधि हेर्दा देशपूजाले देश (बनेपा) का विविध देवीदेवताका साथ यहाँका सबैजसो गणेशलाई समेटेको देखिन्छ। हुन पनि गणेशलाई कृषिसँग सम्बन्धित देवता मात्र नमानी पालक र रक्षकका रूपमा पनि मानिएको छ। त्यसमा पनि बिघ्ननाशकका रूपमा मानिएका यी विनायकहरूलाई कृषकहरूको मुख्य बाली धानको रोपाइँमा गुहारका लागि गरिने यो पूजामा बिघ्नबाधा हटाइदिनका लागि पनि यी देवतालाई यसरी पूजा गर्ने गरिएको हुनुपर्दछ।

उहिले यहाँ कृषकहरूले धान काटिसकेपछि धानलाई नझारी एकै ठाउँमा १०-१२ दिनसम्म चाङ राखेर थुपार्ने चलन थियो। यसलाई हाकुवा राख्ने भनिन्छ। हाकुवा कुट्ने खलामा परालका मुठाहरू चारैतर्फ ओछ्याइन्छन्। धान झारिसकेपछि सबै धान खलाको बीचमा थुपारी धानलाई लक्ष्मी भित्र्याउने भनेर पूजा गर्न लाग्दा सर्वप्रथम ओछ्याइएको त्यो खलाको बीचबाट एक मुठा पराल आधा-आधा उठाएर त्यसलाई गणेशका रूपमा पूजा गर्ने चलन थियो। यसबाट पनि गणेश कृषिका देवता हुन् भन्ने स्पष्ट हुन आउँछ।

बनेपाको देशपूजा साह्रै भव्य एवं महत्त्वपूर्ण छ। पहिले यो पूजा कस्तो थियो, कहिलेदेखि यो पूजाको सुरुवात भएको थियो, यसको विधि कस्तो थियो, कुन समूहले, कहाँ-कहाँ, कसरी-कसरी पूजा गर्दथे आदि कुराहरूको उल्लेख कतै पाइएको छैन। तर पनि बर्सेनी गर्ने गरिएको यो देशपूजामा केही विधि गुम भए पनि पूजा भने अद्यापि चल्दै आएको छ। केही वर्षपहिले यी



देवीदेवताहरूलाई पूजा गर्नुहुने बुद्धिलाल (सुत्र) बैदार, दिलु बैदार, लालु भालू, लालु चाकुबजी स्वर्गे भएपछि उहाँहरूका छोराहरू अभिरुचि राखेर (सम्भवत: जीवनको व्यस्तताले गर्दा) यसमा सहभागी बन्न सक्नुभएन। तर पनि यो पूजा चल्दै आएको छ। वास्तवमा यो देशपूजा समूहका केही मानिसहरूको सक्रियतामा चल्दै छ। यसमा लागिरहेका मानिसहरूले पनि आफूले पाएको खर्चले कत्ति पनि नपुग्ने गुनासो गरिएको सुनिन्छ। त्यस्तै कहँ, पोङ्गा, मुहाली आदि बाजा बजाउनेहरूले पनि आफूले पाउनुपर्ने कुत आदि नपाउँदा पर्वपर्वका कामहरू लोप हुन लागेजस्तो छ। यी सबै हाम्रा संस्कृति हुन्। यिनलाई बचाइराख्नु अति अनिवार्य छ। तर चाहिने रकम सम्बन्धित निकायले उपलब्ध गराउनुपर्छ।

बनेपामा पहिले धेरै किसिमका चाडपर्वहरू चलेका थिए। तिनीहरू बिस्तारै एकपछि अर्को गर्दै लोप हुँदै गइरहेका छन्। ९८ वर्षपहिले अक्षय तृतीयाका दिन बोकखजात्रा (रथजात्रा), करुणामयको तिकम्पा राखी धान्यपूर्णिमाका दिन गरिने अर्को जात्रा, १०८ वर्षपहिलेसम्म चलिरहेको यहाँकी देवी चण्डेश्वरीको मुकुन्डोनृत्य, ३०-४० वर्षपहिलेसम्म जन्यापूर्णिमामा इन्द्रको प्रतीक य:मद्यः उभ्याउने जात्रा, ८० वर्षजति पहिलेसम्म नववर्षको उपलक्ष्यमा विविध बाजासहित बिस्केटको लिङ्गो उभ्याउने जात्रा आदि महत्त्वपूर्ण जात्रापर्वहरूको हाल आएर हामीमा सम्झना मात्र बाँकी छ।[२]

१२ वर्षको एकपटक बनेपा ल्याइने श्वेतकालीको मुकुन्डोनृत्य अब यहाँ नल्याइने भएजस्तो छ। यो देशपूजामा पनि केही-केही विधिहरू हराउँदै गएका छन्। उदाहरणका लागि २७ वटा भालेकुखुराको बलि कुन-कुन देवीदेवतालाई दिने हो भन्ने कुरो अहिलेका सम्बन्धित मानिसहरूसँग सोद्धा उनीहरूले राम्ररी भन्न सक्तैनन् कि भन्ने डर छ। भौतिक जमानामा मानिसको व्यस्तताले गर्दा हराउँदै गइरहेका हाम्रा केही रीतिरिवाजझैं यो देशपूजा पनि कुनै दिन लोप होला भनी मानिसहरूलाई चिन्ता भइरहेको छ। अत: सम्बन्धित निकायले यसतर्फ समयमै ध्यान दिनु जरुरी छ।

**(साभार : काभ्रे टाइम्स, २०६२ चैत्र १५ गते मङ्गलबार)**

●

---

[२] बनेपा एक सिंहावलोकन, ज्ञानकाजी मानन्धर, आजाद मा० वि० स्मारिका, प्रकाशक आजाद मा० वि० बनेपा, २०३५

# बनेपाको मुकुन्डोनाच

पूर्वमा रक्तचन्दन भनिने चण्डेश्वरीजङ्गल, उत्तरमा था:गुजङ्गल र दक्षिणमा क्व:गुजङ्गलको पृष्ठभूमिमा काठमाडौँबाट २६ कि० मि० पूर्व, समुद्री सतहदेखि ४,८०० फिट उचाइमा रहेको सानो तर रमणीय उपत्यकामा अवस्थित प्राचीन नगरी बनेपाले आफ्ना छुट्टै किसिमका कला, संस्कृति, धार्मिक रीतिरिवाज र चाडपर्वहरू बोकेका छन् । वंशावलीमा उल्लेख भएअनुसार आधुनिक बनेपाको निर्माण राजा आनन्ददेवले चण्डेश्वरीको निर्देशनअनुसार कलेर्गताब्दा वर्ष ४१९७ मा गरेका थिए ।[१] उनले जगज्जननी माई चण्डेश्वरीलाई बनेपाकी इष्टदेवीका रूपमा मानेर देशका बिघ्नबाधा हटाउन आठ दिशामा आठ गणेशको स्थापना गरेका थिए ।

स्कन्दपुराणअनुसार चण्डासुर नामक दैत्यले पुरुषशक्तिले नाश गर्न नसक्ने वर पाइसकेपछि इन्द्रादि देवताहरूको अनुरोध स्वीकारेर देवी चण्डेश्वरीले त्यस असुरको वध गरिदिइन् र तिनै देवीको स्थापना यहाँ भयो । पछि देवीको चरित्रको व्याख्याका लागि मुकुन्डो लगाएर विभिन्न देवीदेवताहरूलाई सम्मिलित गराई देवीनृत्य गर्ने परम्परा सुरु भयो भनी म सानो छँदा मेरा बुबा मोहनलाल खिं मानन्धरले एकचोटि मलाई भन्नुभएको थियो । 'देवमाला वंशावली' अनुसार गुणकामदेव (प्रथम) ले महालक्ष्मीको निर्देशनअनुसार उपत्यकामा तीन ठूला सहरहरू (काठमाडौँ, भादगाउँ र पाटन) बनाई महालक्ष्मी, महाकाली र महासरस्वती नामका तीन देवीहरूलाई तीन सहरका इष्टदेवीका रूपमा स्थापना गरी प्रत्येक सहरका आठ दिशामा

[१] (क) देवमाला वंशावली, प्रकाशक : श्री पीरमहन्त क्षिप्रानाथ योगिराज, २०१३
(ख) Nepal - History of the Country and the People, Daniel Wright, Cosmo Publication, 1983 A. D., New Delhi



अष्टमातृकालाई रक्षाका लागि थप स्थापना गरेर तीन सहरमा तीन मातृकाहरूका अलग-अलग नृत्य चलाएका हुन् र ती अझै प्रचलित छन् ।[२]

मातृकानृत्य (मुकुन्डो लगाएर नाच्ने नाच) काठमाडौँ उपत्यकामा कुनै पर्व र अवसरमा नचाइने नाच हो जुन अहिलेसम्म पनि प्रचलित छ । यो नाच कुनै देवदेवीसँग सम्बन्धित हुन्छ । कि त भैरवसँग कि त देवीसँग राखेर समूह-समूह भई गणनृत्यको प्रदर्शन गरिएको हुन्छ । यसरी कुनै देवदेवीसँग सम्बन्धित मुकुन्डो लगाएर नाच्ने गणनृत्यलाई सम्बन्धित देवदेवीको प्रकट स्वरूप भनी मानिएको छ । ती नाचहरूमध्ये काठमाडौँको श्वेतकालीनाच र पाटनको हरिसिद्धिनाच त्यहाँका ज्यापूहरूले गर्ने गर्दछन् भने पाटनको गं प्याखं (नाच) गुभाजूहरूद्वारा सञ्चालित छ । धेरैजसो यस्ता गणनाच (जस्तै : कीर्तिपुरको बाघभैरव, भक्तपुरको नवदुर्गा, काठमाडौँको भद्रकाली र पचलीभैरव आदि नृत्य) हरू माली अर्थात् मालाकार, गथु, गाथा आदि समुदायका मानिसहरूले चलाउने गर्छन् । यी नाचहरूमध्ये कुनै नाच प्रत्येक वर्ष गरिन्छन् भने कुनै नाच प्रत्येक १२ वर्षमा एकपटक गरिन्छन् । यस्ता नाचहरू खालि काठमाडौँ उपत्यकाका तीन सहरहरूमा मात्र गरिने होइनन्, ती सहरहरूभन्दा बाहिर पनि गरिन्छन् । साँखुकी खड्गयोगिनी (वज्रयोगिनी), ठेचोकी महालक्ष्मी, खोकनाकी रुद्रायणी, पनौतीकी ब्रह्मायणीका नाचहरू यसका उदाहरणहरू हुन् । यसरी मुकुन्डो लगाएर नाच्ने गणनृत्य दोलखा, नुवाकोट, पाल्पा, बाग्लुङ आदि ठाउँहरूमा पनि हुने गर्दछन् ।

मातृकागणनृत्य मूलत: दुई प्रकारका छन् – आनुष्ठानिक र मनोरञ्जनात्मक । आनुष्ठानिक गणनृत्य गुह्य पूजाविधि र तन्त्रसँग सम्बन्धित छ भने मनोरञ्जनात्मक नृत्यमा यस्तो कुनै गुह्य विधि हुँदैन । कुनै बखत आवश्यक परेको खण्डमा अथवा कुनै उत्सवको आयोजना गरियो भने मनोरञ्जनका लागि मुकुन्डो लगाएर नाच्ने गणनृत्य प्रस्तुत गरिन्छ । यसको कुनै निश्चित ठाउँ र समय हुँदैन । यो कुनै गुठीअन्तर्गत पनि हुँदैन । यो छोटो समयका लागि मात्र हुने गर्दछ । तर आनुष्ठानिक गणनृत्य भने कुनै एक जाति अथवा गुठीअन्तर्गत निश्चित समय र स्थानमा देखाइने नृत्य हो । यसको विधि ठूलो हुन्छ । यो तान्त्रिक विधिअनुसार गरिने नृत्य हो । यो खर्चिलो पनि छ । यो कुनै ऐतिहासिक र आख्यानिक पृष्ठभूमिमा चलाइएको नृत्य हो । यसको आफ्नै इतिहास छ । यसले जनमानसमा राम्रो प्रभाव पारेको छ । विधि र तन्त्रबाट देवीदेवताहरूको मुकुन्डोमा जीवन्यास गर्ने गरिएकाले 'यिनीहरू

[२] अष्टमातृका मुकुन्डो नृत्य-नाटक : एक जीवन्त सांस्कृतिक परम्परा, तुलसी दिवस, मधुपर्क, वर्ष २५ अङ्क १२, वैशाख २०५०

देवीदेवता नै हुन्' भनी मानिसहरू तिनलाई श्रद्धा र भक्तिसाथ आदर गर्छन्, अझ कतिपयले पूजा पनि गर्दछन् । यस्तो नृत्य लामो समयसम्म चलिरहन्छ ।

आनुष्ठानिक नृत्यहरू दुई किसिमका हुन्छन् – प्रत्येक वर्ष प्रस्तुत गरिने गणनृत्य र प्रत्येक ६ अथवा १२ वर्षमा देखाइने गणनृत्य । यी नृत्यहरूका मूल देवतामा सामान्यतया कुनै देवी एक मातृका अथवा अजिमा हुन्छिन् भने कुनै देव एक भैरव हुने गर्दछन् । यी गणनृत्यहरू कुनैलाई मातृका प्याखं (नाच), कुनैलाई अजिमा प्याखं, कुनैलाई भैरव प्याखं र कुनैलाई गथु प्याखं भन्ने चलन छ । खास गरी यी नृत्यहरू नेवारहरूको बाहुल्य भएका ठाउँहरूमा देखाइने गरिन्छन् । भक्तपुरको नवदुर्गानृत्य प्रत्येक वर्ष प्रस्तुत गरिन्छ भने कीर्तिपुरको बाघभैरवनृत्य प्रत्येक १२ वर्षमा मात्र प्रस्तुत गरिन्छ ।

साँगा, नाला, धुलिखेल, श्रीखण्डपुर, चौकोट र पनौतीजस्ता ऐतिहासिक र धार्मिक स्थलहरूका बीचमा अवस्थित ऐतिहासिक नगरी बनेपामा मुकुन्डो लगाएर नाच्ने नाचका रूपमा भक्तपुरको नवदुर्गानृत्य प्रत्येक वर्ष प्रस्तुत गर्ने गरिन्छ । काठमाडौँको श्वेतकाली (नरदेवी) नृत्य पनि प्रत्येक १२ वर्षजतिको अनुकूल समयमा एकपटक यहाँ प्रस्तुत गरिन्छ । तलापुखु (तलेजुपोखरी) अगाडिको गणेशमन्दिरमा नवदुर्गा देवीदेवताका मुकुन्डोहरू र पोसाक ल्याएर राखेपछि तन्त्रविधिको सबै काम सम्पन्न गरिन्छन् । त्यसपछि मुकुन्डो लगाएर त्यहीँ गणनाच गराई देशभित्र प्रवेश गराइन्छ ।

नवदुर्गानृत्यको प्रदर्शन बनेपाका विभिन्न ठाउँमा ३ दिनसम्म हुन्छ । नवदुर्गानृत्य बनेपा सात गाउँ (बनेपा, साँगा, नाला, धुलिखेल, श्रीखण्डपुर, चौकोट र पनौती) मा प्रस्तुत गरिन्छ । तर १२-१२ वर्षमा ल्याइने नरदेवीको श्वेतकालीनृत्यचाहिँ बनेपाको लायकुदरबारनजिकै रहेको एउटा डबलीमा मात्रै देखाइने गरिन्छ । यो नृत्य यहाँका अन्य ठाउँहरूमा प्रदर्शन गरिँदैन । यहाँकी आराध्यदेवी चण्डेश्वरीसँग श्वेतकालीको सम्बन्ध भएको हुँदा श्वेतकालीनृत्य यहाँ प्रस्तुत गर्न ल्याउने गरिएको हुनुपर्दछ भन्नेहरू नभएका होइनन् । दैत्यसँग प्रेममा फसेपछि कुमारी र दैत्यको प्रेम छुटाउन आमा श्वेतकालीले खेलेको भूमिका उक्त नृत्यमा प्रस्तुत गरिन्छ । यो कुरा नृत्यमा गरिने हाउभाउबाट प्रतीत हुन्छ । अन्तमा आमा श्वेतकालीले छोरी कुमारीलाई आफ्नो देब्रे हत्केलामा तयार पारेको जाँड खुवाएपछि रिसले आगो भएकी कुमारीले चण्डेश्वरीको रूप धारण गरी दैत्यको वध गर्छिन् । यो नृत्य सनसनीपूर्ण र नाटकीय ढङ्गको छ । यो गणनृत्यमा बजाइने कहँ, पाँगा आदि बाजाको ध्वनि गर्भवती आइमाईले सुनी भने उसको गर्भपतन हुन्छ अथवा पेटभित्रको बच्चा अपाङ्ग हुन्छ भन्ने बनेपालीहरूको धारणा भएको बुझिन्छ ।



हरिसिद्धिनृत्य यहाँ भित्र्याइँदैन । किनभने बनेपाकी चण्डेश्वरी र हरिसिद्धि एक-अर्कासँग मिल्दैनन् । यी देवीहरू एक-आपसमा नमिल्नुको कारणबारे एउटा रोचक आख्यान पनि रहेको छ । त्यसैले यो नृत्य यहाँ नल्याइएको हो र यही कारणले बनेपालीहरू हरिसिद्धिको मन्दिरमा जाँदैनन् । त्यहाँ जानु हुँदैन भन्ने बनेपालीहरूको विश्वास रहेको छ । हरिसिद्धिगणनृत्य धुलिखेलमा लैजाँदा बनेपाबाहिरको बाटो गरी लगिन्थ्यो । देवी हरिसिद्धिलाई धुलिखेलका मानिसहरूले असाध्यै मान्दछन् ।

मनोरञ्जनात्मक देवीनृत्य पनि बनेपामा बेलाबखतमा देखाइने गरिन्थे । यस्तो नृत्यको आयोजना मेरै पिताजी मोहनलाल खिं मानन्धरले गर्नुभएको मैले देखेको छु । मेरा पिताजी नाटककार हुनुहुन्थ्यो । आफ्नो जीवनकालमा देवीदेवताहरूसँग सम्बन्धित धेरै नाटकहरू लेखेर उहाँले डबलीहरूमा प्रस्तुत गर्नुभएको थियो । उहाँ बनेपाका 'वांख्य भजन खल' को वाद्यवादनका गुरु पनि हुनुहुन्थ्यो । उहाँ आफ्नो नाटकका पात्र देवीदेवताको गण मिलाएर मङ्गलाचरणमा देवीनृत्यको एक दृश्य अति रोचक ढङ्गले प्रस्तुत गर्नुहुन्थ्यो । तर ती देवीका गणमा सधैँ उही पात्र हुँदैनथ्यो । कुन देवता वा देवी नाटकमा छन्, तिनै देवदेवीको गण मिलाएर नाटकमा देवीनृत्य पनि प्रस्तुत गर्नुहुन्थ्यो । तर ती नृत्यहरू नियमित हुँदैनथे, चाहेको बखतमा मात्र देखाउने गरिन्थ्यो । खिं, ढोलक, पछिमा, भुछ्या, ताः आदि बाजाका तालमा नाचिने यो नृत्य अति नै रोचक हुन्थ्यो । वि० सं० २०५५ सालमा बनेपा-महोत्सवको अवसरमा मेरा जेठा दाजु आशाकाजी खिं मानन्धरले यस्तै मनोरञ्जनात्मक मुकुन्डोनृत्य प्रस्तुत गर्नुभएको थियो । यसबाहेक पर्वपर्वमा यहाँ लाखेनृत्य पनि हुने गर्दछ ।

भनिन्छ – मुकुन्डो लगाएर गरिने देवी चण्डेश्वरीको कथाको व्याख्या गरिएको कुमारीनृत्य बनेपामा प्रत्येक वर्ष प्रस्तुत हुने गरेको थियो । त्यो कुरा वि० सं० २०३५ सालमा बनेपाको आजाद मा० वि० ले आफ्नो वार्षिकोत्सवका अवसरमा प्रकाशन गरेको 'स्मारिका' का लागि मैले 'बनेपा : एक सिंहावलोकन' शीर्षकको लेख लेख्ता मेरा पिताजीले मलाई सुनाउनुभएको थियो । मलाई त्यति बेला त्यस कुराप्रति त्यति चासो नभएकाले त्यससम्बन्धी धेरै कुरा बुझ्न पाएको थिइनँ । अहिले त्यो कुरा बुझ्नका लागि यहाँका धेरै बूढापाकाहरूसँग सम्पर्क राखी सोद्धा सबैले उक्त नृत्य बनेपामा चलाइएको कुरा नै थाहा नभएको कुरा गरे । देवी (कुमारी) नृत्य हटेर गएको नै १०८ वर्ष भइसकेकाले अहिलेका बूढापाकाहरूलाई पनि त्यो कुरा थाहा नभएको हुन सक्छ ।

त्यो नृत्य आनुष्ठानिक थियो, मनोरञ्जनात्मक थिएन । तर त्यसको विधि कस्तो थियो, मुकुन्डोहरू कहाँ राख्थे, नृत्यगणका नायक वा गुरु को थिए भन्ने कुराचाहिँ ज्ञात भएन । भनिन्छ, त्यो नृत्य अत्यन्तै गहकिलो, अर्थपूर्ण, तन्त्रयुक्त र नाटकीय पनि थियो । श्रावण महिनाको कृष्णपक्षको चतुर्दशी अर्थात् गठेमङ्गल (घण्टाकर्ण) का दिन कीर्तिपुरमा बाघभैरवमन्दिरको पश्चिमपट्टिको भित्ताको खोपामा स्थापना गरिएका नृत्येश्वर (नासः द्यः) लाई किसिलि (पालामा चामल, पैसा र सुपारी राखी सङ्कल्प गरिएको वस्तु) मा साधना गरी तान्त्रिक विधिपूर्वक एक गोप्य कोठामा राखेर देवीदेवताहरू धरातलमा पुनः आगमन भएको खुसियालीमा नृत्येश्वरलाई एउटा भेडा बलि दिई भोज खाने चलन भएजस्तै भक्तपुरमा पनि सोही दिनमा नवदुर्गागणमध्येका नृत्यकार (गथु) ले खेतबाट विधिपूर्वक कालो माटो ल्याई त्यस माटोबाट एउटा शिवलिङ्गको सिर्जना गरेपछि यस धरतीमा देवीदेवताहरू (जो भलभल अष्टमी (भगस्ति) को दिनदेखि पानीभित्र प्रवेश गरेका थिए) को क्रमशः आगमनको थालनी हुन्छ ।[३] तर बनेपाको कुमारीनृत्यमा के गरिन्थ्यो, गठेमङ्गलचह्रेको दिनको विधि के थियो, भलभल अष्टमीको दिनमा कसरी अन्त गरिन्थ्यो, अहिले आएर खोजको विषय भएको छ ।

नेवारसमुदायको संरचना सारै राम्रो छ । यो समुदायको बसोवास भएका ठाउँहरूमा बहाल, पाटी, ननी, पोखरी, धारा, इनार, डबली, चोक आदि हुन्छन् । अनि पर्वपर्वमा चल्ने नृत्यहरू तिनै डबलीहरूमा प्रस्तुत गरिन्छन् । बनेपाको ऐतिहासिक कुमारी मुकुन्डोनृत्य पनि लायकुदरबारको डबलीमा प्रारम्भ भएपछि अन्य डबली र चोकहरूमा प्रस्तुत हुने गर्दथ्यो । ३२ गणको यो नृत्यमा बनेपाका विविध जातका मानिसहरू सम्मिलित भएका हुन्थे । यो नृत्यमा प्रधान खलकका एक व्यक्तिले भैरवको मुकुन्डो लगाएर गणनृत्यमा भाग लिने गर्दथे । दुवाल खलकका मानिस गणेशको मुकुन्डो लगाएर सहभागी बन्थे । जस्तोसुकै गणनृत्यमा पनि भैरवको भूमिका ठूलो हुन्छ । किनभने भैरवले संरक्षकको भूमिका खेलेका हुन्छन् । तन्त्रसँग सम्बन्धित देवता भैरवलाई शिवको उग्र रूप मानिएको छ । "......... महाभयङ्कर रौद्र रूपका वेदपुरुष नै तन्त्रको दृष्टिमा भैरव मानिन्छन् ।"[४] त्यस्तै गणेशको भूमिका पनि यसमा कम हुँदैन भनी मलाई मेरा बुवाले भन्नुभएको थियो । सिद्धिदाता गणेश

[३] ज्ञानकाजी मानन्धर :
(क) भक्तपुरकी नवदुर्गा, पूर्वीय दर्पण, वर्ष १ अङ्क २८०, शनिवार १२ वैशाख २०६१
(ख) कीर्तिपुरका बाघभैरव, काभ्रे हटलाइन, वर्ष १ अङ्क ११, शुक्रवार १६ श्रावण २०६१

[४] श्री वटुकभैरव साधना, डा० रुद्रदेव त्रिपाठी



मातृकागणका नायक मानिन्छन् ।[५] आठ दिशामा आठ गणेशलाई प्रतिष्ठापित गरी निर्माण गरिएको यो विनयापुरी देश (बनेपा) मा विनायकको ठूलो भूमिका हुने गरेको छ र यो मुकुन्डोनृत्यमा पनि गणेश (विनायक) को महत्त्वपूर्ण भूमिका हुनु स्वाभाविकै हो । यो नृत्यमा अन्य गणजस्तै कवं (कङ्काल) र भुचा (भूत) को पनि ठूलो भूमिका रहेको थियो ।

भनिन्छ, देवी चण्डेश्वरीलाई कङ्काल र भूतले मीठो-मीठो कुरा गरी फकाउँदै यहाँ ल्याएर स्थापना गरेका थिए । साँखुकी खड्गयोगिनीका सहचर सिंघिनी र ब्यांघिनी अनि नवदुर्गाका द्वारपालिका देवीहरू सिम्ब र दुब्ब भएजस्तै देवी चण्डेश्वरीका लागि साथ चाहिने कङ्काल र भूत हुन् भनी मैले सुनेको थिएँ ।

खुपा खलकका मानिस सिंह भई नाच्ने यो नृत्यमा कङ्काल र भूत भई कुन-कुन खलकका मानिसहरू नाच्थे भन्ने कुरा सोधपुछ गर्दा हाल कसैलाई थाहा भएन । यसरी कुमारी र अन्य मातृकागणका विविध पात्रहरू कुन जातका मान्छेहरू हुने गर्थे भन्ने कुरा अहिले आएर थाहा पाइनसक्नु भएको छ । तर कहँ, पोङा, खिं, ढोलक, भुछ्या र अन्य बाजाहरू मानन्धर जातका मानिसहरूले बजाउने गर्दथे । यसरी मुकुन्डो लगाएर बाजाको तालमा नाच्ने गणनृत्य र बाजाको ध्वनिले बिघ्नबाधा हटाई देशमा सुखशान्ति ल्याइदिन्छ भन्ने जनविश्वास थियो ।

बनेपामा कुमारीनृत्यका विषयमा एउटा रोचक किंवदन्ती छ । एक मल्लराजा (जगज्ज्योति मल्ल ?) का दुई रानी थिए । ती दुवै रानी एक-अर्कासँग मिल्दैनथे । बनेपाको केन्द्रस्थल स्वधाः (तीनधारा) को डबली (जहाँबाट स्वायाँपुन्हिको दिनमा चण्डेश्वरीको रथयात्रा सुरु गरिन्छ) मा त्यो कुमारीनृत्य देखाइँदा एउटी रानी तीनधारामाथिको दरबारबाट उक्त नृत्य हेर्ने गर्दथिन् त अर्की रानी दक्षिणपट्टिको घरको अति कलात्मक ढङ्गले ५ नागहरू कुँदिएको झ्यालबाट सो नृत्य नजर गर्दथिन् । त्यसरी दुईतिरबाट रानीहरूले सो नृत्य हेरिरहँदा जेठी रानीलाई डाह भएर कुमारीनृत्य छेक्न उनले डबलीको दक्षिणतिर एउटा ढुङ्गाको स्तम्भ ठड्याएर त्यसमाथि पञ्चबुद्ध सम्मिलित गराई एउटा चैत्यको स्थापना गरिदिइन् । उक्त चैत्य त्यस ठाउँमा अद्यापि विद्यमान छ ।

भक्तपुरको नवदुर्गानृत्य बनेपामा भित्र्याउनुभन्दा केही दिनअगाडि नवदुर्गाका गथुहरू यहाँ आई फूल, पसुका (नवदुर्गाको प्रसाद मानिने पवित्र

[५] ऐ० ऐ० नं० २

रङ्गीन धागो) द्वारा भोछिभोया खलकका सम्बन्धित व्यक्तिहरूलाई नवदुर्गा बनेपामा यो दिनमा आउने भनी किटानका साथ भन्दछन् । त्यसै बखत मानन्धरहरूको खगुठी (चण्डेश्वरीको रथ बनाउने गुठी) र सीगुठीका गुठियारहरूलाई पनि किसिलि दिई नवदुर्गा आउने निश्चित दिन भनेर गएपछि सीगुठी र खगुठीका गुठियारहरूले भैरवका रूपमा मानिराखेको जाँडको घ्याम्पो बोकी कसाईबाजा, कहँ, पाँगा, म्वाहाली आदि बजाई सिपाख्य: (बनेपाको दक्षिणपट्टिको जङ्गलनजिकै रहेको एक चौर) मा सिपाक्व: (मृत्युसँग सम्बन्धित पूजाविधि) गरिसकेपछि मात्र नवदुर्गालाई बनेपामा ल्याउने चलन छ ।[६] गठुहरूले प्रसाद दिने चलन अहिलेसम्म चलिरहेको छ, तर सिपाक्व: जाने विधि भने हराइसकेको छ ।

पहिले-पहिले कुमारीनृत्यको थालनी गर्दा के-के विधिहरू गर्नुपर्थ्यो, गुरुहरू को-को थिए, मुकुन्डोहरूमा जीवन्यास (प्राणप्रतिष्ठा) गर्नेहरू को-को थिए (सम्भवत: यो कार्य कर्माचार्यहरूद्वारा गरिएको हुन सक्छ) आदि कुराहरूमा अनुसन्धान गर्न बाँकी नै छ । ञन्यापूर्णे (भाद्र शुक्लपूर्णिमा) को उपलक्ष्यमा प्रदर्शन गरिने यो कुमारीनृत्य कहिलेसम्म नचाइन्थ्यो र कहिले टुङ्गिएको थियो, अहिले कसैलाई थाहा छैन । भद्रकालीनृत्यका मुकुन्डोहरू कालमोचनघाटमा, पचलीभैरवनृत्यका मुकुन्डोहरू टेकुदोभानमा, नवदुर्गाका मुकुन्डोहरू ब्रह्मायणीघाटमा, बाघभैरव (गथु प्याखं) का मुकुन्डोहरू दिखुदेप चिहानमा लगी एकै ठाउँमा राखेर गणेशले दागबत्ती दिई जलाएजस्तै बनेपाको कुमारीनृत्यका मुकुन्डोहरू उग्रतीर्थघाटमा लगी जलाइन्थे । तर दागबत्ती दिने को हुन्थ्यो, यो खोजको विषय भएको छ ।

यसरी बनेपाको एउटा महत्त्वपूर्ण सांस्कृतिक इतिहास लोप भएको छ । सम्बन्धित निकायले यसलाई पुनर्जीवित गराउनु आवश्यक छ ।

**साभार : .'नेपाल मण्डलको मुकुन्डोनृत्य', वि० सं० २०६२**
**'भुजङ्ग' काभ्रे क्याम्पसको मुखपत्र) वि० सं० २०६२**

●

---

[६] 'कुमारी' को भूमिका, ज्ञानकाजी मानन्धर, प्रकाशिका : सुखवेती मानन्धर, ने० सं० ११२३



# बनेपाको सूर्यमूर्ति र बनेपाली रामवर्द्धनहरू

काभ्रेपलाञ्चोक जिल्लाको केन्द्रस्थल प्राचीन नगरी बनेपाले कला, संस्कृति तथा धार्मिक रीतिरिवाजको पनि छुट्टै किसिमको महत्त्व बोकेको छ । विभिन्न किसिमका राम्रा-राम्रा काष्ठकला, धातु, ढुङ्गा र काष्ठनिर्मित मूर्तिहरू यहाँका विभिन्न ठाउँ र घरहरूमा प्रतिस्थापित छन् । तीमध्ये लायकुदरबारस्थित ढुङ्गेधारापरिसरमा रहेका विविध मूर्तिहरूमध्येको सूर्यमूर्ति पनि एक हो ।

सूर्य सम्पूर्ण जगत्का आत्मा हुन् (ऋग्वेद) । उनी नै सबै प्राणीहरूका आँखा खुलाइदिने देवता हुन् । उनलाई प्राणीमात्रका पालक र रक्षकका रूपमा मानिएको छ । त्यसैले होला हाम्रो राष्ट्रिय झन्डामा चन्द्रका साथै सूर्यको चिह्न पनि अङ्कित छ । 'नेपाल तथा भारतमा सूर्यको पूजाको प्रारूप ऋग्वैदिक कालदेखि स्पष्ट रूपले देखिएको थियो ।'[१] चाहे नेपालमा होस् चाहे भारतमा, चाहे इजिप्टमा होस् चाहे विश्वका अन्य कुनै मुलुकमा, ग्रहनायक सूर्यलाई ठूला देवताका रूपमा मानिएको कुरा त्यहाँका धर्मशास्त्रमा उल्लेख भएका कुराहरूले देखाउँछन् । ग्रीक साहित्यमा पनि ग्रीस र ट्रोयको युद्धमा सूर्यको भूमिकालाई अत्यन्तै प्रभावकारी शक्तिका रूपमा वर्णन गरिएको छ । हाम्रो समाजमा कौसी अथवा घरका अन्य ठाउँहरूमा पूर्वपट्टि फर्केर बिहान-बिहान बत्ती अर्पण गरी सूर्यदेवको पूजा गर्ने चलन अद्यापि चल्दै आएको छ । 'सूर्यतापिनी-उपनिषद्' १-६ मा 'एष ब्रह्मा च विष्णु: च रुद्र: एष हि भाष्कर:' भन्ने उल्लेख भएअनुसार ब्रह्मा, विष्णु र महेश्वरका संयुक्त रूप नै सूर्य हुन् भन्ने तथ्य स्पष्ट हुन्छ ।[२]

---

[१] हिन्दू देवीदेवता, हरिराम जोशी, प्रकाशक : श्री ५ को सरकार, सञ्चार मन्त्रालय, सूचना विभाग, २०४०

[२] विरिञ्चिनारायण, जीतबहादुर मानन्धर, प्रकाशिका : श्रीमती तारादेवी मानन्धर, लायकुसाल, काठमाडौँ, २०४६

हामी सूर्यलाई 'सूर्यनारायण' भन्ने गर्दछौं । 'भागवत' मा पनि भगवान् श्रीकृष्णको मुखबाट 'आदित्यनाम अहं विष्णु:' भनी व्यक्त भएको छ ।[३] 'महाभारत' को 'वनपर्व' मा सूर्यलाई १०८ नामले प्रस्तुत गरिएको छ । फेरि, कुनै ग्रन्थमा राज्ञी, सुवर्ण, सुवर्चसा र छाया नामका सूर्यका पत्नीहरूको वर्णन गरिएको छ त कुनैमा रेवन्त, यम, मनु र द्वित्य नामका सूर्यका ४ छोराहरू भनी मानिएको छ ।

मानिस जब ७७ वर्ष, ७ महिना, ७ दिन, ७ घडी र ७ पलामा पुग्दछ, त्यो समय उसका लागि अति भयावह घडी हुन्छ । त्यसैले त्यो दशा टार्न हाम्रो समाज र संस्कृतिमा उसको 'जन्को' (भीमरथारोहण) गर्ने चलन छ । त्यस बखत रक्षकका रूपमा मानिएका सूर्यलाई मण्डपको बीचमा राखी यी देवताका अनुचरहरूका साथ आफ्ना दुई देवीहरू दुईतिर र अर्को दुई ठाउँमा अन्धकारलाई हटाउन वाण हानिरहेका अन्य दुई देवीहरूका साथै रातो रङ्गका सूर्य र सात घोडायुक्त रथ हाँकिरहेका रातै रङ्गका उनका सारथि गरुडका भाइ अरुण र सूर्यदेवको घेराबाहिर इन्द्र, यम, वरुण, कुवेर, नैरात्मा, अग्नि, वायु र ईशान भएका मण्डप लेखी भीमरथारोहण गर्ने चलन पनि नभएको होइन ।[४] यसरी हाम्रो धर्म र संस्कृतिमा सूर्यको यति धेरै महत्त्व भएको हुँदा हाम्रो देशका विभिन्न देवस्थल, तीर्थस्थल, घाट, ढुङ्गेधारा आदि ठाउँहरूमा प्राचीन कालदेखि अति कलात्मक ढङ्गले गहकिला अर्थ खुल्ने गरी ढुङ्गामा सूर्यदेवताका मूर्तिहरू कुँदेर स्थापना गरिएको पाइन्छ । तीमध्ये कतिपय त हाम्रो देशबाहिर पनि पुगिसकेका छन् ।

बनेपाका उत्कृष्ट कलाहरूमध्ये यहाँको लायकुदरबारनजिकैको ढुङ्गेधारापरिसरमा स्थापित सूर्यमूर्ति एक हो । सात घोडाहरूलाई तान्न लगाएर र अरुणलाई सारथी बनाएर अन्धकारका प्रतीक दुई दैत्यहरूलाई देखाई कालिमालाई पेल्दै रथ दौडाइरहेको यो सूर्यमूर्ति राम्रो ढुङ्गामा अति कलात्मक ढङ्गले कुँदिएको छ । यहाँ सात घोडाहरूलाई सात रङ्ग (प्याजी, नीर, नीलो, हरियो, पहेंलो, सुन्तला र रातो) को प्रतीकका रूपमा मात्र होइन, सूर्यका यी सप्ताश्वलाई सूर्यकिरणका रूपमा पनि देखाइएको छ । यी किरणलाई 'ज्ञानरश्मि' पनि भनिन्छ ।[५] यो कलाकृतिमा सूर्यका दुई सँगिनी उषा र प्रत्युषा दुईतिर राखेर वाणले हान्न लगाई मकरध्वज भन्ने रथमा सूर्यलाई प्रफुल्ल

---

[३] ऐ० ऐ० नं० १

[४] Sacred Art of Nepal, मीनवहादुर शाक्य, प्रकाशक : Handicraft Association of Nepal, 2002 A. D.

[५] ऐ० ऐ० नं० १



मुद्रामा आफ्ना दुवै हातले कमलको फूल समाएर उभिएका देखाइएको छ । ढुङ्गामा कुँदिएका सूर्यमूर्तिहरू कति त चोरिएर विदेशिए पनि, तर केही हाम्रो जिल्लामा बाँकी नै छन् । पनौतीको इन्द्रेश्वरमहादेवको पश्चिमपट्टि स्थापित सूर्यमूर्ति अत्यन्तै अवलोकनयोग्य छ । दुईतिरका दुई दैत्यहरूलाई पेल्दै सूर्यका दुई सँगिनी उषा र प्रत्युषालाई दायाँ र बायाँतिर उभ्याएर वाण हानिरहेको देखाइएको यो सूर्यमूर्तिमा सात घोडाको रथ हाँकिरहेका अरुणका साथै आठ ग्रहका बीचमा ग्रहनायक सूर्य उभिएका छन् । सबैभन्दा माथि सृष्टिका प्रतीक शिवलाई देखाइएको छ । त्यस्तै, अन्य ठाउँहरूमा स्थापित सूर्यमूर्तिहरू पनि उत्तिकै अध्ययनलायक छन् । तर यी मूर्तिहरूको निर्माण कहिले भएको थियो र कलाकारहरू को-को थिए भन्नेलगायतका अन्य कुराहरू यिनीहरूका पादपीठमा अभिलेख नभएकोले गर्दा ज्ञात गर्न सकिएको छैन ।



**बनेपाको सूर्यमूर्ति**
**तस्बिर : भुवन मानन्धर**

बनेपाको सूर्यमूर्ति भने कलापूर्ण मात्र नभई यसको कलाको महत्त्व अर्को पनि छ । पहिले-पहिले आफूले अति परिश्रम गरेर उच्चतम कलाको सिर्जना गरे तापनि कलाकारले त्यो कलाकृतिमा आफ्नो नाम समावेश गर्दैनथे । किनभने कलाकारहरूलाई उनका कलाकृतिहरूमा नाम राख्न नै दिइँदैनथ्यो ।

यसका दुई मुख्य कारणहरू थिए – (१) कलाकारहरूलाई सामाजिक मान्यता र यथोचित सम्मान दिने प्रचलन थिएन र उनीहरू ज्यालामा काम गर्ने डकर्मी-सिकर्मी आदिसरह मात्र गनिन्थे, र (२) कलाकारहरू उच्च कोटिका भए भने तिनीहरूले अन्य स्थानहरूमा पनि गई त्यस्तै बेजोड या अझ उन्नत कलाकृतिहरू तयार गर्लान् र त्यसबाट आफ्नो नाउँ घट्ला भन्ने डर काम लगाउनेहरूलाई हुन्थ्यो । तर बनेपामा प्रतिस्थापित यो सूर्यमूर्तिमा दुईजना कलाकारको नाम त्यसै मूर्तिको पादपीठमा समावेश गरिएको छ । विश्वकर्मासमानका शिल्पीका छोरा राज मुल्मी र जयत मुल्मी दुई दाजुभाइको संयुक्त प्रयासबाट वि० सं० १४५० मा बनाउन लगाइएको त्यस मूर्तिको पादपीठमा उत्कीर्ण अभिलेखको केही अंश यसप्रकार छ –

श्रीमत् श्री जयसिंहराम राजस्यानुज श्रीमद् श्री मदनरामया पालिनौ श्री वणिकापुरीस्थाने । संस्थापिता आदित्यमूर्ति देवता ॥ द्विज श्रीराजश्रमेन ययामान सब्बैः । ........ देवशिल्पीन्यश्च विश्वकर्म्मणस्यात्मजौ राज मुल्मी ........ ।

उपर्युक्त अभिलेखअनुसार जयसिंहरामका भाइ बनेपाका शासक मदनसिंहरामको समयमा बनेको यो सूर्यमूर्ति कलाको दृष्टिले अत्यन्तै महत्त्वपूर्ण छ ।[६]

नेपालको इतिहासमा जयसिंहराम प्रतिभाशाली, साहसिला र दरिला राजनीतिज्ञ तथा योग्य र दक्ष प्रशासक पनि थिए । त्यस बखतका शिलालेख, इतिहास, वंशावली आदि हेर्दै गएमा जयसिंहराम वर्द्धन मात्र होइन, उनैका पुस्ता रामवर्द्धनहरूको पनि महिमा देखिन्छ । गोपालराज वंशावलीमा पनि यी रामवर्द्धनहरूका चर्चा-परिचर्चा धेरै ठाउँमा पाइन्छन् ।

जयसिंहरामका बाजे ज्योतिराम वर्द्धन महामन्त्री थिए । त्यस बेला राजा जयराजदेवसँग मिली बनेपा पनि जितेको कुरा गोपालराज वंशावलीमा उल्लेख छ । जयराजदेव मल्ल राजकुलका थिए । त्यसताका नेपालको राजनीतिक परिस्थिति अन्योलपूर्ण थियो । नेपाल सम्वत् ४६७ (वि० सं० १४०४) श्रावण कृष्ण चतुर्थीका दिन दुवै राजकुलको अनुमतिले सबैको सल्लाहमा जयराजदेव (जयार्जुनदेवका बाबु) राजा बनाइएका थिए (गोपाल राजवंशावली) ।

ज्योतिरामका छोरा अनेकराम वर्द्धन पनि महामन्त्री थिए । दरबारसँग राम्रो र बलियो सम्बन्ध भएका उनका कार्यहरू प्रशस्त मात्रामा पाइन्छन् ।

---

[६] नेपालको मध्यकालीन कला, मनवज्र वज्राचार्य, प्रकाशक : सूचना तथा प्रसार मन्त्रालय, सूचना विभाग



उदाहरणार्थ ने० सं० ४६७ (वि० सं० १४०४) आश्विन शुक्ल तृतीयाका दिन श्री देवलदेवी र महाथ (महामन्त्री) अनेकराम मिली मनिगलको राज्य हात लगाए । महिखु, कीर्तिपुर, बलम्ब, येताक्वाठ, ख्वयंप पनि कब्जा गरे ।[७]

अनेकराम वर्द्धनका छोरा जयसिंहराम वर्द्धनले जयार्जुनदेव मल्ल युवराज छँदै उनका हजुरियाको काम गरेका थिए । उनी राजा छँदा जयसिंहरामले महामन्त्रीका रूपमा हरतरहले उनलाई साथ दिएका थिए । अर्जुन मल्लहरू र रामवर्द्धनहरू बनेपाली थिए ।[८]

त्यस बखत भारदारहरूले बखत-बखतमा विद्रोह गरिराख्ता नेपालको राजनीतिक अवस्था अत्यन्तै खराब थियो । जयसिंहरामका बाबु अनेकरामले धेरैपटक हतियार उठाई ती विद्रोहहरू दमन गरेका थिए । यसरी अनेकरामले राजालाई सहयोग गरिरहेका हुँदा यिनको शक्ति दरबारमा बढेको थियो । त्यसैले सानैदेखि राजकुमार जयार्जुनदेव र जयसिंहरामका बीच राम्रो र बलियो सम्बन्ध हुन गयो । त्यस बेला पूर्वी भेगको शासनका दृष्टिले बनेपा एक किसिमको केन्द्रस्थल थियो ।

वि० सं० १४११ मा नायकदेवीकी छोरी राजल्लदेवी आठ वर्षकी भइन् । उनी आमाजस्तै गद्दीकी हकदार थिइन् । बज्यै देवलदेवीको प्रयत्नले यसै वर्षमा जयस्थिति मल्ललाई वरका रूपमा बाहिरबाट ल्याई भक्तपुरमा भित्र्याइयो । जयराजदेवपछि उनका छोरा जयार्जुनदेवले १४ वर्षको कलिलो उमेरदेखि सिंहासनमा बसी बनेपाभेगको सारा शासन चलाएका थिए ।[९]

राजल्लदेवीसँग जयस्थिति मल्लको विवाह भएको थियो । ने॰ सं॰ ५०१ मा जयस्थिति मल्ललाई राजाको पदमा राखिएको थियो (गोपाल राजवंशावली) । नेपालका राजा घोषित भएपछि जयस्थिति मल्लले विद्रोहीहरूलाई विस्तारै कजाएका थिए भने एकथरी भारदारहरू भने शक्तिशाली रूपमा कायमै थिए । ती हुन् बनेपाली भारदार रामबर्द्धनहरू ।

त्यस बखत जयसिंहरामले 'बाहिरबाट ल्याइएका जयस्थिति मल्ललाई हामी राजा मान्दैनौँ, राजा त जयार्जुनदेव नै हुनुपर्छ' भनी घोर विरोध गरे ।

---

[७] 'गोपालराज वंशावली', पत्र नं० ५१, सम्पादक : धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल, प्रकाशक : The Research Centre Publications, 1985 A. D.

[८] शक्तिशाली भारदार रामवर्द्धनहरू र तत्कालीन नेपाल, धनवज्र वज्राचार्य, पूर्णिमा' अङ्क ७, वि० सं० २०२२

[९] नेपालको पूर्वमध्यकालको इतिहास, ज्ञानमणि नेपाल, प्रकाशक : नेपाल र एसियाली अनुसन्धान केन्द्र, त्रि० वि०, कीर्तिपुर, २०५४

बनेपालगायत पूर्वीभेगका तमाम मानिसहरूको नेतृत्व गरी जयसिंहरामले ४-५ वर्षसम्म विरोध गरिरहे । त्यस बेला शक्तिशाली राजाको यसरी लामो समयसम्म कट्टर विरोध गरिरहन सक्नु कम साहसिलो र बहादुरीपूर्ण काम थिएन । पछि जयस्थिति मल्लले जयसिंहरामलाई समाती कैद ठोके, जयार्जुनदेव मल्ललाई पनि जेलमा राखे ।

जयसिंहरामलाई दुःख दिएको देखेर जयत मुल्मी जस्ता धेरै भारदारहरू असन्तुष्ट भएका हुँदा वि० सं० १४२९ मा जयसिंहरामलाई कैदबाट छुटकारा गरियो । यी भारदारहरूकै सल्लाहले जयार्जुनदेव मल्ललाई बनेपामा पठाइयो । कैदबाट छुटेपछि यत्रतत्र घुमी आखिर वि० सं० १४३८ मा जयार्जुनदेव मल्लको मृत्यु भयो । जयार्जुनदेव मल्लको मृत्युपछि शक्तिशाली रामवर्द्धनहरूलाई हातमा नलिईकन राज्यको सुरक्षा हुँदैन भनेर जयस्थिति मल्लले जयसिंहराम र उनका भाइ मदनरामलाई 'सामन्त' को दर्जाले आभूषित गरे ।

यता जयार्जुनदेव मल्लको पनि मृत्यु भएको हुँदा जयसिंहरामले महामन्त्रीको अभिभारा लिई राजा जयस्थिति मल्ललाई सघाए । काठमाडौँको इटुमबहालको वि० सं० १४३९ को शिलालेखमा 'महामन्त्री श्री जयसिंहराम वर्द्धनले पालना गरिएको विजयराज्यमा .....' उल्लेख भएअनुसार उनको शासनभार काठमाडौँसम्म चलेको भन्ने स्पष्ट छ ।

जयसिंहराम वर्द्धन कुशल राजनीतिज्ञ र योग्य प्रशासक मात्र थिएनन्, धर्ममा आस्था राख्ने व्यक्ति पनि थिए । ने० सं० ४७० (वि० सं० १४०६) मार्ग शुक्ल नवमीका दिन बङ्गालका सुल्तान समसुद्दीन आई ७ दिनसम्म नेपालमा हाहाकार मच्चाए । उनका मुसलमानी फौजले पशुपति महादेवलाई तीन टुक्रा पारिदिए (गोपाल राजवंशावली) । त्यसपछि महामन्त्री जयसिंहरामले ऋक्, यजु, साम र अथर्व गरी चार वेदका आधारमा चतुर्मुखी पशुपति महादेवको प्रतिमा बनाउन लगाई प्रतिष्ठापन गर्दा बनेपाको लायकुदरबारनजिकैको सूर्यमूर्तिको स्थापनाको बखतका पुरोहित राजपति शर्मा ('दशकुमारपद्धति' ग्रन्थ) नै थिए । पशुपति महादेवको प्रतिस्थापन गर्दा जयार्जुनदेव मल्लको पनि उपस्थिति थियो । राजा जयार्जुनदेव मल्ल र जयसिंहरामका पुरोहित पनि यिनै द्विज श्रीराज नै थिए ।

अहिलेको पशुपति महादेव निर्माण गर्न लगाउने बनेपाली नै थिए भन्ने कुरा त्यहाँका र अन्यत्रका शिलालेखले पनि देखाउँछन् । त्यस्तै, पनौतीको इन्द्रेश्वरमन्दिरभित्रको स्वर्णपत्रको अभिलेखले पनि जयसिंहरामले जयार्जुनदेव मल्लको पुष्पाभिषेक र जयस्थिति मल्लको पट्टाभिषेक गरेका र तुलानारायणको



मूर्ति निर्माण गर्न लगाएर इन्द्रेश्वरमा विधिवत् स्थापना गरी तिनैका अगाडि शिलास्तम्भ खडा गरेर सूर्यग्रहणमा देहतुल्य सुन दान दिएका (सुवर्णतुला गराएका) थिए भन्ने कुरा देखाउँछ । त्यस बखत सुनको घोडासहित सुनैको हात्ती र कल्पवृक्ष बनाएर विप्र-विद्वान्हरूलाई दान पनि दिएका थिए ।[१०]

विभिन्न भारदारहरूले पटक-पटक विद्रोह गर्दा हतियार उठाउने विद्रोहीहरूलाई दबाउन महामन्त्री ज्योतिराम र अनेकराम बर्द्धनहरूले दरबारलाई साथ दिइरहने, फेरि जयसिंहरामले पनि विद्रोहीहरूलाई दमन गर्दै देशमा सुशासनको व्यवस्था मिलाउने आदि गरेर रामवर्द्धनहरूले नेपालको इतिहासमा कहिल्यै नमेटिने कीर्ति राखेका छन् । बनेपाको सूर्यमूर्तिको पादपीठमा जयसिंहरामलाई 'राजा' भनेर र पनौती इन्द्रेश्वरको स्वर्णपत्रमा 'महाराजाधिराज' भनेर नै उत्कीर्ण भएकोले, साथै यसैको शिलालेखमा 'मदनरामपालित वणिकापुर' भनी लेखिएको र जयसिंहरामकै भतिजा शक्तिसिंहराम वर्द्धनलाई चीनका बादशाह ता यि मिङले ने० सं० ५३५ मा फरमानापत्रमा 'राजा' भनी लेखिपठाएकाले रामवर्द्धनहरूको शक्ति र राजनीतिक महत्त्व कम थिएन भन्ने प्रस्ट हुन्छ ।

पशुपतिनाथको पुनः प्रतिस्थापन गर्ने, पनौतीको इन्द्रेश्वरमा तुलानारायणको स्थापना गरी अति उच्चकोटिका धार्मिक कार्यहरू गर्ने, महाभारत र अन्य ग्रन्थहरू लेखाउने आदि धार्मिक कामहरूमा रुचि राख्ने यी बनेपाली रामवर्द्धनहरूले बनेपाकी आराध्यदेवी चण्डेश्वरीमा केही पुण्यकार्य अवश्यमेव गरेको हुनुपर्दछ । तर ती विषयहरूबारे कुनै अभिलेख अथवा थ्यासफू (हस्तलिखित पुस्तक) को अभावले गर्दा केही पनि पत्तो नभएको हुँदा अनुसन्धान गर्न बाँकी नै छ । फेरि, यी रामवर्द्धनहरूको समयमा बनेपालाई कतै 'वणिकापुरी', कतै 'भोटदेश' र कतै 'विनाप्याक्वाठ' भनेर लेखिएको पाइन्छ । बनेपाका मानन्धरहरूको ने० सं० ४८५ सालको सीगुठीको एउटा ताडपत्रमा जयार्जुनदेवलाई 'महाराजाधिराज' भनी लेखिएको छ । त्यसमा बनेपालाई 'विनयापुरी' भनी उल्लेख छ । बनेपाको बनेपुर, बनेकापुर, भ्वँत, भोँदे, भोटदेश, विनाप्या, विनयापुरी आदि नाम कहिले-कहिले रहन गए, इतिहासमा रुचि राख्नुहुने व्यक्तिहरूले यसको पनि खोजी गर्नु आवश्यक छ ।

**(साभार : काभ्रे टाइम्स, २०६२ भाद्र १४ गते मङ्गलबार)**

●

---

१० 'पन्तिया अभिलेख', सम्पादक योगेशराज, नसंचा पुचः ने० सं० ११२०

# बनेपाको जालुद्योपर्व

" ................................ ।"

"होइन-होइन, तिमीले जानुपर्दैन । मेरो मरण नजिकै आइसकेको छ, किनभने म अब धेरै बूढो भइसकेको छु । त्यसैले म जान्छु ।"

"त्यो त भएन नि पिताजी ! बरु मै जान्छु ।"

"प्यारा छोरा ! राक्षसकहाँ मै जान्छु र हामीले पूरा गर्नुपर्ने कर्तव्य म नै पूरा गर्छु । बाबू ! तिमी हाम्रा एक्ला छोरा हौ । तिमी नै गयौ भने भविष्यमा हाम्रो कुलको कुनै अस्तित्व बाँकी रहनेछैन । त्यसैले ........ ।"

"हे स्वामी ! हजुरले यो के भन्नुभएको ?" – बूढीले भनिन् – "जानु त मैले नै पर्दछ । हजुरले त्यो राक्षसलाई आफ्नो ज्यान अर्पण गर्नुभयो भने मैले त त्यसै हजुरको सती जानुपर्नेछ । त्यसैले म नै जान्छु र राजाको आदेश पालना गरेर आफ्नो कर्तव्य पूरा गर्छु ।"

परिवारको यो दुःखदायी कुराकानी त्यो घरमा एक रातका लागि बास बस्न आएका एकजना परदेशीले सुनिरहेका थिए । तिनीहरूको वियोगान्त कुरा सुन्न नसकी उनी जुरुक्क उठेर तिनीहरूकहाँ गए र भने – "के भयो ? तपाईंहरूमाथि के पर्न आयो ? तपाईंहरू सबैजना किन चिन्तित र उदास देखिनुहुन्छ ? भन्नुहोस्, कुरा के हो ? मैले सक्ने भए यो काममा म तपाईंहरूलाई गुहार गरिदिनेछु ।"

त्यसपछि तिनीहरूले ती परदेशीलाई त्यहाँको राक्षसका विषयमा सबै कुरा भने । एउटा राक्षसले केही समयअघिदेखि बनेपाका मानिसहरूलाई मार्न थालेको हुनाले त्यो राक्षसको आहारा हुन घरैपिच्छे पालैपालो एक-एकजना जाने निर्णय गरेर बनेपालीहरूले राक्षससँग सम्झौता गरेका थिए । एक दिन एउटा परदेशी एक रातका लागि जुन घरमा बास बस्न गएका थिए, राक्षसको आहारा हुन जाने पालो त्यही घरका मानिसको परेको थियो । त्यो घरका मान्छेको कुरा सुनेर ती परदेशीले भने – "आज त्यो राक्षसकहाँ म जाउँला ।



उसले मलाई के गर्दो रहेछ, हेरौँ ।"

"हुँदैन-हुँदैन । तपाईंले जानुपर्दैन ।" – बाबुचाहिँले भने – "तपाईं त हाम्रा पाहुना हुनुहुन्छ । पाहुनालाई त देवता मान्नुपर्दछ । हामीमध्येबाट नै कुनै एकजना जान्छौँ । हामीले तपाईंलाई पठायौँ भने राजाले हामीलाई आदेश नमानेको भनेर दण्ड दिनेछन् ।"

त्यसपछि ती परदेशीले आफू नै त्यो राक्षसकहाँ जाने भनेर अनेक-अनेक कुरा गरी परिवारलाई सम्झाए । तर जतिसुकै सम्झाए पनि ती तीनैजनाले नमानेपछि परदेशीले आफ्नो भेष खुलाएर भने – "हेर्नुहोस्, म एक ठूलो राज्यको राजकुमार हुँ । म बहादुरीपूर्ण कामहरू गर्दैगर्दै धेरै ठाउँहरूमा घुमेर यहाँ आएको छु र यस्ता कामहरू खोजिरहेको पनि छु । आज यहाँ रात बस्नका लागि मलाई भगवान्ले नै पठाउनुभएको हुनुपर्छ ।"

यति भनेर ती परदेशीले उनीहरूलाई आफ्नो कुम्लो खोलेर भाला र तरबार देखाइदिए । उनले फेरि भने – "भगवान्का कृपाले र तपाईंहरूको आशीर्वादले म त्यो राक्षसलाई मार्नेछु । अनि तपाईंहरूको ज्यान मात्र होइन, यो देशका अन्य जनताको जीवन पनि बच्नेछ । म राजकुमार हुँ । मलाई लड्ने कला थाहा छ । म राक्षसलाई अवश्य नै मारिदिनेछु । यो मेरो बाचा भयो ।"

ती तीनैजना आमा, बाबु र छोराले ती परदेशीलाई टोलाएर हेरिरहे । उनको अनुहारको चमक, शरीरको फुर्तिलोपन र बहादुरीपूर्ण कुराले गर्दा उनीहरूलाई उनी पक्कै एक सबल र सक्षम व्यक्ति हुन् भन्ने लाग्यो । अन्त्यमा बूढाले हात जोडेर भने – "बाबु ! भगवान्ले हजुरलाई त्यो दुष्ट राक्षसलाई मार्न सक्ने शक्ति प्रदान गरून् । यही हाम्रो शुभकामना छ । राक्षस पाञ्चालदेशको नजिकै पर्ने सुनथानको निर्जन ठाउँमा बस्तछ ।"

उता राक्षस मान्छेलाई पर्खंदा-पर्खंदा हैरान भइसकेको थियो । मध्यरात नै हुन लागेको थियो, तर कोही पनि त्यहाँ पुगेको थिएन । आखिर एकजना मानिस आफूतिर आइरहेको उसले देख्यो । आकाश निर्मल थियो । जून टहटह लागिरहेको थियो । राक्षस भोक र झोकले गर्जियो – "ए मनुवा ! तँ आज किन ढिलो आइस् ? तेरा आमाबाबुले तेरो माया लागेर पठाउन सकेनन् कि कसो ? आहा ! आजको मेरो भोजन कति मीठो हुने होला ! तँ त फुर्तिलो, राम्रो र चट्ट परेको पो रहिछस् ! त्यसैले होला आज तँ यहाँ ढीलो आएको । होइन त बाबु ? आइज राजा, नजिक आइज । किन ? तँ डराइस् कि कसो ? नडरा । खोइ, एकचोटि म तेरो गालामा म्वाइँ त खाऊँ । म पहिले तँलाई माया गर्छु, म्वाइँ खान्छु अनि स्वर्गमा पठाइदिन्छु ।"

राजकुमारले रिसाउँदै उच्च स्वरले भने – "ए दुष्ट राक्षस ! ए पापिष्ट ! आइज, नजिक आइज । म त यहाँ तँलाई मार्न आएको हुँ । तैँले के सोचेको छस् हँ ?"

"गजब भयो आज ! गजबै भयो !" – राक्षसले भन्यो – "के छ बाबु ? अरू के छ भन्नु ?"

'यो छ मसँग, अर्को यो पनि छ' भन्दै राजकुमारले आफ्ना दुवै हातले समाएका तरबार र भालाले राक्षसमाथि प्रहार गर्न थाले । राक्षसलाई अलिकति चोट पनि लाग्यो । त्यसपछि ती दुवैका बीचमा घमासान लडाइँ सुरु भयो । एकले अर्कालाई सकेजति आ-आफ्ना हतियारले प्रहार गर्ने काम गरे । अन्त्यमा राक्षस अति क्रोधले फुत्त उफ्रिएर राजकुमारमाथि जाइलाग्यो । चतुरतापूर्वक राजकुमार अर्कैतिर छलिइँदा राक्षस एउटा ठूलो ढुङ्गोमा बज्रिन पुग्यो । त्यसै बखत राजकुमारले एउटा ठूलो ढुङ्गोले राक्षसको टाउकोमाथि बेसरी हान्दा उसको टाउको नै फुट्यो । राजकुमारले फेरि पनि आफ्नो तरबारले राक्षसमाथि प्रहार गरे । राक्षसको उत्तिखेरै मृत्यु भयो ।

राक्षसको मृत्युको खबर सुनेर बनेपावासीहरूको खुसीको सीमा रहेन । धिमे, भुछ्या, कहँ, पोँगा आदि विविध बाजागाजाका साथ राजकुमारलाई सहरपरिक्रमा गराएर सिन्दुरजात्रा गरे । आइमाईहरूले झ्यालबाट फूल, अबीर, ताँय् आदि विविध वस्तुहरू राजकुमारमाथि छरिदिए । यसरी सिन्दुरजात्रा सकिएपछि राजा र अन्य ठूला भारदारहरूसँग बिदा लिई राजकुमार आफ्नो मुलुकतिर लागे ।

त्यसपछि बनेपाका मानिसहरूले ढुक्क भई आनन्द र शान्तिपूर्वक जीवन बिताउन पाए । अब राक्षसको कुनै भय-त्रास भएन । तर एक मध्यरातमा अत्यन्तै डरलाग्दो स्वर बनेपाका कुनाकुनासम्म धेरै बेर गुन्जियो । सबै मानिसहरू डरले थर्कमान भए । कसैले पनि घरबाहिर निस्कन आँट गरेन । भोलिपल्ट बिहान मात्रै मानिसहरू घरघरबाट बाहिर निस्के । त्यति बेला थाहा भयो – धेरै मानिसहरूलाई हैजा लागेको रहेछ । मानिसहरू डर र रोगले छटपटाइरहेका थिए ।

ज्योतिष र तान्त्रिकहरू यस महामारीको मूल कारण पत्ता लगाउनतिर लागे । अन्तमा एकजना नामी तान्त्रिक कर्माचार्यले राक्षसको प्रेतात्मा बनेपाभरि घुमिरहेकोले महामारी फैलिएको कुरा राजालाई बिन्ती गरे । राजाले कर्माचार्यलाई सो प्रेतात्मालाई शान्त पार्ने आदेश दिए । तान्त्रिक कर्माचार्यले भातबाट मान्छेको प्रतिमा बनाउन लगाएर त्यसलाई बनेपाको स्वधा:टोलको



दक्षिणकालीमा ञन्यापुन्हि (इन्द्रजात्राको पूर्णिमा) को अघिल्लो दिन मध्यरातमा सो प्रतिमा राख्न लगाए । अनि तान्त्रिक कर्माचार्यले दक्षिणकालीदेवीको पूजा गरी भातको त्यो प्रतिमालाई हाँसको बलि दिएर आफ्नो तन्त्रसिद्धिद्वारा त्यसमा जीवन्यास गरे । जीवन्यास भएपछि त्यो भातको मान्छे 'जालुद्यो' अर्थात् 'भातको देवता' बन्यो । जालुद्योलाई ञन्यापुन्हिका दिन र त्यसको भोलिपल्ट अर्थात् आश्विन शुक्लपक्ष प्रतिपदाको दिन मध्याह्नसम्म प्रदर्शन गरिसकेपछि एउटा खटमा राखेर विविध बाजागाजाका साथ बनेपा धनेश्वरमहादेवको पीठनजिक पुण्यमाताखोलामा लगे । एकजना मान्छेबाट त्यो प्रतिमा काट्न लगाई ती कर्माचार्यले राक्षसको प्रेतात्मालाई शान्त पारिदिए र बनेपावासीहरू हैजाको महामारीबाट मुक्त भए ।

त्यसै बेलादेखि 'जालुद्यो' को प्रतिमा बनाई राक्षसको प्रेतात्मालाई शान्त पार्न भनेर प्रतिवर्ष यसरी जात्रा मनाउन सरकारी स्तरबाटै केही मानिसहरू सम्मिलित एउटा गुठीको स्थापना गरिएको थियो । ज्ञात भएअनुसार एक सय वर्षअघिका 'जालुद्यो गुठी' का गुठीयारहरू कालिदास पोटे श्रेष्ठ, धीरबहादुर पोटे श्रेष्ठ, बख सैँजू, नन्दलाल कोख श्रेष्ठ, हीरालाल कोख श्रेष्ठ आदि व्यक्तिहरूले सो गुठीका सबै काम चलाउँदै आएका थिए । तर पछि आएर 'भातको देवता' को काम चलाउनु एक किसिमको झन्झटजस्तै भएको हुँदा ती मानिसहरूले त्यो काम छोडिदिए ।

पहिले 'भातको देवता' को उत्सव अति भव्य थियो । उत्सवमा मानिसहरूको ठूलो सहभागिता हुन्थ्यो । आजभन्दा एक सय पाँच वर्षअघि ञन्यापुन्हिको साँझतिर बनेपाका नौवटा दाफा भजनसमूहहरू विविध बाजागाजाका साथ त्यहाँ भजन गर्न आएका थिए । यो कुरा मेरा बुबा मोहनलाल खिंले मलाई बताउनुभएको थियो । उहाँले धा: (एउटा सानो लट्ठी समाएर बायाँ हातले बायाँपट्टि र खाली हातले दायाँपट्टि बजाइने ढोलकजस्तो बाजा) को बोलीजस्तै 'धा: तिकि तिकि धा: धा:, धा: तिकि तिकि धा:' भन्दै बाजाको ताल भनेर त्यस बेला गाइएको यो गीत सुनाउनुभएको थियो –

> जालु द्यो चाय् मां ख्वल
> ख्वबि तिकि तिकि हाल ।

अर्थात् –

> भातको देवताकी आमा रोइन्
> आँसु टपटप झारेर ।

'जालुद्यो गुठी' चलाउन पहिले गुठीजग्गा राखिएको थियो । तर पछि त्यो गुठीजग्गा के भयो, कसैलाई थाहा भएन । तर पनि पहिल्यैदेखि चलिआएको

जालुद्योको उत्सव हालसम्म पनि कुनै न कुनै व्यक्तिहरूको सक्रियतामा येनकेन चल्दै आएको छ । अहिले यो काम सम्पन्न गर्न बनेपा नगरपालिकाले केही रकम उपलब्ध गराउँदै आएको छ। तर गुठी चलाउन त्यो रकम अपुग छ।

'जालुद्यो गुठी' का गुठीयारहरूले वर्षका पर्वपर्वमा विविध देवीदेवताहरूलाई पूजा गर्ने गरेका थिए भन्ने मैले सुनेको हुँ । अहिले पनि चण्डीपूर्णिमाको दिन दक्षिणकालीलाई एउटा बोको बलि दिई गुठीयारहरूले जालुद्योसम्बन्धी व्यक्तिहरूलाई अर्थात् नायो माहाँ, माहाँहरू, एक कारन्जित, पाँचजना राजवाहकहरू, कहँ र पौंगा बजाउने मानन्धरहरू र कसाईबाजा बजाउने साहीहरूलाई भोज खुवाउने चलन अद्यापि चलेकै छ ।

ञन्यापुन्हिको पर्वमा 'भातको देवता' को उत्सव मनाउन गुठीयारलाई विविध काममा लाग्नुपर्ने हुन्छ । पूर्णिमाको अघिल्लो दिन गुठीको पालो पर्ने घरकी आइमाईले केही नखाईकन कोतपूजा राख्नुपर्दछ भने त्यसै घरका एकजना लोग्नेमानिसले राति १२ बजेसम्म केही नखाईकन १० माना भात पकाउनुपर्दछ । भातको देवता बनाउन काठका टुक्राहरू चण्डेश्वरीजङ्गलबाटै ल्याउनुपर्दछ भने छेकारो लगाई प्रतिमाको सुरक्षा गर्न बनेपाको दक्षिणपट्टिको बालकुमारीजङ्गलबाट निगालो ल्याउनुपर्दछ ।



जालुद्यो / तस्बिर : भुवन भोछिभोया

चण्डेश्वरीजङ्गलबाट ल्याइएका काठका टुक्राहरूबाट भातको देवताका खुट्टा, हात र टाउको बनाई सबै ठाउँमा जुइनुले बेरेर जोडिन्छ र टाउकाको रूप पनि बनाइन्छ । त्यसपछि सुप्तरीका टुक्राहरू पकाइएको भातसँग मिसाएर बेसरी मुछ्ने काम हुन्छ । यसो गर्दा भातको देवताको मूर्ति फुट्न पाउँदैन । त्यसपछि जुइनुले बेरेर बाँधेका ठाउँमा भात टाँसेर भातको प्रतिमा बनाइन्छ । जा (भात) र लु (जुइनु) ले द्यो (देवता) बनेकाले नै त्यो मूर्तिलाई 'जालुद्यो' (भातको देवता) भनिएको हो ।



त्यसरी भातको प्रतिमा तयार भइसकेपछि भक्तपुरबाट आएका चित्रकारले विभिन्न रङ्गबाट कागजमा अङ्कित सामग्रीहरू (मुकुट, तरबार, भाला, जामा र भोटो) आफ्नो झोलाबाट झिक्छन् । अनि प्रतिमाको शिरमा मुकुट लगाइदिई दायाँ हातमा तरबार र बायाँ हातमा भाला जडिदिन्छन् । त्यसपछि भोटो र जामाहरू लगाइदिएर शरीरका विभिन्न अङ्गहरू विविध रङ्गले रङ्गाई दारी-जुँगासमेत बनाइदिएर भातको प्रतिमालाई फुर्तिलो बनाइदिन्छन् ।

यसरी हातहतियारले सुसज्जित प्रतिमा बनाउनुको तात्पर्य राक्षससँग लड्न जाने व्यक्तिको स्वरूप देखाउनु नै हुनुपर्दछ । त्यसपछि एउटा पछ्यौराले छोपेर त्यो मूर्तिलाई रातको १ बजेतिर दक्षिणकालीमा स्थापना गर्न लगिन्छ । त्यस बखतसम्ममा त्यहाँ कर्माचार्यलाई डाकेर ल्याइसकिएको हुन्छ । कर्माचार्यले भातको प्रतिमाका आँखामा दृष्टि लगाइदिएपछि त्यो वर्ष पालो परेको घरकी आइमाईले राखेको कोतपूजा ल्याइन्छ । अनि कर्माचार्यले दक्षिणकालीदेवीको पूजा गर्दछन् र देवीलाई एउटा हाँसको बलि दिई पछाडिबाट भातको प्रतिमाको टाउकोमा बलि दिइएको हाँसको रगत छरिदिन्छन् । त्यसरी कर्माचार्यले आफ्नो तन्त्रविद्या प्रयोग गरी सो प्रतिमामा जीवन्यास (प्राणप्रतिष्ठा) गरिसकेपछि मात्र त्यो भातको मूर्ति 'जालुद्यो' बन्छ ।

ञन्यापुन्हिका दिन र त्यसको भोलिपल्ट अर्थात् आश्विन कृष्णपक्ष प्रतिपदाको मध्याह्नसम्म भातको देवता (जालुद्यो) लाई सार्वजनिक प्रदर्शनमा राखिन्छ । त्यस बखत थुप्रै केटाकेटी, युवायुवती र बूढाबूढीहरू त्यो प्रदर्शनी हेर्न आउँछन् । बनेपा दछुटोलस्थित थानपति नारायणस्थानको पछाडिपट्टिको कसाईटोलबाट बग्दै आएको एउटा ढल बहिल हुँदै तुकंप्वःगणेशतिरबाट बग्दै पुण्यमाताखोलामा मिल्न जान्छ । त्यो ढलको पूर्वपट्टिका तीन टोल (भोलाखाटोल, स्वधाःटोल र वकुटोल) का निवासी सबै बनेपालीहरू त्यो भातको देवता पनि बनेपाली हो र उसको मृत्यु भयो भनी आश्विन कृष्णपक्ष प्रतिपदाको दिन बिहान जुठो बार्ने भनी भात खाँदैनन् । त्यो बिहान रोटी पकाएर खाने चलन अद्यापि चल्दैछ । जालुद्योको अन्त्येष्टि गरिसकेपछि मात्र घर चोखो पारी बेलुका भात पकाई खान्छन् ।

प्रतिपदाको दिन गुठीयारहरूले एउटा खट २-३ बजेसम्ममा सिँगारपटार गरी तयार पारिसकेका हुन्छन् । त्यसपछि त्यहाँ मानिसहरूको भीड लाग्दछ । जालुद्योसम्बन्धी रकमीहरू अर्थात् कहँ, पौंगा बजाउने मानन्धरहरू, खट बोक्ने राजवाहकहरू, नायखिँ बजाउने नाय् (साही) हरू, मुहाली बजाउने कुसले, ढोलक बजाउने द्यो (डुम ?) र अन्य सम्बन्धित व्यक्तिहरूको पनि त्यहाँ उपस्थिति भइसकेको हुन्छ । साँझ ५ बजेतिर जालुद्योलाई खटमा राखिन्छ ।

त्यस बखत त्यहाँ विविध बाजाहरू बजाइन्छन् । जालुद्योलाई एकजना राजवाहकले तीनपटक दही-चिउरा खुवाउँछन् । त्यसपछि चारजना राजवाहकहरूलाई बोक्न लगाएर खटलाई वकुटोलतिर लगिन्छ । वकुटोलढोकामा पुग्दा त्यहाँ पनि जालुद्योलाई तीनपटक दही-चिउरा खुवाइन्छ । त्यसपछि मलामीबाजा बजाएर जात्रा अगाडि बढ्छ । जात्रा वकुटोलको तलतिर साझा गोदाम हुँदै जात्राको अन्तिम चरणमा मलामीबाजा नै बजाई पुण्यमाताखोलातर्फ लाग्दछ । बाजागाजा बजिरहेका हुन्छन् । मानिसहरू तमासा हेर्दै र जात्रामा सम्मिलित हुँदै अगाडि बढिरहेका हुन्छन् । जब खट धनेश्वरमन्दिरको तलतिर बगेको पुण्यमाताखोलामा पुग्छ, तब दर्शकहरू आ-आफ्ना ठाउँमा सतर्क भई उभिन्छन् । त्यस बखत एकजना राजवाहकले जालुद्योलाई खटबाट झिकी अन्तिमपटक दही-चिउरा खुवाउँछन् ।

दही-चिउरा खुवाउने चलन हाम्रो समाजमा अरू बखत पनि नभएको होइन । गर्भवती आइमाईलाई सुत्केरी हुनुभन्दा केही दिनअगाडि घर र माइतीबाट दही-चिउरा खुवाउने गरिन्छ । कुनै व्यक्ति मर्‍यो भने दाहसंस्कार गरिसकेपछि घरमा आएर कुनै-कुनै जातमा दही-चिउरा खाने चलन पनि नभएको होइन । मानिसलाई फाँसी दिनुभन्दा केही समयअघि त्यसलाई दही-चिउरा खुवाउने गरिन्थ्यो । यी सबै कुरा बुझ्दा दही-चिउरा खाने-खुवाउने प्रथा कष्टमोचन गर्न अथवा सङ्कट टार्न चलाइएको हो कि जस्तो लाग्छ । जालुद्योलाई दही-चिउरा खुवाउने काम पनि सङ्कट टार्नकै लागि गरिएको हुनुपर्दछ ।

दही-चिउरा खुवाइसकेपछि राजवाहकले एक हातले तरबार समाई अर्को हातले जालुद्योलाई आफ्नो कम्मरमा अडेसा लगाएर सबैका अगाडि प्रदर्शनमा राख्तछन् । त्यसपछि उनले तरबारले जालुद्योलाई प्रहार गरी जालुद्योको टाउकोलाई गिँडबाट अलग पारिदिन्छन् र शिरका केही टुक्राहरू दर्शकको भीडतिर फालिदिन्छन् । ती टुक्राहरूमध्ये कुनै टुक्रोले कुनै व्यक्तिलाई लाग्यो भने उसका लागि त्यो वर्ष अशुभ हुन्छ भन्ने जनविश्वास छ ।

बनेपामा हुने जालुद्योपर्व अत्यन्त रोचक र अर्थपूर्ण छ । यसबारे कुनै अभिलेख कतै पाइएको छैन । अभिलेख आफूहरूसित भएर पनि खोजेर दिने मनस्थिति भएका मानिसहरू यहाँ कमै छन् । यो पर्व कहिलेदेखि मनाइयो, कसैलाई थाहा छैन । जालुद्योको प्रतिमा किन दक्षिणकालीमा प्रदर्शन गरिन्छ, थाहा हुन सकेको छैन । दक्षिणकाली बनेपाका सबैले मानिआएकी देवी हुन् । दक्षिणकालीको समीपबाट पहिले एउटा ढल बगेको थियो । देवीको अगाडि एउटा सानो पोखरीजस्तो जलकुण्ड पनि थियो । अगिँ (रुन्चे) लागेका स-साना



बच्चाबच्चीहरूलाई त्यस कुण्डमा नुहाइदिए निको हुन्छ भन्ने धारणा त्यहाँका मानिसहरूको थियो । पछि त्यो जलकुण्डलाई पुरेर मोटरबाटो बनाइयो । दक्षिणकालीको पछाडिपट्टि तलेजुको एउटा अर्को मन्दिर थियो । त्यहाँ श्रीयन्त्र थियो । त्यसैले दक्षिणकाली र तलेजुसँग जालुद्योको कुनै सम्बन्ध अवश्यै हुनुपर्दछ । तर यसका सम्बन्धमा कसैमा चासो भएको देखिँदैन । यसको खोजी गर्नु अति आवश्यक छ । जालुद्योलाई तीन ठाउँमा तीन-तीनपटक किन दही-चिउरा खुवाइन्छ ? बनेपाका चार टोलमध्ये भोलाखा, स्वधाः र वकुटोलका बनेपालीहरूले मात्र किन जुठो बार्नुपर्ने हो ? विद्वान्हरूले यी सबै कुरामा अनुसन्धान गरी भित्रको इतिहास पत्ता लगाउनु जरुरी छ । तर यो भौतिक प्रवृत्तिको जमानामा मानिसहरूलाई आफ्नो संस्कृतिप्रति त्यतिसारो अभिरुचि छैन । यो अत्यन्त दुःखलाग्दो कुरा हो ।

जालुद्योपर्व पनौतीमा पनि थियो । त्यहाँ पनि भातका तीनवटा प्रतिमा बनाएर तीन टोल (पमारी, ध्वाखाफले र कोलाछे) का गणेशस्थानमा जन्यापुन्हिकै पर्वमा प्रदर्शन गरी आश्विन प्रतिपदाको दिन विविध बाजागाजाका साथ पुण्यमाताखोलामा लगी ती जालुद्योहरू बगाउने चलन थियो । तर गुठी मासिएको कारणले पाँच दशकपहिले नै त्यो प्रथा लोप भइसकेको छ ।

बनेपाको जालुद्यो गुठी पनि हाल नाम मात्रको छ । अहिले यसको कुनै रूपरङ्ग छैन । गुठीका सामानहरू हराइसकेका छन् । गुठीका मानिसहरू सबै अलग्गिएका छन् । दिलबहादुर कर्माचार्य, पुष्प राजवंशी (कोख श्रेष्ठ), अमर कर्माचार्य, राम कर्णजीत र अन्य दुई-चारजनाको सक्रियतामा यो पर्व जेनतेन चलिरहेको छ । बनेपा नगरपालिकाबाट प्रतिवर्ष जम्मा २,४००।- रुपियाँ मात्र उपलब्ध भए पनि यो पर्व चलिरहेकै छ । खटजात्रा चलाउन पाँचजना राजवाहकहरू, कहँ र पोँगा बजाउने मानन्धरहरू, नायखिँ बजाउने साहीहरू, मुहाली बजाउने कुसले र ढोलक बजाउने द्वो आदि रकमीहरूले श्रद्धा र निष्ठापूर्वक पर्व चलाउन अहिलेसम्म लागिरहनु पनि धन्य भएको छ । अझ यो वर्ष (वि० सं० २०६३ मा) त चण्डेश्वरीका दिलबहादुर कर्माचार्य पूजाका लागि, किन हो कुन्नि, आउन सक्नुभएन र पूजाको कार्य अमर कर्माचार्यले चलाउनुभयो ।

यसरी जालुद्यो गुठीको काम धमाधम बिग्रँदै गएकोले २-४ वर्षपछि यो पनि अरूहरू जस्तै लोप हुने देखिन्छ । यो पनि लोप भयो भने बनेपाले एउटा महत्त्वपूर्ण संस्कृति गुमाउनेछ ।

**(साभार : सुभाष, सुभाष स्मृति प्रतिष्ठानको मुखपत्र, २०६३)**

●

# बनेपामा मानन्धरहरूको कोल

२०५७ सालको मङ्सिर महिनातिर 'केन्द्रीय मानन्धर सङ्घ' को 'परामर्श परिषद्' को एउटा बैठकमा गौतम सायमिले भन्नुभयो – "म ग्रीसमा जाँदा त्यहाँ मिलान्डर भन्ने एउटा जाति भएको थाहा भयो । उनीहरूको संस्कृति हामीसँग धेरै नै मिल्ने रहेछ । उनीहरू पनि तेलको काम गर्दा रहेछन् ।"

वरिष्ठ विद्वान् स्व० ठाकुरलाल मानन्धरसँग भेटवार्ता हुँदा उहाँले एकपटक मसँग भन्नुभएको थियो – "सिकन्दर भारतमा हमला गर्न आउँदा मिलान्डरहरू (मानन्धरहरू) अगाडि राखेर युद्ध गर्न आए । उनीहरू युद्धध्वजा लिएर अगाडि बसी युद्धका लागि चाहिने नाप (Measurement) को हिसाब गरिदिन्थे । पछि सिकन्दर ग्रीसमा फर्के र मिलान्डरको एक समूहलाई त्यहीँ छाडिदिए । ती मिलान्डरहरू यहाँ नेपालमा आए । उनीहरू कालिगढ हुन् । ती मिलान्डर भनेका हामी नै हौं ।"

चाहे ग्रीसबाट आएका होउन् अथवा भारतबाट, चाहे चीनबाट आएका होउन् अथवा नेपालका आदिवासी नै, मानन्धरहरू कालिगढ हुन् भन्ने कुरा नेपालका विविध स्थानीय जात्राहरूमा ठूला-ठूला रथहरू बाँध्ने र अन्य प्राविधिक कामहरू गर्दै आइरंहेकैले देखाउँछ । ने० सं० ४९६ सालमा वँटाक्षेत्रमा चपाह (पाटीविशेष) बनाउने जगत मानन्धर हुन् भन्ने उल्लेख 'गोपाल राजवंशावली' मा पाइन्छ ।[१] प्राविधिक क्षेत्रमा धेरै नै दखल भएका कारणले मानन्धरहरूले व्यवसायमूलक काम गर्न जीवनमा नभई नहुने, अझ जन्मदेखि मृत्युसम्म चाहिने वस्तु कोल बनाई तेल उत्पादन गर्ने कामको थालनी गरेको हुनुपर्छ । यही साः (कोल) मा काम गर्ने जाति भएका हुनाले मानन्धरहरूलाई साल्मी, सायमि भनेको हुनुपर्छ । जस्तै कि यें (काठमाडौँ) मा बस्नेलाई यमि, भ्वँत (बनेपा) मा बस्नेलाई भोमि भनेजस्तै साः (कोल) मा

---

[१] गोपाल राजवंशावली, पत्र नं० ५६, सम्पादक : धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल, प्रकाशक : नेपाल रिसर्च सेन्टर पब्लिकेसन, सन् १९८५



बसेर काम गर्ने भएकाले अथवा साः (कोल) का मालिक भएकाले मानन्धरहरूलाई साल्मी या सायमि भनेको हुनुपर्छ ।[२] मानन्धरहरूलाई साल्मी भनी उल्लेख गरिएको ने० सं० ७२० सालको सक्कल ताडपत्र मसँग छ । यही साःको आधारमा काठमाडौँका मानन्धरहरूको बस्तीका नाम नै दैसाः, लायकुसाः, फल्चासाः, चसाः, न्हुसाः आदि नामहरू अद्यापि चल्दै आएका छन् । त्यस्तै भक्तपुर, ठिमी, कीर्तिपुर, साँखु, मच्छेगाउँ आदि ठाउँहरूमा मानन्धरहरूका कोल छन् ।

साल्मीहरूको साःको संरचना (Construction and Composition) अति नै दक्षतापूर्ण र वैज्ञानिक किसिमको देखिन्छ । कोलभित्र विविध सामानहरू जडान गरेर प्रत्येक सामानलाई एक-अर्कासँग यान्त्रिक रूपमा सम्बद्ध गराई तेल उत्पादन गर्ने जुन प्रविधि तयार पारेर देखाइएको छ, त्यो उच्चस्तरीय कालिगडीको प्रतिफल हो । करिब ३६ फिटको लम्बाइ र २४ फिटको चौडाइको समतल जग्गामा परालको छाना लगाई छाप्रो उठाएर कार्यस्थल (Workshop) बनाई मानन्धरहरू त्यहाँ आफ्नो पुख्यौली काम तेल उत्पादन गर्ने गर्दछन् ।

उहिल्यैदेखि तेल उत्पादन गर्ने केन्द्रीय स्थल साँगा (बनेपा र भक्तपुरका बीचमा अवस्थित) हो भन्ने कुरा त्यहाँको लिच्छविकालको सम्वत् ३२ को अंशुवर्माको अभिलेखले देखाउँछ । त्यस अभिलेखमा 'तैल्यशाला' मात्र होइन, यस ठाउँलाई 'शङ्गाग्राम' भनी उत्कीर्ण गरिएको छ । सम्भवतः तेलको काम गर्ने अथवा साः (कोल) धेरै हुने थलो भएकाले साँगा अथवा साःको ग्राम भनिएको हुनुपर्दछ । राजा अंशुवर्माले तेलको उद्योग फस्टाउन लगाउने उद्देश्यले कर माफी गरिदिएको कुरा त्यस अभिलेखमा उल्लेख छ ।[३]

साँगाबाट ४-५ कि० मि० पूर्व काभ्रे जिल्लाको केन्द्रीय स्थल बनेपामा मानन्धरहरूको ठूलो बस्ती छ । यो बस्ती बनेपाको नैऋत्य कोणको कोलाटोलदेखि वांख्यःटोल, इनाबहाः (तुकंप्वःगणेशस्थान) हुँदै कोभाः, अझ गाःबहाःनजिकसम्म विस्तार भई बनेपाको केन्द्रीय स्थल स्वधाः (तीनधारा) र बहिलसम्म मानन्धरहरूको बस्तीले ओगटेको छ । बनेपालाई 'एक हजार' भन्ने गर्दथे अर्थात् बनेपामा एक हजार परिवारले बसोवास गरेका थिए । त्यसमध्ये मानन्धरहरूको परिवार तीन सय थियो भन्ने उल्लेख पुराना-पुराना

---

[२] सायमि तयगु साः, ज्ञानकाजी मानन्धर, स्वर्णजयन्तीवर्ष स्मारिका, केन्द्रीय मानन्धर सङ्घ, २०६०

[३] लिच्छविकालका अभिलेख, ग्रन्थकार : धनवज्र वज्राचार्य, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, कीर्तिपुर, २०३० आषाढ

अभिलेखहरूमा पाइन्छ । यी बनेपाली मानन्धरहरूको मुख्य व्यवसाय खेती र तेल उत्पादन नै थियो । यहाँ क्वःनेसाः, क्वथोसाः, उपसाः, ख्वाउँसाः, न्हुसाः (पमांसाः), मलासाः, धलंछेसाः, लहुसाः, बुरसाः, मुस्यासाः, कोभासाः, ध्वाखासाः (लापासाः) आदि कोलहरू थिए । यहाँ (बनेपामा) पहिले जम्मा १८ वटा कोलहरू भएकोमा हाल आएर मानिसहरूले १४ वटा कोलको मात्र नाम लिन सकेका छन् । ती कोलहरूमा तेल उत्पादन गर्ने गर्दथे । भनूँ भने बनेपामा बढी मात्रामा तेलको उत्पादन हुने गर्दथ्यो । त्यो तेल गुणस्तरीय पनि थियो ।

प्रत्येक कोलमा १०-११ देखि २६ परिवारका सदस्यहरू सम्मिलित भएका हुन्थे र सदस्यहरूको आ-आफ्नो सङ्गठनात्मक गुठीजस्तै समूह हुन्थ्यो । कोलमा विविध देवीदेवताहरूका साथ कलशमा याचिंना (पवित्र जलका घडा) राखी जलकुण्डका रूपमा स्थापना गरिएको हुन्थे । कोलमा विधिपूर्वक विविध देवीदेवताहरू स्थापना गरी राखिएका हुँदा अन्य जातका मानिसहरूलाई त्यहाँ भित्र्याउँदैनथे । कलशमा विधिवत् पवित्र जल हालेर जलकुण्डका रूपमा स्थापना गरी राख्ने गरिएकाले जुठो बार्नुपर्दामा पनि मानन्धरहरूले चाहिँ त्यहाँ भित्र जान हुन्थ्यो । ती कोलका समूहहरूले त्यहाँभित्रका विविध देवीदेवताहरूलाई प्रत्येक महिनाको पूर्णिमाको दिनमा पूजा गरी आ-आफ्ना कोलमा भोज खाने गर्दथे । यसलाई यहाँ 'अथ' भन्ने गरिन्थ्यो ।

हाल पनि मानन्धरहरू गठामुगल चऱ्हे (घण्टाकर्ण चतुर्दशी) का दिनमा ती देवीदेवताहरूलाई पूजा गरी भव्य रूपमा भोज खाने गर्दछन् । त्यस दिनको भोजमा कोभाः भजनखलकका मानिसहरूले कोभाःसाःमा र वांख्यः भजनखलकका मानिसहरूले क्वःनेसाःमा श्रावण महिना (बौद्धमासमा) एक महिनासम्म बौद्धव्रत बस्ने या नबस्ने कुरा आ-आफ्नो टोलमा आ-आफ्नै ढङ्गले छलफल गरी निर्णय गर्दछन् । बनेपामा मानन्धरहरू वांख्यः र कोभाः भजनखलकमा विभाजित छन् । बनेपामा एक महिनासम्म बस्ने बौद्धव्रत विधियुक्त र धेरै खर्चिलो छ, साथै व्रत बस्ने टोलका लोग्नेमानिस-स्वास्नीमानिसहरू एक महिनाभरि त्यसै काममा लागिरहनुपर्दछ ।

कोलमा स्थापना गरी राखिएका देवीदेवताहरूलाई फूलपातीको दिन पूजा गरी एउटा राँगो बलि दिएर समयबजी खाइसकेपछि आ-आफ्नो भागको मासु घर लगेर दसैं मनाउँछन् र भोज खाने गर्दछन् । विजयादशमीको दिनमा सिकाभ्वय् खान्छन् । त्यो दिन बनेपाको वांख्यःटोलस्थित क्वःनेसाः र क्वथोसाः का मानन्धरहरूले कोल सञ्चालन गर्ने तर बोक्न सकिने सामानहरू, जस्तै पु[४],

[४] पु = तोरीको फुलो राख्ने (तेल पेल्न) छाला अथवा वेतबाट बनाइएको थैली



नँ[५], गोलकथि[६], लडी[७], तुचा[८] आदि लिई धिमे-भुछ्या बाजा बजाई नाच्तै-उफ्रँदै तुकंप्वःगणेशको मन्दिर परिक्रमा गर्दछन् । यो कार्यलाई 'पायाः न्ह्याकेगु' अर्थात् यी सामानहरू लिई झाँकी जाने भन्दछन् । त्यस्तै कोभाःसाःका मानन्धरहरूले पनि उक्त दिनमा कोभाःगणेशको मन्दिर परिक्रमा गर्दछन् अर्थात् झाँकी जाने गर्दछन् । त्यसपछि क्वःनेसाःका मानिसले कोतपूजा राखी बिहान तुकंप्वःगणेशलाई एउटा बोका बलि दिई बेलुका सिकाभ्वय् खाने गर्दछन् । दिउँसो उक्त गणेशको रथ बनाई साँझपख लायकुदरबारबाट एउटा किसिलि ल्याई रथमा राखिसकेपछि धातुनिर्मित गणेशको प्रतिमा रथमा विराजमान गराई कहँ, पाँगा, कसाईबाजा, मुहाली, ढोलक, धिमे-भुछ्या आदि विविध बाजा र विविध दाफा भजनका साथमा देशपरिक्रमा गरी जात्रा हुन्छ । यो जात्रा क्वःनेसाःका मानन्धरहरूको आयोजनामा हुने गर्दछ । विजयादशमीको उपलक्ष्यमा बनेपामा यही तुकंप्वःगणेशको मात्र जात्रा हुन्छ । काठमाडौंको अशोकविनायकको रथजात्रा पनि यही दिनमा जङ्गबहादुरको समयमा कोतपर्वपछि धर्मनारायण (सुब्बा गणेशदास मानन्धरका बाजे) मानन्धरबाट चाँदीको धातुनिर्मित गणेशको मूर्ति बनाउन लगाई सुरु गरेको रथजात्रा अद्यापि चल्दैछ । धर्मनारायण मानन्धरले उक्त देवताको मूर्ति राख्न द्योछें (जात्रा निकाल्ने पवित्र घर) बनाइदिनुका साथै धेरै रोपनी खेतगुठी पनि राखिदिएका थिए ।

क्वःनेसाः पहिलेदेखि नै भएको पुरानो कोल हो । पछि ने० सं० १००८ अर्थात् वि० सं० १९४४ सालमा पुरानो क्वःनेसाःसँगै गाँसिएर एउटा थप अर्को क्वःनेसाः बढाएको थियो । त्यसका लागि बोहखलकका धमनि र उनका छोरा जहरमुनि मानन्धरले आफ्नो जग्गा दान दिएर कोल बढाएका थिए । उक्त कोलका २६ सदस्य मानन्धरहरू थिए र अझै छन् पनि । त्यस बखत प्रत्येक सदस्यले उक्त कोल निर्माण गर्न २२ रुपियाँ राखी जम्मा रु. ५७२।- जम्मा गरी कोलको व्यवस्था राम्ररी नै गरेका थिए । धमनि र जहरमुनि अत्यन्तै धर्मात्मा थिए । उनीहरूले नै चण्डेश्वरी र तुकंप्वःगणेशमा बिहान-बिहान मुहाली बजाउन कुलवीर र रम्भा गरी दुईजना कुस्ले र ढोलक बजाउने कालु भन्ने ढो

[५] नँ = भैंसीको छालाले बलियो गरी तेल पेल्न बनाइएको ठूलो डोरी जसलाई ४-५ जना मानिसहरूले मात्र बोक्न सक्छन्

[६] गोलकथि = पु (थैली) भित्रको पिनालाई छुट्टयाउन प्रयोग गर्ने पन्यूँजस्तै काठबाट बनाइएको लट्ठी

[७] लडी = तोरीको फुलो हाँडीमा चलाउन काठबाट बनाइएको इँटाजस्तो डल्लो

[८] तुचा = तोरीको फुलोभित्र राख्न पु (थैली) को मुख खोल्नलाई प्रयोग गर्ने लट्ठीको टुक्रो

(डोम ?) गरी जम्मा तीनजनालाई बनेपाको कोलाटोलस्थित ३ कित्ता करेसाबारी कसैले खोस्न नहुने गरी दिएको कुरा वि० सं० १९४८ सालको अभिलेखले देखाउँछ । उक्त अभिलेखमा उनीहरूले विजयादशमीका दिन तुकंप्वःगणेशको रथजात्रामा बाजा बजाउन आउनुपर्ने कुरा उल्लेख छ । त्यस्तै वांख्यः भजनखलकलाई पनि दाफाभजन राम्रो होस् र गणेशको गुठी राम्ररी चलोस् भन्ने हेतुले प्रदान गरेको अन्दाजी एक रोपनी आधा (हाल साँगा गा० वि० स० मा पर्ने) जग्गा अद्यापि छँदैछ । यी बोहखलकका जहरमुनि मानन्धरले रथजात्रा राम्रो पार्न (पहिले माटोको प्रतिमा राखी जात्रा चलाउने गरेकोमा) धातुनिर्मित तुकंम्वःगणेश बनाएर प्रतिष्ठापन गरेका थिए । साथै रथ बिग्रिएको खण्डमा मर्मतका लागि रु. ६।२९ पैसा कोषमा राखिदिएको कुरा वि० सं० १९७३ साल असोज १५ गते रोज ४ को अभिलेखले देखाउँछ । त्यस्तै उता कोभाःसाःको एउटा शिलालेखमा पनि मानन्धर अनसिं भैल, हर्षनरसिं, हेरा, चित्तनरसिं, रामनाथ, काशीनाथ, मोहनमान, धर्मलक्ष्मी (मानन्धरनी) आदिले आफ्नै नाउँको जग्गाको तीन भाग कोभाःसाःलाई प्रदान गरेको कुरा ने० सं० १००६ को शिलापत्रले देखाउँछ । उक्त कोलको आम्दानीले चण्डेश्वरीजात्रामा चिराक बाल्ने र अन्य चाडपर्वहरूमा चाकमता (विविध देवालयहरूका चारैतर्फ बालिने बत्ती) बाल्ने आदि कुरा वर्णन गरिएको छ ।

लिच्छविकालमा साःको ग्राम कहलिएको शङ्गाग्राम (साँगा) मा अहिले कोल छैन । कोल चलाइरहेको जग्गामा घर बनाएर मानिसहरू बसोबास गरिरहेका छन् । त्यस्तै बनेपामा जम्मा पुराना कोलहरू १८ वटा भएकोमा अहिले मानिसहरूले १४ वटा कोलहरूको मात्र नाम लिन सकेका छन् । बनेपाका मानन्धरहरूले भएका कोल धमाधम बिक्री गरी घर बनाइसकेका छन् । पुराना प्रविधिका विविध सामान जडान गरी राखिएको एउटा कोल नमुनाका लागि भए पनि बाँकी राखिरहनुपर्ने थियो । सम्बन्धित निकायले यो काम पनि गरेन । यो एउटा अत्यन्तै दुःखलाग्दो कुरा हो । कहँ, पौँगा, धिमे, भुछ्या, नाय्खिं (कसाईबाजा), मुहाली, ढोलक, झ्याली आदि विविध बाजा र ७-८ वटा दाफा भजनखलकहरूका साथ विजयादशमीको दिनमा तुकंप्वःगणेशको रथजात्रा अत्यन्तै भव्य र रोचक हुन्थ्यो भनी मैले सुनिराखेकै हुँ । अहिले आएर बल्लतल्ल चलिरहेका उक्त जात्रामा कहिले के हुने हो, त्यो हेर्नचाहिँ बाँकी नै छ ।

पहिले-पहिले कोलहरू खूबै चल्दथे । आम्दानी राम्रै हुन्थ्यो र मानन्धरहरूलाई राम्रै व्यावसायिक काम हुन्थ्यो । कोलको आम्दानीबाट पूजा गर्थे, भोज खान्थे । तर मेसिनरी प्रविधि आएदेखि ती कोलहरू धमाधम लोप हुँदै गए । अझ मेसिनबाट विविध किसिमका आधुनिक तेलको उत्पादनले गर्दा



ती कोलहरूलाई ठूलो धक्का पर्न गयो । अनि गुणस्तरीय तेल पनि बजारमा उपलब्ध भएन । अहिले पनि कुनै-कुनै मानन्धरहरू बनेपामा आफ्नै प्रकारले अलि-अलि तेल उत्पादन गरिरहेका छन्, तर त्यो पनि आधुनिक मेसिनरी प्रविधिबाट नै ।

बनेपाका मानन्धरहरूको इतिहास गौरवपूर्ण छ । यहाँका धलंछेखलकका मोहनसिं मानन्धरले देवी चण्डेश्वरीबाट सुनको राँगाको टाउको वरप्रसाद पाएकाले उनी भाग्यमानी बने । उनले नै पशुपतिनाथलाई चढाएको एकमुखे रुद्राक्ष अद्यापि त्यहाँ छँदैछ । त्यही कारणले वंशावलीमा उनको नाम प्रचलित छ ।[८] 'गोपाल राजवंशावली' मा उल्लेख भएको वंटाक्षेत्रमा ने० सं० ४९६ मा चपाह (पाटीविशेष) बनाउने जगत मानन्धर थिए ।[९] उनी मानन्धरहरूका लागि इतिहासका पुरुष बने । तर त्यसभन्दा पनि पहिले ने० सं० ३५७ मा राजा अभय मल्लको शासनकालको एउटा ताडपत्र चाँगुनारायणको भण्डारभित्र पाइएको छ । त्यसमा वनियंप्य (वनियंध्य ?) अथवा बनेपा जिल्लाप्रमुख नथकिनी (नैकिनी) उदयश्री नामक मानन्धरले चाँगुनारायणलाई सुवर्णकोष र नैवेद्य चढाउनका लागि खेत चढाएको प्रसङ्ग छ ।[१०] पुराना-पुराना अभिलेखहरूमा बनेपालाई व्यनेपे, विन्यापा आदि लेखेजस्तै यो ताडपत्रमा बनेपालाई वनियंप्य लेखिएको छ । फेरि बनेपाका राजा जयार्जुनदेवको नाम उल्लेख भएको ने० सं० ४८५ सालको (मसँग भएको) एउटा सक्कल ताडपत्रमा अमरसी मांधूर (मानन्धर) को नाम उल्लेख भएको छ । त्यस ताडपत्रमा 'ग्राहक क्वथोशाला जेस्तनायक प्रमुख' पनि उल्लेख भएको छ । साँगाको अंशुवर्माको सम्वत् ३२ को अभिलेखमा तैल्यशाला (मानन्धरहरूको तेल उत्पादन गर्ने कार्यशाला - कोल) भनेजस्तै बनेपाको एउटा कोल क्वथोशाला (तेल उत्पादन गर्ने कोल) को नाम तिनै राजा जयार्जुनदेव नाम भएको ने० सं० ४८५ सालको ताडपत्रमा उल्लेख छ । तेल उत्पादन गर्ने कोलको नाम उल्लेख भएको सम्भवतः यो नै सबभन्दा पुरानो अभिलेख हुनुपर्दछ । किनभने सम्वत् ३२ को अभिलेखको 'तैल्यशाला' मात्र उल्लेख

---

८ (क) Nepal : History of the Country and the People, Daniel Wright, Cosmo Publication, New Delhi, 1983 A. D.
(ख) देवमाला वंशावली, प्रकाशक : पीरमहन्त क्षिप्रानाथ योगिराज, गोरक्षराष्ट्र नेपाल, सिद्धाचल, मृगस्थली, २०१३

९ गोपाल राजवंशावली, पत्र नं० ५६, ग्रन्थकार : धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल, प्रकाशक : नेपाल रिसर्च सेन्टर पब्लिकेसन, १९८५

१० बनेपाको ऐतिहासिक रूपरेखा, मोहनप्रसाद खनाल, नेपाल र एसियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर, २०५२

भएको छ, तैल्यशालाको नाम उल्लेख भएको छैन । यसमा 'क्वथोशाला जेस्तनायक प्रमुख' भनेर त्यस कोलको नायो (नाइके) लाई बुझाइएको छ । उनी मानन्धर थिए । अहिले पनि प्रत्येक कोलको सबैभन्दा बूढो मानिसलाई नाइके भनी मानिराखेकै छन् र त्यो कोलको नाम अहिले पनि प्रचलित नै छ ।

क्वथोशाला क्वाथसँग सम्बन्धित छ । २००७ सालपछिसम्म पनि तेल पेलेको दिन त्यस कोलका मानन्धरहरूले आधा माना तेल र एक धार्नी पिना बुझाउनुपर्दथ्यो । उक्त कोल चलेको दिनको हिसाब लायकुली द्वारेकहाँ हुन्थ्यो । त्यो कोल चलेको छ-छैन, निरीक्षण गर्न नायो माहाँ या माहाँहरू आउँथे र सोको रेकर्ड द्वारेलाई बुझाउँथे ।

**(साभार : काभ्रे टाइम्स, २०६३ साउन २३ गते मङ्गलबार)**

●

# परिशिष्ट

## साँगाको अंशुवर्माको अभिलेख

**मूल पाठ :**

१) कर्णालङ्काररौद्रश्वसदहिपवनव्यस्तपर्यस्त (के) शं
२) प्रत्यग्रच्छेदतापा (न्वि) तरुधिरशिरोमालभा ....
३) उच्चैर्मुक्ताट्टहासम्परिविगलदसृङ्नागचर्मोत्तरी (यं)
४) पायात्तद्रूपमैशं हिमगिरितनयाभीतभीतेक्षितं वः
५) स्वस्ति क्षितितलतिलकभूतात्कुतूहलिजनतानिमेष-
६) नयनावलोक्यमानात्कैलासकूटभवनात्प्रजाहित-
७) समाधानतत्परो भगवत्पशुपतिभट्टारकपादा-
८) नुगृहीतो बप्पपादानुध्यातः श्रीमहासामन्तांशुवर्मा
९) कुशली शङ्गाग्रामनिवासिनः कुटुम्बिनः प्रधानपु-
१०) रस्सरान् कुशलामाभाष्य समाज्ञापयति विदितम्भव-
११) तु भवतामस्माभिः हाम्हुं वस्तु द्वादश तैलघटाः कूम्हुं
१२) वस्तु च पञ्च भवताम्पीडाकरमित्यवगम्य युष्मत्पि-
१३) डापनोदार्थमद्यग्रेण प्रतिमुक्तास्तदेवमवसाय
१४) नातः परेणैतद्वस्तु तैलङ्कस्यचिद् देयं भविष्यद्भिरपि
१५) भूपतिभिः पूर्वराजकृतप्रसादानुवर्तिभिरेव भवि-
१६) तव्यमिति स्वयमाज्ञा दूतकश्चात्र सर्वदण्डनायको
१७) राजपुत्रविक्रमसेनः संवत् ३२ भाद्रपदशुक्लदिवा १
१८) तैल्यशालासु करणीयं .......... धिकरणविवर्जि
१९) तानि ॥

**अनुवाद :**

कानमा गहनाका रूपमा लगाइरहेका डरलाग्दा सर्पहरूको फुत्कारको हावाले जटा छ्यान्नब्यान्न भएको, भर्खरै काटिएको तात्तातो रगत चुहिरहेको मुण्डमाला लाएको, ठूलो स्वरले खित्का छोडेर हाँसिरहेको, रगत चुहिरहेको हात्तीको छाला ओढेको, पार्वतीले डराई-डराईकन हेरिएको महादेवको रूपले तिमीहरूलाई रक्षा गरोस् ।

कल्याण होस् । पृथ्वीतलको टीकाजस्तो भएको, कुरिकुरि लागेका दुनियाँहरूले आँखा झिम नगरेर हेरिएको कैलाशकुटभवन (दरबार) बाट दुनियाँको हित हुने काममा लागेका, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुबा) को पाउको अनुग्रह पाएका, गाथमा आराम भएका, श्रीमहासामन्त अंशुवर्माबाट शङ्गा (साँगा) ग्राममा बस्ने गृहस्थीहरूलाई यथोचित कुशलमङ्गल सोधेर आज्ञा भएको छ ।

तिमीहरूको दुःख बुझेर हाम्हुं भन्ने वस्तु, तेलका बाह्र घडा, कूम्हुं भन्ने वस्तु पाँच तिमीहरूको सुविधाका लागि आजदेखि छोडिदिएका छौं । यो कुरा तिमीहरूलाई थाहा होस् । यो कुरा बुझेर अबदेखि यी वस्तु र तेल कसैलाई बुझाउनुपर्दैन ।

पछिका राजाहरूले पनि पहिलेका राजाहरूले गरेर गएको निगाहको ख्याल राख्नुपर्दछ । यो मेरो आफ्नै आज्ञा हो ।

यहाँ दूतक सर्वदण्डनायक राजपुत्र विक्रमसेन छन् । सम्वत् ३२ भाद्र शुक्ल प्रतिपदा ।

तैल्यशाला (कोल) मा गर्नुपर्ने काम .......... अधिकरणबाट छुटाइएका छन् ।

**साभार : लिच्छविकालका अभिलेख, ग्रन्थकार : धनवज्र वज्राचार्य, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, काठमाडौँ, २०३० आषाढ**

## ने० सं० ४८५ को ताडपत्र



**(ने० सं० ४८५ को ताडपत्र)**

**मूल पाठ :**

१) स्वस्ति श्रीमदभिनावोदितश्रीपशुपतिभट्टारकमहाप्रभावपरिवर्द्धमानज्वलत् प्रतापाणलदग्धनिःशे(ष)रिवृन्दविराजमानश्रीमानेस्व(रीव)रप्रशादपीयूष परिपूर्णमूर्त्तिसमुद्गतपौरप्रजासंदोहानुराग-

२) जनितकीर्त्यानीतराज्यलक्ष्मीसमार्लिगितमहाराजाधिराजपरमेस्वरपरमभट्टारक श्रीश्रीजयार्जुनदेवपादा विजयिन तत्पाददौवारिकराजपुत्रनिंमदेव भारोस वचनेन गाढतराम्बिज्ञप्तिकामा-

३) कण्र्ण्य प्रसन्नीभूय आत्मीयपादवोपजीविनां यथाधिकारेष्वधि- कृतान्यथार्हमाभाष्य समाज्ञापयति विदितमस्तु भवतां ॥ विनयापुरी- देशस्याग्नेयदिशि प्रदेशे । अमरसीमांधूरस्य क्षेत्रात् पश्चिमत



४) रथनपतिस्य क्षेत्रादुत्तर ॥ चंदनभारोकस्य क्षेत्रात् पूर्व्वत । अमरसीहस्य क्षेत्राद्दक्षिणत । एतन्मध्ये । सातबूक्षेत्रनामसंज्ञकं भवति क्षेत्रांक रोव ७ एतव क्षेत्रं । ग्राहक क्वथोशाला जेस्तनायकप्रमुख

५) सिंगुठी यथाकालप्रवर्त्तमानसञ्चारार्घेन प्रढोकितपुष्पमालामादाय । क्रयविक्रयस्वाधीनत्वेन प्रशादाकृतमस्माभिस्तदवगम्य भवभ्दिर्वर्त्तमानके वा राजपुत्रै पौत्रेन वा कैश्चिदप्यत्र व्यावादो-

६) पपीडा कर्त्तुङ्कारयितुम्बा न लभ्यते । इति स्वयमाज्ञापितं ॥ प्रते महामात्यवंसज मदनराम छोड महथस् पद्मराम शुरवस् जीव खण्डागाहस ॥ सम्बत् ४८५ अश्विनिशुद्धि ९ शुभमस्त ।

**अनुवाद :**

स्वस्ति । श्रीमान्, भर्खरै उदय भएका, श्री पशुपति भट्टारकको ठूलो प्रभावले बढिबढाउ भइरहेका, बल्दो प्रतापको आगोले शेष नराखी शत्रुको जमात डढाएका, चम्किरहेका, श्री मानेश्वरीको वरप्रसादरूपी अमृतले परिपूर्ण शरीर भएका, उदाएका पौर र प्रजा (जानपद) को जमातको भक्तिबाट पैदा भएको कीर्तिले ल्याइएकी राज्यलक्ष्मीले अँगालिएका, महाराजाधिराज, परमेश्वर, परमभट्टारक श्रीश्रीजयार्जुनदेव विजयी भइबक्सन्छ । मौसुफका दौवारिक राजपुत्र निम्मदेव भारोले भनेका हुनाले ज्यादै गहिरो बिन्ती सुनेर प्रसन्न भइकन आफ्नो (हाम्रो) तर्फबाट जीविका चलाउने, आ-आफ्ना काममा खटाइएका अधिकारीहरूलाई यथोचित सोधेर हुकुम हुन्छ ।

विनयापुरी (बनेपा) देशको आग्नेय (दक्षिणपूर्व) दिशाको ठाउँमा, अमरसिंह मान्धूरको खेतदेखि पश्चिम, रत्नपतिको खेतदेखि उत्तर, चन्दनभारोको खेतदेखि पूर्व, अमरसिंहको खेतदेखि दक्षिण, यिनको बीचमा सातबू भन्ने नाउँ भएको, यो सात रोपनी खेत समयअनुसार चलेको मोलबापत चढाइएको फूलको माला लिइबक्सेर किनबेच गर्न सक्ने गरी ग्राहक, क्वथोशालाका ज्येष्ठ नायक मुख्य भएको मुर्दागुठीलाई हामीबाट निगाह गरिबक्सेको छ भन्ने कुरा तिमीहरूलाई थाहा होस् । त्यो थाहा पाएर तिमीहरूले, अहिलेका राजपुत्रहरूले वा नातिले (राजपुत्रहरूका छोराले) वा अरू कसैले पनि यहाँ झैझगडा गर्ने- गराउने वा दुःख दिने-दिलाउने गर्न पाइँदैन भनी आफैँबाट हुकुम भएको छ । प्रति (प्रतीत = थाहा पाउने अर्थात् साक्षी) महामात्य (महामन्त्री) को कुलमा जन्मेका मदनराम छोड महथ (महामन्त्री), पद्मराम सुरवश, जीव खण्डागाह ।

नेo संo ४८५ (विo संo १४२२) आश्विन शुक्ल नवमी ।

**(साभार : अर्जुनदेवको शासनका विषयमा, लेखक : महेशराज पन्त, केन्द्रीय मानन्धर सङ्घको स्मारिका, फाल्गुन २०५७)**

## भोत, कोबाहाल सालय्च्वंगु थौंकन्हय् बनेपा नगरपालिकाय् सङ्ग्रह यानातःगु नेo संo १००६ या शिलापत्र

**मूल पाठ :**

१) श्री गनेसः ॥ श्री भगवानः श्री चण्डेश्वरीः श्री जानभोजः कोनेः श्री चण्डेश्वरी ॥ श्री

२) दाफा भजन ॥ ॐ नमः श्री गनेसाय नमः ॥ ॥ ॐम अद्य श्री ब्रम्हणे द्वितियपहराध्य श्रमन व-

३) राहकल्पे वैवस्वत मनोंतरे अष्टाविसति तमस्य चतुर्भुज, मध्य कलीजुगे प्रथमपादे जाम्बुद्विपे हिमवतस्य

४) दक्षिन भागे गंगादेव्याः उत्तभागे ईह नेपाल मंदले, पसुपति सनिधाण, वासुकि क्षेत्रः वागमत्या पुर्वभागेः स्वस्ति सम्वत

५) सरानामधावि फलनाम सम्वतसरे ॥ अब्दे वैसाख मासे शुक्ल पक्ष, चतुर्दसि तिथौः विशाखा नक्षत्रे वरियान योगे

६) यथा कर्म्म मुहुर्तकेः सोमवारसरेः मेष रासिगतेः सवितरि तुला रासिगते सवि चन्द्रमसि ॥ कंन्या रासि देव गुरु थितेः

७) यव विसेषे पुण्यहेव यथा यथा थान थिते खुयवैः गुण विस्यप्यखुः विसिस्तदायाः पुन्यतिथौ तस्मीदिनेः मान-

८) गोत्रात्पन्नः आनसि भैल ॥ हर्षनरसिं ॥ हेरा ॥ चित्तनरसिं ॥ रामनाथ ॥ कासिनाथ ॥ मोहनमां ॥ धर्म्मलस्मिं ॥

९) मानंधर ॥ मानंधरनि ॥ इहत्र ॥ सौष्य परत्र ॥ स्वर्गबासः प्राप्ति कामनया ॥ यता यता यता प्रिति

१०) ये ॥ बनिकापुर श्वधाल तोलः कोबाहालसः चोंगु थव सुनावृत्तागु जग्गाः सालयागु मध्य प्यम्ह्सबो जिमिगु भागगु

११) सालस प्रदन्तः थो सालयागु आम्दानिः वइगु चिकंः खउः वदंगु थो सालया पंचपिसंः दुकायावः खच यायगुः र्ब-

१२) ख २ पतिकं ॥ ॥ श्री चण्डेश्वरियाताः बह तोला ६ तकाया तिसा तयगु जुलो ॥ ॥ अनं फलेयाः भगवांया-

१३) त घेंल ३ प्वाट चाकमता च्यायमाल जुलः प्वात छगु आश्विन शुदिया पूर्णमा खुन्हु ॥ प्वात छगु श्रावण वदि त्रियोद-

१४) सि पंजारा खुन्हुः ॥ प्वात छप्वाट गुंला खुन्हु छगु बियगुः जात भोजन षुन्हुः ॥ चिकं कुल २ बियमाल साल चले मजुसा

१५) ववो षुन्हु ॥ थो चिकं बिय मुमाल ॥ थुलि वर्ष २ पतिं खच यायगु जुलाः हङा उपंस्याख दको पंच सालयापिंता जो

१६) २ मत च्याइपिन्ता नयगु जुलोः ॥ थ्व गुथि वर्षपतिं अछिपुन पंचसालयापिसं गुथि चले याङाव नयेमा-

१७) लः ॥ ॥ ॥ तंस्मीदिन्यः मान गोत्रापंन हरिनरसिं ॥ भैल धिर्जविर ॥ मनारां ॥ रामसिं ॥

१८) दिव्यनारां ॥ भगतनारां ॥ णारां ॥ विरमा ॥ कवि ॥ भाजुविर ॥ राजमां ॥ हर्ख ॥ जितनारां ॥ गोपिनारां

१९) ॥ मानंधर ॥ पंच जिमङाम्हस्या नामन इहत्र वसौष्या ॥ परत्र स्वर्ग प्राप्ति कामनया ॥ यता

२०) यता यता प्रिताये ॥ वनिकापुर स्वधाल तोल, कोबाहालस, चोङगु थव सुनावृताागु जगा साल छंगू म-

२१) धे प्यबोस स्वबो पंचयागु भागगु सालसं प्रदत्तः थो सालयागु आमदानी जुईगु चिकं, खौ वदुगु थो साल-

२२) या पंच समुचयन ॥ वैशाष शुक्लया ॥ चतुर्दसि तंकुं पुजा खुन्हुः चाकमता च्यायगु प्वात ॥१॥ आ-

२३) सिन सुक्रया दसमि तिका षुन्हु चाकमत च्यायगु नेप्वात २ कार्तिक शुक्लया पुर्न्यमा षुन्हु ॥ चाक

२४) मता च्यायगु प्वात स्वप्वात माघ सुदि चतुरदसि ॥ सिलाचरे षुन्हु ॥ चाकमता च्यायगु थो प्यप्वात जुलो ॥

२५) ॥ वैशाख सुक्रया पुर्णेमास षुन्हु चिराक नेप्वा च्यायमाल, भजन दाफायात वर्षप्रति मे हाले खुन्हु चिकं, ब-

२६) भ्फां मालको बियमाल ॥ थुलि वर्षप्रति खर्च यायगु जुलो, बांकि सेख दुगु साल ल्ह्वनेता जुलो थोकिया बांकि

२७) सेख दवसा देव पुजा याङाव भोजन यायगु जुलो ॥ थोसया दृष्ट साछि आदित्य चन्द्र । बनिजोन त-

२८) स्य अमुन रापोइद संयम ... अहंच रात्रौ उभयंच सतया धर्म्मांच दानातिन उत्पति ॥ स्वदत्त परदत्त वा जो हरंति बसुंधरा षष्ठीवसु सहश्राणि विस्तायां जायतयंक्रमिः ॥ लिषितम् दैवज्ञ हेनाथ

२९) नेपाल सम्वत ॥ १००६ ॥ वैसा (ख) सुदि १४ ॥ रोज २ शुभ्भ ॥ थो शाल दाफायाता खर्च यांगु जम्मा

३०) ... जुलो ॥

**बनेपा कोबाहालको साः (कोल) को (हाल बनेपा नगरपालिकामा रहेको) नेपाल सम्वत् १००६ को शिलापत्रको अनुवाद**

श्री गणेश, श्री भगवान्, श्री चण्डेश्वरी, श्री जानभोजः कोने, श्री चण्डेश्वरी, श्री दाफा भजन ॥ ॐ लाई नमस्कार, श्री गणेशलाई नमस्कार ॥ ॐ अद्य श्री ब्रह्मणे द्वितीय प्रहर, वराहकल्प, वैवश्वत मन्वन्तर, अष्टविंशति चतुर्भुजमध्ये कलियुगको प्रथम पादमा, जम्बुद्वीप, हिमवत्खण्डको दक्षिणतर्फ, गङ्गादेवीको उत्तरतिर, श्री पशुपति सन्निधान (नजिक) वासुकीक्षेत्र, बागमतीको पूर्वभाग नेपालमण्डल छ । संरानाम धा वि फलनाम सम्वत्सर, वैशाख शुक्लपक्ष, चतुर्दशी, विशाखा नक्षत्र, वरियात योग, सोमबार, मेष राशि, सवितरि तुला राशिगत चन्द्रमसि कन्या राशि दिनमान गोत्रका आनसिं भैल, हर्षनरसिं, हेरा, चित्तनरसिं, रामनाथ, काशिनाथ, मोहनमां, धर्मलस्म मानन्धर, मानन्धरनी यो लोकमा सुख र परलोकमा स्वर्गप्राप्तिको कामना गर्दै बनिकापुर स्वधालटोल कोबाहालमा रहेको आफ्नो सुनाविर्ता जग्गामा निर्मित साः (कोल) को आम्दानीको हाम्रो भागको चार खण्ड गुठीलाई दत्त राखिदियौं । यो साः (कोल) बाट हुने आम्दानी तेल, खउ (पिना), खोक्रा (धूलो) सम्पूर्ण यो साः (कोल) का पञ्चहरूले हरेक वर्षमा उठाई खर्च गर्ने ।

हरेक वर्षको आम्दानीले निम्नअनुसार धर्मकार्य गर्ने –



१. श्री चण्डेश्वरीलाई चाँदी तोला ६ गहना (मुद्रामाला) चढाउने

२. फले (पाटी) मा रहेका भगवान्लाई घिउको ३ वटा चाकमता (दीप) बाल्ने –

क) आश्विन पूर्णिमाको दिन – १

ख) श्रावण वदी त्रयोदशी पञ्जरा (पञ्चदान) का दिन – १

ग) गुंलाधर्म प्रारम्भका दिन – १

घ) जातभोजनको दिनमा पनि बत्ती बाल्नुपर्छ – १

दीप बाल्नलाई तेल २ कुरुवा दिनुपर्छ । कोल चलेन भने तेल दिनुपर्दैन । यति वर्षैपिच्छे खर्च गर्ने । यी काम गरेर पनि शेष रहेजति कोलका पञ्चहरू र दीप बाल्ने २ जनाले भोज खाने । यो गुठी वर्षैपिच्छे सालमा पञ्चहरूले चलाइराख्नुपर्छ । यो दिनमा मान गोत्रका हरिनरसिं, भैल धीर्जवीर, मनारां, रामसिं, दिव्यनारां, भगतनारां, णारां (नारां), विरमा, कवि, भाजुविर, राजमां, हर्ख, जितनारां, गोपिनारां मानन्धरसमेत १५ जना पञ्चहरू मिलेर यो लोकमा सुख र परलोकमा स्वर्गप्राप्तिको कामना गरी वनिकापुर स्वधाटोल कोबाहालमा रहेको आफ्नो सुनावृता (सुनाविर्ता) जग्गामा रहेको ४ खण्डको ३ खण्ड कोललाई दत्त राखिदियौं । यी साः (कोल) बाट हुने आम्दानी तेल, खउ (पिना), धूलो यी कोलका पञ्चसमूहले वैशाख शुक्ल चतुर्दशी तंकुं (टक) पूजाका दिन चाकमता (दीप) बाल्ने ।

आश्विन शुक्ल दशमी टीकाका दिन चाकमता (दीप) २ वटा बाल्ने । कार्तिक शुक्ल पूर्णिमाका दिन चाकमत( (दीप) ३ वटा बाल्ने । माघ शुक्ल चतुर्दशी शिवरात्रिका दिन चाकमता (दीप) ४ वटा बाल्ने । वैशाख शुक्ल पूर्णिमाका दिन चिराक २ वटा बाल्ने । दाफा भजनलाई वर्षैपिच्छे भजन गर्न दिने । तेल र तमाखु जति चाहिन्छ दिने । यति वर्षैपिच्छे खर्च गर्ने । खर्च गरी बाँकी भएमा देवतापूजा गरी भोज खाने । यसको दृष्टि साक्षी आदित्य, चन्द्र । देवता प्रीति गरी यो दत्त राखिएको हो । यो दत्त नष्ट गरेमा हजारौं वर्ष कीरा भएर नरकको कष्ट भोग गर्नुपर्नेछ । यो दानपत्र लेख्ने दैवज्ञ हेनाथ हो । नेपाल सम्वत् १००६ वैशाख शुदि १४ रोज २ मा यो शिलापत्र प्रतिस्थापित गरियो । यो वर्ष साः (कोल) मर्मत गर्न र दाफा भजनका लागि जम्मा .......... खर्च भयो ।

**लिपि उतार तथा अनुवाद : छत्रबहादुर कायस्थ**

## क्वःनेसाः तुकंपोल ..... ने० सं० १००८ या शिलापत्र

**मूल पाठ :**

१) श्री गणेसाय नमः ॥ ॥ ॐ अद्य स्वेतवराहकल्पे सुयबलनो द्वितीय प्रहर्द्धे

२) ॥ स्वेतवराहकल्पे ॥ वेवस्वत मन्वन्तरे ॥ सत्य त्रेता द्वापरात ॥ कलिजुगस्व प्रथमपादे ॥

३) भरतषन्दे ॥ जाम्बुद्वीपे हिमवत दक्षिणपादे ॥ नेपाल मन्दले ॥ श्री ३ पसुपती सन्निधाने ॥ वासुकि

४) क्षत्रे बाग्मत्या पुर्वकुले ॥ कोसिकायां पश्चीमकुले ॥ श्री ३ चन्देश्वरी संनीधाने । बंदीकपुल च-

५) नगरस्थाने ॥ आर्ज्यावर्त्त इहवि पुण्यभूमौ ॥ मासोन्तमे ॥ फाल्गुणमासे कृष्णपक्ष ॥ तृती-

६) यां पुण्यतिथौ ॥ हस्तनक्षत्रे गांध जोगे ॥ जथाकर्ण मुहुर्त्तके ॥ वृहस्पतीवारशरे ॥ कुंभरासि गते सवीतरि ॥ कन्या

७) रासिगते चन्द्रमसि ॥ ऐव गुणं विसिष्टेसपी सिष्टरायां पुण्यतिथौ ॥ कास्यमान गोत्रोत्पन्न ॥ बोहोबुंया मा-

८) नंधर ॥ पीता धंमनी ॥ पुत्र जहरमुनी ॥ तौ द्वया पित्त पुत्रेन ॥ इहत्र सुख सौष्यां ॥ परत्रे सोर्गलोक ॥ वैकुंठ वा-

९) स प्राप्ति कामनार्थे ॥ तुकंपोल ॥ पर्व पर्व काले भजनाय ॥ तथा दी दानाथं ॥ भजनयात

१०) दछु तोल वांषेल तुकंपोल ॥ स्थाने पाताल कीबा भूमी संप्रयदे ॥ पुनरपि नेपालभाषा ॥ बोहोबुं-

११) ञाया मानंधर ॥ बुबा धंमनीया काये जहरमुनी ॥ थे नेम्हा बा कायन ॥ इहत्र सुख सौषे ॥ परत्र ब्रंम्हलो-

१२) क वैकुंठ बास लायेमाल धकाव ॥ दछु तोल वांषेल तुकंपोल ॥ ॥ या थास चोङगु पाताल कीबाचा साल

१३) दयकेता दुताबिया जुलो ॥ थो सालया आम्दानी ॥ कार्तिक शुक्लया पुण्यमा खुनु ॥ ॥

१४) तुकंपोलयाके जथासक्त मता च्वाय ॥ ॥ आश्विन शुक्रया त्यंमा कुनु ॥ याके जथा-



१५) सक्त मत च्याके ॥ पर्व काले ॥ ? ॥ याता मता च्याय ॥ वर्षप्रती साल स्यंल्होनेता जागेरा

१६) तये ॥ थुली याङान परशेष दवगुया ॥ ॥ ? ॥ याता मता च्याय खुनु भजन खल ॥

१७) मानंधर सत्यनालां १, रामनालां १, तधीक इमो १, मोहनसिं १, बुलिकृष्ण १, भानुमनी १

१८) गुनविर १, लामन्सं १, धनवंत १, जहरंमुनि १, हर्षमुनी, देवनालां १। न्हुछे १, धन-

१९) विर १, आसामदु १, धर्मनालां १, जगमोसिं १, भीमकृस्न १, देवनालां १, भासि १, का-

२०) लीदास १, विसुमान १, थोतेत्या २५ कीवाचा तम्हा समतस २६ स्मतन

२१) या सल्हान दवथे भोज्या भोजन यायमाल ॥ थो वांषेल साल दयकपुं

२२) थ्वम्ह २६ म्हासेन म्हान मोह तका २२ ल्हाङा तया ज्मा तका

२३) ५७२ स ॥ तुका साल दयेकगु जुल ॥ सो दत्त परदत्तं वा ॥

२४) जो हरंति बसुंधरा षष्ठी वसु सहश्रान विष्टाया जायते कृमी ॥

२५) दीव्य साछि चन्द्र सुजं ॥ जल अग्नी ॥ दृष्ट साछि ॥ वांषेलया ॥

२६) नर माक ॥ मानंधर ॥ दछु तोलया धनवीर मानंधर ॥ सातोल-

२७) या धनारां ॥ मानंधर ॥ लिषित ॥ दैवज्ञ भोलानाथ ॥

२८) संवत साके १८९० ॥ विक्रम सम्वत १९४४ ॥ साल श्री

२९) नेपाल सम्वत १००८ ॥ साल मिती फारगुन वदि ३ रोज ॥

३०) ५ ॥ शुभं ॥

## बनेपा क्वःनेसाः (कोल) मा रहेको ने० सं० १००८ को शिलापत्रको भावार्थ

श्री गणेशलाई नमस्कार । ॐ अद्य श्वेतवाराहकल्प, द्वितीय परार्द्ध, वैवश्वत मन्वन्तर, सत्य त्रेता द्वापर युगपछि कलियुगको प्रथम पादमा, भरतखण्ड, जम्बुद्वीप, हिमवतको दक्षिण पादमा, नेपाल मण्डल, श्री ३

पशुपतिको सन्निधान, वन्दिकापुर नगरस्थानमा, आर्यावर्त पुण्यभूमिमा, फाल्गुन कृष्णपक्ष तृतीया, हस्ता नक्षत्र, गाँध योग मुहूर्तमा, काश्यप गोत्रका बोहबुगा बस्ने मानन्धर पिता धंमुनि, पुत्र जहरमुनि, यी दुई बाबु र छोराको यस लोकमा सुख र परत्र (मरेपछि) मा स्वर्गप्राप्तिको कामना गरी भजन गर्ने र दान गर्ने पुण्यकार्यका लागि दछुटोल वांख्यः तुकंपोलस्थानको पातालबारी चढाइयो ।

अब नेपाल भाषामा लेखिन्छ । बोहबुङका धनी मानन्धर बुबा धंमुनि, काय (पुत्र) जहरमुनि यी दुई बाबुछोराले यस लोकमा सुख र परलोकमा ब्रह्मलोक, वैकुण्ठमा बास बस्न पाऊन् भनी दछुटोल, वांख्यः, तुकंपोलमा रहेको पातालबारी साः (कोल) निर्माण गर्न प्रदान गरियो । सालसालको आम्दानीले कार्तिक शुक्ल पूर्णिमाका दिन तुंकपोलदेवतालाई यथाश्रद्धा दीप बाल्ने । आश्विन शुक्ल त्रयोदशीका दिनमा पनि दीप बाल्ने । पर्वपर्वकाल दीप बाल्ने । वर्ष वर्षमा साः (कोल) जीर्णोद्धार गर्न जगेडा राख्ने । यति गरेर पनि बाँकी भएमा दीप बाल्ने दिनहरूमा भजनखलक मानन्धर सत्यनालां १, रामनालां १, तधिक इमो १, मोहनसिं १, बुलिकृष्ण १, भानमुनि १, गुनवीर १, लामन्सं १, धनवंत १, जहरमुनि १, हर्षमुनि १, देवनालां १, न्हुछे १, धनवीर १, आसामदु १. धर्मनालां १, जगमोसिं १, भीमकृस्न १, देवनालां १, भासिं १, कालिदास १, विसुमान १ सहित २५ जना र खेतबारी प्रदान गर्नेसमेत २६ जनाको सल्लाहले बाँकी रकमले पुग्ने गरी भोज खानू । यो वांख्यः (वाङ्खेल) साः (कोल) निर्माण गर्ने जम्मा २६ जनाले प्रत्येकले मो॰ रु॰ २२।- का दरले जम्मा रु॰ ५७२।- खर्च गरी कोल निर्माण भएको हो । यो दत्त हरण गरेमा हजार वर्षसम्म नरकमा कीरो भएर दुःख खेप्नुपर्नेछ । यस पुण्यकार्यका दिव्य साक्षी चन्द्र, सूर्य, जल, अग्नि, दृष्ट साक्षी वांख्यःका नरमाक मानन्धर, दछुटोलका धनवीर मानन्धर, साटोलका धंनारां मानन्धर हुन् । यो शिलापत्रको व्यहोरा लेख्ने दैवज्ञ भोलानाथ हुंन् । यो शिलापत्र प्रतिष्ठा गरेको दिन शाके १८९०, वि० सं० १९४४, श्री नेपाल सम्वत् १००८ फाल्गुन वदि ५ रोज ३ हो ।

**लिपि उतार र अनुवाद : छत्रबहादुर कायस्थ**



# बनेपामा गुंलाधलं

पाञ्चालदेश (पनौती) मा राजकुमार महासत्वको जन्म भएको थियो भनी बौद्ध आख्यानमा उल्लेख छ । एक दिन जङ्गलमा महासत्व राजकुमार सिकार खेल्न जाँदा भोकले मर्न लागिरहेकी एक बघिनी र उसका पाँचवटा डमरुहरूलाई देखे । आफ्नो शरीरको मासु आफैंले काटेर खुवाई उनले आफ्नो जीवन बलिदान गरेरै भए पनि तिनीहरूको जीवनरक्षा गरिदिए । त्यसरी उनले बोधित्व प्राप्त गरे र उनी नमोबुद्ध बने ।

नमोबुद्ध बनेपाबाट दक्षिणपूर्व १२ कि० मि० दूरीमा पर्दछ । नाला करुणामय पनि यही क्षेत्रभित्र पर्दछ । यी देवतालाई त्यहाँ प्रतिस्थापन गर्न बनेपाका राजाको पनि राम्रो हात रहेको थियो भनी दाफा भजनगीतमा उल्लेख छ । भगवान् बुद्ध नाला करुणामयमा बर्खावास बस्नुभएको कुरा 'स्वयम्भू महाचैत्य' मा उल्लेख छ ।[1]

किराती राजा ह्युमातीका छोरा जितेदास्तीका पालामा यहीँबाट योगाकुल पर्वत (नमोबुद्ध जङ्गल) मा गई त्यस स्थलमा बुद्धले भुइँमा हातले स्पर्श गर्दा फाटेको जमिनभित्रबाट सानो स्तूप निस्कियो । त्यो स्तूपभित्र भएको राजकुमार महासत्वको अस्थिधातु आफ्ना शिष्यहरूलाई दर्शन गराएपछि बुद्ध आफूले पनि नतमस्तक भई त्यसलाई नमः गर्नुभयो । यसरी भगवान् बुद्धले नै नमस्कार गर्नुभएकाले नमोबुद्ध भनिएको भन्ने जनश्रुति छ ।

नाला करुणामय र नमोबुद्धक्षेत्रका बीचमा अवस्थित यो बनेपामा पहिल्यैदेखि बौद्धधर्मको प्रभाव व्याप्त छ । काठमाडौं उपत्यका ठूलो तलाउका रूपमा हुँदा महाचीनबाट मञ्जुश्री बोधिसत्व आई नगरकोटजङ्गलको ल्हासापाकुमा बास बस्नुभएको थियो ।[2] कालीदहको पानी कुन ठाउँबाट

---

१ स्वयम्भू महाचैत्य, हेमराज शाक्य, प्रकाशक : स्वयम्भू विकास मण्डल, ने० सं० १०९८

२ ख्वपया वाहा वही, अध्याय १, पृष्ठसङ्ख्या १, प्रकाशक : मैत्रेय युवा सङ्घ, ख्वप, २०६१

खोलिदिए राम्रो होला भनी ती बोधिसत्वले तलाउलाई तीनपटक घुमेर निरीक्षण गरे भन्ने कुरा स्वयम्भूपुराणमा उल्लेख छ । तीनपटक घुम्ने क्रममा मञ्जुश्री बोधिसत्वले दायाँबाट नै अवश्यमेव घुमेको हुनुपर्दछ । दायाँबाट घुमेर आउँदा बनेपामार्ग भई घुमेको हुनुपर्दछ । यसरी नालाबाट भगवान् बुद्ध जाँदा र मञ्जुश्री बोधिसत्वको पनि यहाँ आगमन हुँदा बनेपामा बौद्धधर्मको ठूलो प्रभाव र प्रचारप्रसार अवश्य नै भएको हुनुपर्छ ।

बनेपाका मानन्धरहरूले बौद्धमास (गुंला) मा श्रृङ्गभेरी कथाका आधारमा गर्ने गुंलाधलं (व्रत) विधिपूर्ण हुनुका साथै अर्थपूर्ण पनि छ । यो गुंलाधलं कहिलेदेखि सुरु भयो भन्ने कुरा प्रस्टिने कुनै अभिलेख हालसम्म कतै पाइएको छैन । तर हालसालै प्राप्त भएको एक ताडपत्रमा ने० सं० ८३७ मानन्धर लत्न सिं र लक्षराम दुई दाजुभाइले गुंलाधलंका लागि झुकचा वुं नामको खेत ३ रोपनी र बाकोननीस्थित ३ तले घर गुंलाधलं गुठीलाई दत्त राखिदिएको कुरा उल्लेख छ । तर अहिले सो गुठी र गुठीमा राखिएका खेत र घर के भए, कसैलाई पनि थाहा छैन ।

बनेपाका मानन्धरहरू दुई दाफाभजनमा विभाजित छन् – वांख्यः र कोभाः । गठेमुगल चह्रे (घण्टाकर्ण) का दिनमा वांख्यःटोलका मानन्धरहरूले क्वःनेसाःमा र कोभाःटोलका मानन्धरहरूले कोभाःसामा बसेर गुंलाधलं (एक महिनासम्म गरिने बौद्धव्रत) गर्ने या नगर्ने निर्णय गर्दछन् । यसरी टोलका सबै मानिसहरू बसेर निर्णय गर्नुपरेको मुख्य कारण यो व्रत खर्चिलो हुनु र त्यस टोलका लोग्नेमानिस तथा स्वास्नीमानिसहरू सबै एक महिनासम्म लागिपरिरहनुपर्नु हो । यही कारणले यो व्रत कुनै-कुनै वर्षमा मात्र हुने गर्दछ ।

व्रत बस्ने निर्णय भइसकेपछि गुंलाधलंको अघिल्लो दिन साँझपख चण्डेश्वरी खोलानजिकै स-साना बौद्ध स्तूपहरू बनाउनका लागि कालो माटो लिन एकजना वज्राचार्य पुरोहितका साथ मानन्धरहरू माटो झिक्ने ठाउँमा जान्छन् । वज्राचार्यले त्यहाँ विधिपूर्वक धूप बाली एउटा किसिलि स्थापना गरेर पूजा गर्दछन् । यो व्रतमा ताः, पास्त, पाँगा, वौचा, धाः, धिमे, भुछ्या, नाय्खिँ, सिछ्या, ख्वालीमाली, टीँ, धुलु, चटकी, ढोलक, पछिमा, कोखिँ, दबदबु, बाँय्चा, मुहालो आदि विविध बाजा त्यस टोलका दाफा भजनखलकका मानिसहरूद्वारा बजाइनुपर्ने हुँदा र ती बाजाहरू नाट्येश्वरसँग सम्बन्धित भएका हुँदा सूर्यास्तपछि कलालिपूजा तयार गरी नाट्येश्वरको पूजा गर्न जान्छन् । पूजा गरी दाफा भजनगुरुले एउटा किसिलिमा नाट्येश्वरलाई साधना गरी धलंछे (व्रत बस्नेको घर) को एक खोपामा एक महिनाभरि विधिपूर्वक पूजा गरी राखिराख्तछन् । पूजा गरेर घरमा फर्केपछि दाफा भजनगुरुले त्यस टोलका



व्यक्तिहरूमध्ये विविध बाजा एक-एक गरी बजाउने मानिसहरूलाई एक महिनासम्म सो बाजा बजाउने जिम्मा दिई हस्तान्तरण गरिदिन्छन् । अनि प्रसाद ग्रहण गरी समयबजी खान्छन् । त्यस बखत सर्वप्रथम द्यःल्हायें गरेर ती बाजाहरू बजाइन्छन् । त्यसपछि बेलुकी एक समूहले धिमे भुछ्या बजाई मानन्धरहरूको वांख्यः र कोभाःटोलमा श्रद्धा र भक्ति हुनेहरूलाई व्रत बस्न आउन निम्तो गर्न जान्छन् ।

व्रत बस्ने केटाहरू द्यःभारी र चाभारीमा विभाजित हुन्छन् । चाभारीमा पर्नेहरूले चा (कालो माटो) को व्यवस्था गरिदिन्छन् र द्यःभारीमा पर्नेहरूले व्रत बस्नेहरूद्वारा बनाइएका स-साना स्तूपहरू सङ्कलन गरी भक्तजनहरूलाई दर्शन गराउन एकै ठाउँमा राखिरहन्छन् । कामको व्यवस्था मिलाउन र काम अह्राउनका लागि यी द्यःभारी र चाभारीमध्येबाट एक-एकजना नाइके छनोट गरिन्छ । व्रत बस्ने केटाहरू अघिल्लो दिनको मध्यरातमा ५ समूहमा विभाजित भई ५ पवित्र कुण्डमा कलश लिएर ये(या)चिँना (पवित्र जल) ल्याई व्रत बस्नेको घर (धलंछे) को एउटा गोप्य कोठामा कलशहरू स्थापना गरी प्रतिदिन पुरोहितद्वारा बौद्धस्तोत्र पढ्दै नित्य पूजा गरिरहन्छन् ।

सो कोठा (याचिँकोठा), कालो माटो तयार पार्ने अर्को कोठा (चाकोठा) र स-साना चैत्यहरू थुपारिएको एउटा खुला ठाउँ गरी यी तीन ठाउँमा एक महिनासम्म चौबीसै घन्टा पानसमा बत्ती बालिराख्नुपर्दछ । केही गरी यी तीनै ठाउँमा एकैचोटि बत्ती निभ्न गएमा त्यो देशमा अशुभ हुने सङ्केत हुन्छ भन्ने जनविश्वास छ । चैत्यहरू थुपारिराखेको ठाउँमा एकजना पुजारी पालैपालो गरी चौबीसै घन्टा बसिरहनुपर्दछ । भगवान्को दर्शन गर्न आउने श्रद्धालु भक्तजनहरूलाई पुजारीले जल छर्किदिने र प्रसाद दिने गर्दछन् ।

श्रावण शुक्लपक्ष (बौद्धमास) प्रतिपदाको दिनदेखि व्रत बस्नेहरू दुई-दुईजनाको केटा-केटाको अथवा केटी-केटीको जोडी हुनुपर्दछ । हरेक दिन बिहान उनीहरूले आफूलाई शुद्ध बनाउन नुहाउनुपर्दछ । उनीहरूलाई कुखुरा, कुकुर आदि जन्तुहरूले छोए फेरि नुहाउनुपर्दछ । व्रत बस्नेहरूले प्रत्येक दिन साँझ भगवान् बुद्धका स्तूपहरूलाई दीप अर्पण गरी बेलुकी 'पालुँ की' (प्रसाद) लिएर एकछाक भोजन गर्दछन् । त्यसलाई 'पालुँ यायेगु' भन्दछन् । 'पालुँ' गर्दा रोटी खाने गर्दछन्, भात खान हुँदैन । माछा, मासु, फुल आदि पनि खान हुँदैन । प्रत्येक जोडीले एकै कोतपूजा राख्नुपर्दछ । गुंलाधलंको थालनीको दिनमा अर्थात् प्रतिपदाको दिनमा व्रत बस्नेहरू लहर लागेर आ-आफ्ना ठाउँमा बस्तछन् । प्रत्येक कोतपूजाका साथ एक-एकवटा कलश हुन्छ । पूजामा दुई वज्राचार्यहरूले साथ दिएका हुन्छन् । एक हातले घण्ट बजाउँदै, अर्को हातले

वज्र समाउँदै वज्राचार्य पुरोहितले 'अब फूलका २१ टुक्रा बनाएर स्तूपमा चढाउने, अर्घ्य दिने, अक्षता लिई दुवै हातले विन्ती गरिरहने' भन्ने क्रममा आफू बसिरहेको अगाडिको आसनका रूपमा काठद्वारा बनाइएको 'कोपु' (फल्याक) मा आफैंले बनाएर राखेका माटाका स्तूपहरूलाई पूजा गर्ने निर्देशन गर्दछन् । त्यहीबमोजिम त्यहाँ ३-४ घन्टासम्म भगवान् बुद्धको पूजा हुन्छ । यस्तो भव्य पूजा त्यो महिनाको प्रत्येक बुधबार र प्रतिपदाको दिनमा हुने गर्दछ । अर्को बार र तिथिमा भने व्रत बस्ने श्रद्धालु भक्तजनहरू १० बजेदेखि २-३ बजेभित्र आफ्नो अनुकूल समयमा आई आफूले सकेजति चैत्य बनाएर पूजा गरी घर फर्कन्छन् र बेलुका सधैंझैं 'पालुँ' गर्दछन् ।

यो व्रतमा ताः, पास्त, पोँगा, बौचा, धाः, धिमे, भुछ्या, नायुखिँ, सिछ्या, ख्वालीमाली (बौचा), टीँ, धुलु, चटकी, ढोलक, पछिमा, कोखिँ, नगरा, दबदबु आदि बाजाहरू दाफा भजनखलकका मानन्धरहरूले बजाउँछन् । बाँयचा र मुहाली कुसलेहरूलाई पारिश्रमिक दिई एक महिनासम्म बाजा बजाउन लगाउँछन् । ती बाजाहरूका साथ मानिसहरू प्रत्येक बिहान बनेपाका विविध देवीदेवताहरू, जस्तै चण्डेश्वरी, धनेश्वर आदि र बनेपा इलाकाका सहरहरूका देवीदेवताहरू, जस्तै नालाका करुणामय र भगवती, धुलिखेलका गौखुरेश्वर महादेव र भगवती, पनौतीका इन्द्रेश्वर महादेव र ब्रह्मायणी आदि तीर्थस्थलहरूमा जान्छन् । त्यस्तै नमोबुद्ध, रातो मच्छिन्द्रनाथ, चोभारका आदिनाथ, स्वयम्भू, बौद्ध, पशुपतिनाथ, साँखुकी खड्गयोगिनी आदि देवीदेवताको पनि दर्शन गर्न जान्छन् र त्यहाँ ती बाजाहरू बजाउँछन् । यो परिक्रमाको क्रममा साँगा हुँदै भक्तपुर र ठिमी सहर प्रवेश गरी त्यहाँका मानन्धरहरूको बस्तीमा 'धुलुपाः फयेगु' गरिन्छ ।

गुंलाधलंमा 'धुलुपाः फयेगु' गर्ने चलन एउटा गजबको परम्परा हो । श्रद्धालु व्यक्ति 'हामीकहाँ धुलुपाः फयेगु' भन्न आउँछन् र त्यहाँ दाफाभजनका व्यक्तिहरू आ-आफ्ना बाजा बजाउँदै जान्छन् । 'धुलुपाः फयेगु' को अर्थ त्यस ठाउँका देवी या देवतालाई विधिवत गुंलाधलंका विविध बाजाहरू सुरुदेखि अन्तसम्म क्रम मिलाएर बजाउन लगाई एक वज्राचार्य पुरोहितद्वारा पूजा गर्न लगाउनु हो । त्यो अत्यन्तै सुन्न र हेर्न योग्य छ । त्यस बखत त्यहाँ सम्बन्धित टोलका मानिसहरू पाटी अथवा कुनै एक ठाउँमा बसी हेरिरहन्छन्, सुनिरहन्छन् । त्यस बखत त्यहाँ त्यस टोलका विविध परिवारका स्वास्नीमानिसहरू 'किभु' राख्न आउँछन् । 'कि' को अर्थ कुनै देवीदेवतालाई चढाउने चामल, धान, गहुँ, पिठो आदि वस्तुहरू हुन्छ भने 'भु' को अर्थ थाल हो । त्यसैले 'किभु' को अर्थ थालमा राखेर देवतालाई चढाउन ल्याइएको विविध



अन्न र दक्षिणा (पैसा) हो । आइमाईहरूले 'किभु' त्यहाँ बिछ्याइराखिएको कुनै सतरन्जा, सुकुल आदिमा खन्याएर जान्छन् । श्रद्धा हुने व्यक्तिले दाफाभजनका मानिसहरूलाई आफ्नो घरमा लगेर जलपान पनि गराउँछन् । गुंला बाजाहरू (जस्तै : ताः, पस्ता, धुलु, पोँगा, मुहाली आदि) लाई भेटी पनि चढाउँछन् ।

पूजा सकिएपछि त्यो 'किभु' गुंलाधलंका मानिसहरूले उठाएर लैजान्छन् । यसबाट एक किसिमले 'धलं' लाई आमदानी हुन जान्छ । यो 'धुलुपाः फयेगु' सबैभन्दा पहिले बनेपाको कुनै मानन्धरटोलबाट सुरु भएको हुनुपर्दछ । परदेश (बनेपाबाहिर) घुम्न जाने धलं बाजा ४ दिनपछि बनेपामा फर्कन्छन् । तर प्रत्येक बिहान विविध देवीदेवताको दर्शन गर्न धलं बाजासहित जाने काम गरे पनि बुधबार र प्रतिपदाको दिन ती बाजाहरू बाहिर लान हुँदैन । किनभने ती दिनहरूमा धलंछेमा व्रत बस्नेहरूले भव्यताका साथ बुद्धपूजा गर्नुपर्दछ । त्यो दिनको धलं अर्थात् बुद्धपूजा सकिएपछि साँझपख मात्र दाफाभजनका मानिसहरूले आ-आफ्ना बाजा लिई सधैंझैं बाजा बजाउँदै सहरको परिक्रमा गर्दछन् । यसरी गुंला बाजा बजाई विविध ठाउँ र बनेपाबाहिरका गाउँ अथवा सहरहरूको परिक्रमा गर्दा ती बाजाको ध्वनिले देशका बिघ्नबाधा हटेर जान्छन् भन्ने जनविश्वास छ ।

यो धलं (बौद्धव्रत) भाद्र शुक्लपक्ष प्रतिपदाको दिनमा समाप्त हुन्छ । तर यसको ६ दिनअगाडि श्रद्धालु केटी अथवा आइमाईहरू धलंछेमा छुट्टै ठाउँमा बसेर ५ दिनसम्म केही नखाई 'डान्हु अपासँ' नामक विशेष व्रत बस्तछन् । उनीहरूलाई कसैले छुन हुँदैन । द्यःभारीका केटाहरूले उनीहरूलाई सुरक्षासाथ पहरा दिइरहेका हुन्छन्, चाहिएका सामग्रीहरू पुऱ्याइदिन्छन् र बिहान-बिहान नुहाउनका लागि निर्धारित स्थलमा होसियारीका साथ लगिदिन्छन् । बेलुकातिर ती विशेष व्रत बस्नेहरूलाई वज्राचार्यले बौद्धस्तोत्र पढेर धलंभरि बनाइएका स-साना चैत्यका अगाडि घुँडा टेक्न लगाई आफ्ना दुवै हातले तीनपटक अँजुली-जल खुवाउँछन् । यसलाई 'पालुँ यायेगु' भन्दछन् । यो क्रम ५ दिनसम्म चलिरहन्छ । छैटौं दिनमा साँझपख मात्र उनीहरूले अन्न खान हुन्छ ।

गुंलाधलंको समाप्तिको ५ दिनअगाडि बाजावालाहरू बिहान बाहिर घुम्न जाँदैनन्, बरू भात खाइसकेपछि धलंछे (व्रत बस्ने घर) मा जम्मा हुन्छन् । व्रत बस्ने धलंछेका आइमाईले कोतपूजा राख्छन् । बिहान ११ बजेपछि वज्राचार्य पुरोहित, व्रत बस्ने श्रद्धालु भक्तजनहरू, बाजावालाहरू र टोलका अन्य व्यक्तिहरू बनेपा इलाका अर्थात् बनेपावरिपरिका गाउँठाउँहरूमा घुम्न जान्छन् । बनेपाको उत्तरी भाग आजाद माध्यमिक विद्यालयको समीपस्थित तीन त्वापकी भगवतीबाट सुरु भएको पूजा त्यहाँबाट माथि धःगाःगणेश,

चण्डेश्वरी, चण्डेश्वरीघाट, पाचुकुमारी, बुडोल हुँदै तुल्टी, बहीकेवाको छेउछाउ, चसीजङ्गलकी बालकुमारी, क्वाताल, सोमुदेग, मगरगाउँतल्तिरको ग्वादे (गोठालाहरूका देवता) बाट फेरि उही तीन त्वापमा आएर एक घुमुवा लिइसकेपछि सम्बन्धित ठाउँका सम्बन्धित देवीदेवताहरूको पूजा गर्ने क्रम टुङ्गिन्छ । घुमुवामा परेका विविध देवीदेवताहरूको विधिपूर्वक बौद्धस्तोत्र पाठ गरी पूजा गरिन्छ । यी देवीदेवताहरूलाई यसरी पूजा गरेर धलंछेमा साधना गरी ल्याइएको हुन्छ । वंशावलीमा उल्लेख भएअनुसार कलिगत वर्ष ४१९७ मा राजा आनन्ददेवले चारैतर्फ छरिएका स-साना बस्तीहरूको एकीकरण गरी नयाँ बनेपाको निर्माण गरेका थिए । त्यसैले ती बस्तीका देवीदेवताहरूलाई यो गुंलाधलंको समापनमा सम्मिलित गराउन यसरी विविध बाजासहित बनेपावरिपरि घुमेर पूजा गरिएको हो भनी बूढापाकाहरू भन्दछन् । यसरी घुमेर बाजा बजाई पूजा गर्ने कार्यलाई 'नपि वनेगु' भन्दछन् । 'नपि' गएर आएपछि धलं बाजा बनेपाको ढोकाबाहिर लान हुँदैन । सधैँभैँ बाहिर निस्किई बनेपाका आठैवटा गणेशमन्दिरका पोखरीहरूमा पुगी मुख धोएर मात्र बाजाहरू धलंछेमा भित्र्याइने गरिन्छ ।

त्यसपछि टोलका सबै मानिसहरू औँसीदेखि सुरु हुने यज्ञको तयारीका लागि तत्पर रहन्छन् । व्रत बस्नेहरू घरघरमा महिनाभर व्रत बसेको प्रसाद आफ्ना नातेदारहरूलाई दिन ग्वयेका (पाँच रङ्गको धागो बेरेर बनाइएको पवित्र धागो) र पासुका बनाउन लागिरहन्छन् । उता चाभारीका मानिसहरू सो यज्ञका लागि दुई ठूला चैत्यहरू (स्वयम्भू र नमोबुद्ध) बनाउन लागिपर्दछन् । चार दिशामा ४ ध्यानी बुद्धहरू, जस्तै अमिताभ, अमोघसिद्धि, अक्षोभ्य र रत्नसम्भव बनाएर स्वयम्भू चैत्यमा टाँस्न लगाई बीचबीचमा माटोले नै बनाएका मामकी, लोचनी र आर्यताराहरू पनि टाँसिदिन्छन् । ध्यानी बुद्धमध्ये वैरोचनको प्रतिमा भने त्यहाँ टाँसिदैन । स्वयम्भू चैत्यमा जस्तै वैरोचन अदृश्य ढङ्गले बीचैमा छन् भनी मानिसहरूले जानिराखेका छन् ।

चतुर्दशी अर्थात् औँसीको अघिल्लो रातमा द्य:भारीहरू सबै मिलेर व्रत बस्ने ठूलो ठाउँको बीचमा काठका फल्याकहरू ठड्याएर बलियो चौकोस बनाई एक महिनाभरि व्रत बस्नेहरूले बनाएका स-साना चैत्यहरू त्यहाँ राख्तछन् । सँगै एक कुनामा गुंलाधलंका बाजाहरू पनि थन्क्याएर राख्तछन् । यसो गर्नुको मुख्य कारण भोलिपल्टदेखि सुरु हुने यज्ञमा ती देवीदेवताहरू र विविध बाजाहरूलाई भक्तजनहरूले परिक्रमा गरेर दर्शन गरून् भन्नु हो । यज्ञ सुरु हुने अघिल्लो मध्यरातमा चाभारीहरूले बनाएका ती दुई ठूला चैत्यहरू (नमोबुद्ध र स्वयम्भू) द्य:भारीहरू चोर्न जान्छन् । चोर्न आएको थाहा पाएमा



चाभारीहरूले उनीहरूलाई धपाएर पठाउँछन् । तर येनकेन ती चैत्यहरू उनीहरूले चोरेर लगि नै हाल्छन् र तिनीहरूलाई डकर्मीका नाइके (हाल आशाकाजी खिँ) द्वारा बनाइएका यज्ञकुण्डका दुई छेउमा राखी भक्तजनहरूलाई यज्ञको परिक्रमा गर्दा दर्शन गराउँछन् । दिउँसो व्रत बस्नेहरूले कोतपूजाका सामग्रीहरू ल्याउँछन् र पुरोहित वज्राचार्यहरूद्वारा यज्ञ सुरु गर्दछन् ।

यज्ञ दुई दिनसम्म हुन्छ । यज्ञको परिक्रमा गर्न बिहान र बेलुका आउने हिन्दू र बौद्ध भक्तजनहरूको घुइँचो लाग्दछ । बनेपासहर र अन्य ठाउँका दाफाभजनका मानिसहरू पनि भजन गर्न आउँछन् । महिनाभरि लगाएर बनाइएका स-साना चैत्यहरू थुप्रै हुँदा अर्को टोलका मानन्धरहरूलाई औँसीको बेलुकीपख धिमे बाजा बजाई भोलिपल्ट पारो (प्रतिपदा) का दिन चैत्य बोकी मद्दत गर्न आउन आह्वान गर्ने गर्दछन् । श्रद्धालु युवायुवतीहरू नुहाई त्यो दिन व्रत बसी चैत्यहरू बोकिदिएर गुहार गरिदिन्छन् ।

यज्ञको समाप्तिका दिन अथवा भाद्र शुक्ल प्रतिपदाको दिन धलं हुने टोलका मानिसहरूले स्वयम्भू चैत्य र नमोबुद्ध चैत्य राख्न दुईवटा साना खटहरू बनाइराखेका हुन्छन् । बिहान १० बजेसम्ममा व्रत बस्नेहरू कोतपूजा राखी आ-आफ्ना जोडीका साथ धलंछेमा आइपुग्दछन् । वज्राचार्यद्वारा विधिवत् धलं (बौद्धव्रत) सिध्याइसकेपछि सबैजना 'द्य: चुइके येंकेगु' (बौद्ध चैत्यहरू खोलामा बगाउन लाने) कार्यक्रममा व्यस्त हुन्छन् । चैत्यहरू डालाडालामा लोग्नेमानिसहरूले दुईतिर दुई डाला सिगामा (खर्पनजस्तै) को नोलले बोक्न सकिनेजति मात्रै राखिदिन्छन् । किनभने बोक्नेहरूले त्यो भारी झाँकी सुरु भएपछि बीच बाटोमा बिसाउन हुँदैन । व्रत बस्ने केटी र आइमाईहरूले पनि अलिअलि चैत्यहरू बाटामा राखी बोकिदिन्छन् । व्रत बस्ने केटी तथा आइमाईहरू विविध गहनाहरूले सुसज्जित भई सफा र राम्रा लुगाहरू लगाएर बौद्धझाँकीमा सम्मिलित हुन्छन् । विविध टोलका दाफाभजनहरू, बौद्धस्तोत्र पढ्ने मानिसहरू धूप बालेर लहरमा उभिई बसिराख्तछन् । स्वयम्भू चैत्य र नमोबुद्ध चैत्य भएका दुई साना खटहरू चार-चारजना केटाहरूले बोक्तछन् । खटका अगाडि ६ दिनसम्म नखाई व्रत बस्ने केटीहरू अग्रपङ्क्तिमा हुन्छन् । तिनीहरूका अगाडि-अगाडि रहेर व्रत बस्ने धलंछेका आइमाईहरूले बाटाभरि नै ससम्मान नयाँ कुचोले यात्रापथ बढारिदिन्छन् । त्यसका अगाडि चाभारी नाइके जोगीका रूपमा लामो बाँसको टुप्पामा नागछत्र टाँगी र एउटा पुलु पनि बोकी धोती मात्र लगाएर झाँकीमा सम्मिलित हुन्छन् । तिनीहरूका अगाडि नौबाजा बजाउनेहरू सबैभन्दा अग्रपङ्क्तिमा हुन्छन् । खटका पछाडि विविध व्रत बस्ने केटी, आइमाई, केटा र अन्य व्यक्तिहरूले चैत्य बोकिरहेका हुन्छन् । तिनीहरूभन्दा पछाडि दाफाभजनहरू र बौद्धपाठ गर्नेहरू लामो लहरमा हुन्छन् ।



**धलंको झाँकी**
**तस्विर : प्रकाश मानन्धर**

करिब १ बजेतिर व्रत बस्नेहरू, दाफा भजनका मानिसहरू, विविध बाजा लिइराख्नेहरू, वज्राचार्य, चैत्य बोक्नेहरू, अन्य टोलका भजन गर्नेहरू र विविध मानिसहरू सम्मिलित भएको झाँकी सुरु हुन्छ । सर्वप्रथम मानन्धरहरूको टोल हुँदै माथि दछुटोल र भोलाखाटोल भई तीनधारा पुगेर झाँकी वकुटोलतिर बढिरहेको हुन्छ । पोँगा, टीं, चटकी, धुलु र मुहालीहरू विविध बाजाका तालमा ताल मिलाएर बजाइएका हुन्छन् । देवस्थल हुने ठाउँहरूमा विविध बाजा छुट्टै किसिमले बजाई 'द्य: ल्हायेगु' अर्थात् उक्त ठाउँका देवीदेवताहरूलाई बाजाहरू पोँगा र पस्ताको विशेष ध्वनिले श्रद्धा र भक्ति देखाउँछन् । बाटाका छेउमा उभिइरहेका दर्शकहरूलाई द्य:भारीहरूले भगवान् बुद्धको जल छर्किई प्रसादका रूपमा फूल दिन्छन् । बनेपाबाहिर चारदोबाटोमा पुगिसकेपछि मानिसहरू सो झाँकीमा सम्मिलित हुँदा हजारौं मानिसको भीड बन्दछ । झाँकी द्य:चाखुसी (पुण्यमाताखोलाको एउटा तीर्थस्थल) तिर लागिरहन्छ । अन्त्यमा करिब ३ घन्टाको समयपछि झाँकी द्य:चाखुसीमा पुग्दछ । मानिसहरू (हिन्दू र बौद्ध) नुहाएर खोलामा लहरमा बसेर नै 'श्री प्रज्ञापारमिता, मामकी, लोचनी, पद्मकी, तारेमाँ, हे बुद्ध, हे धर्म, हे सङ्घ, हे त्रिरत्न !' भन्दै हात जोडेर बिन्ती गरी प्रार्थना गर्दछन् । त्यस बखत त्यहाँ



चाभारी नायो (जोगीको भेष गरी बाँस र नागछत्र बोकी आउने) हरूले खोलामा पुल (मानिसहरूले लास उठाउँदा प्रयोग गर्ने सुकुलजस्तो) बिछ्याई नागका रूपमा आफूले ल्याएका बाँस ठड्याइदिन्छन् । त्यस बेला स्वयम्भू चैत्य र नमोबुद्ध चैत्य खटबाट ल्याएर पुलमा राख्नेबित्तिकै डाला र बाटाहरूमा राखेर ल्याएका स-साना स्तूपहरू पनि त्यहाँ खन्याइन्छन् । अनि त्यहाँका सबै मानिसहरूले आफ्ना दुवै हातले पानी अर्पण गर्दा त्यहाँ एक किसिमको अद्भुत धर्ममेला देखापर्दछ । त्यसपछि ननुहाउने व्यक्तिहरू मुख धोएर घर फर्कन्छन् । धा:बाजाको तालमा धुलु र टीं विरहको ध्वनि बजाएर बाजावालहरू धलंछेमा फर्कन्छन् ।



**धलंको झाँकी**
**तस्विर : प्रकाश मानन्धर**

भोलिपल्ट बिहान व्रत बस्ने आइमाईहरूले आ-आफ्ना नातेदार र इष्टमित्रहरूका घरघरमा गई सबैलाई आफू एक महिनासम्म व्रत बसेको भगवान् बुद्धको प्रसाद दिन्छन् । जल, ग्वयेका, पासुका र फूल प्रसादका रूपमा टक्र्याउँछन् । ती व्यक्तिहरूले आफ्नो सम्बन्ध भएका आधारमा व्रत बस्नेहरूलाई लुगा अथवा केही रुपियाँ दिएर पठाउँछन् । दाफा भजनखलकका मानिसहरूले भने बिहानदेखि नै एउटा राँगो ढालिसकेका हुन्छन् । साँझपख

टोलका सबै मानिसहरू धलंको भोज खान्छन् । दाफा भजनगुरुहरूले क्रम मिलाई बसेर 'सिकाभ्वय्' खान्छन् ।

भोलिपल्ट अर्थात् भाद्र शुक्लपक्ष तृतीयाको दिनमा धलंमा सहयोग गर्ने, चन्दा दिने र 'धुलपा: फयेगु' गर्ने व्यक्तिहरूलाई निम्तो गरी भगवान्को प्रसाद दिएर ससम्मान भोज खुवाउँछन् । त्यसको भोलिपल्ट बाजागाजासाथ टोलका सबै मानिसहरू आफ्ना गुरु वज्राचार्यलाई उपहार (चामल, पिठो आदि खाद्यान्न) लिई धिमेबाजासहित उनको घरैमा पुऱ्याउन जान्छन् । त्यसको भोलिपल्ट साँझतिर किसिलिमा साधना गरी ल्याएका नाट्येश्वरलाई कलाली पूजा राखी एउटा कुखुरा बलि दिई पूजा गरेर सो नाट्येश्वरका रूपमा साधना गरेर लगाएको किसिलि फिर्ता लगी त्यहीँ राखिदिन्छन् । दाफा भजनखलहरू बाँसुरी बाजा बजाई घर फर्केर साधारण किसिमले भोज खाई धलं समाप्त गर्दछन् ।

गुंलामा काठमाडौँ, भक्तपुर र ठिमीमा पनि माटाका स-साना चैत्यहरू बनाई बौद्धव्रत बस्ने गर्दछन् । काठमाडौँमा चैत्य बनाउने गुठी नै छन्, तर त्यहाँ व्रत बसेका हुँदैनन् । भक्तपुर र ठिमीमा केवल बुधबारका दिनमा मात्र व्रत बस्तछन् । अरू दिनहरूमा चैत्य त बनाउँछन्, तर व्रत बसेका हुँदैनन् । बनेपामा एक महिनासम्म बेलुका एकछाक मात्र खाई व्रत बस्छन् ।

बनेपालीहरूको विधि ठूलो छ । गुंलाधलंको समापनको कार्यक्रममा सम्बन्धित मानिसहरू मात्र नभई अन्य जात र धर्मका मानिसहरू पनि सम्मिलित हुन्छन् । यहाँको गुंला बौद्धव्रत उच्च छ । यहाँको जस्तो रथजात्रा अन्य ठाउँमा हुँदैन । समापनको झाँकीमा जोगी बनेर नागछत्र बोकी जाने र ५ दिनसम्म केही नखाई विशेष व्रत बस्नेहरू पनि बनेपामा मात्र छन् । हुन त बनेपामा जस्तै अन्य ठाउँमा पनि उहिले त्यही विधि हुनुपर्दछ र समयको अन्तरालमा मानिसहरूले सजिलो तरिका अपनाएका होलान् । यो वर्ष (वि० सं० २०६३ साल) बनेपाको कोभा:टोलमा गुंलाधलं बन्यो । बनेपामा यो काम अब मुस्किलले मात्र बन्नेछ, किनभने यो धलंको मुख्य आधार नै नौबाजा हो । अबका मानिसहरू नौबाजा बजाउन सिक्नेतिर लागेनन् । अहिलेका बूढापाकाहरू भएसम्म मात्र यो धलं सम्भव छ, त्यो पनि मुस्किलले ।

●



# परिशिष्ट

## ने० सं० ८३७ या ताडपत्र

**मूल पाठ** :

१. ॐ अद्य वाराह कल्पे वैवसुत मनतरे करिजुगे भरदखण्डे जम्वुदिपे हेमण्डपाडे नेपारदेश पशुपति शिव सनिधाने वासुकी क्षेत्रे वामत्याया पूर्व्वकुरे कवशिष्ठायां पश्चिमकुरे श्री २ चन्देश्वरी निधान्य श्री वनिकापुरि स्थाने आर्य्यावर्त देशे एहेव पुनेभौमौ ॥ ॐ अद्य फाल्गुण मासे कृष्णपक्ष सप्तम्यायातिथौ अनुराढ नक्षत्रे हरवन जोगे वृहस्पतिवासरे कुम्भ राशिगते सवितरि विच्छ राशिगते चन्द्रमशि असमत मान्धर लत्नसिं

२. लक्षराम नेम्ह फुकीज साहुतिन शिवपुरि विष्णुपुरि परलोक कामनाथेन झुकचा बुं रो ३ बाकोननि छे चूता वहे वन्देव स्वत जको गुरा धर्म्म गुथि संपदतं ध्व बुंया बरसान दवथे चेतभाद गुथिस जाके पुं १५ नयता जाके पूं ५ पंजादान विय धातपतिं पंचामृत जुछि १ दंम १ देखना छेसं चोङ देवसके जाके आउ १ संन मता विषयाता ध्वते हाङान पर सेखन विख्या भोजन याय गुथिभादत्वं कझित लत्न सिं लक्षराम पुन चेतभाद गुथिस ध्याका सकरें

३. संसर्गत ध्वतेस्यन पारनपार निस्तपेमार मानिस्तरं रोपारिपि संकारे पञ्चमाहापातक राक जुरो चोस्यतको हानसा उत्तर राक जुरो स्वदतं परदतं भ्वा भाझोरन्ति वसुन्धरा स्वस्ति वर्ष सहश्रानि विष्ठायां जायते किमि पुनभाखा बुं पेड जाके आड ८ वाकि जाके आदु ५ रिपेक दव निपिङा मुङावतय ङादास गुंरा धर्म्म दाने ॥ लिखित दैवज्ञ शिवहरि सम्वत् ८३७ फाल्गुण वध्दि ७ शुभ ॥

## ने० सं० ८३७ को ताडपत्रको भावानुवाद
### (गुंलाधलंलाई जग्गा दत्त राखिएको)

ॐ अद्य वाराहकल्प, वैवश्वत मन्वन्तर, कलियुगे, भरतखण्ड, जम्बुद्वीप, हिमालको फेदमा नेपाल देश अवस्थित छ। पशुपति शिवको सन्निधान, वासुकी क्षेत्र, वागमतीको पूर्व, कोसीको पश्चिमतिर रहेको श्री २ चण्डेश्वरी विराजमान रहेको श्री वनिकापुरीस्थान आर्यावर्त देश नामक पुण्यभूमि छ। आज फाल्गुन कृष्ण सप्तमी, अनुराधा नक्षत्र, हर्षण योग, बृहस्पतिबार, कुम्भराशि प्र विच्छराशि चन्द्रमासीका दिन मानन्धर लत्नसिं र लक्षराम दुईजना दाजुभाइको सल्लाहले शिवपुरी, विष्णुपुरी परलोकको कामना गरी भुकचा बुं नाउँको खेत रोपनी ३ र बाकोननी (चोक) स्थित ३ तले घरसहित गुंलाधर्म गुठीलाई दत्त राखिदियौं। यो जग्गाको बाली (आयस्ता) ले चैत्य गुठीलाई क्षीर पकाउन १५ पाथी चामल, ५ पाथी चामल पञ्जादान दिने। वर्षैपिच्छे पञ्चामृत पूजा जुछि १, १ दाम दक्षिणासहित पूजा गर्ने। घरमा रहेका देवतालाई चामल २ माना बत्ती बाल्ने। यति काम गरेर बाँकी भएको आयस्ताले भोज खाने। यस गुठीका गुठीयारहरूमा कजि लत्नसिं लक्षरामलाई थप गुठीयार बनाइयो। सबैले यी गुठीलाई अटुट रूपले चलाउनु। अटुट रूपले चलाइएन र गुठी लोप गर्न खोजे पञ्चमहापातक लाग्छ। लेखेअनुसार गुठी अटुट रूपले चलाएमा उत्तरोत्तर उन्नति हुन्छ। यो दत्त नासे-मासेमा हजार वर्षसम्म नरकमा कीरा भएर भोग गर्नुपर्नेछ। अर्को कुरा, धान रोप्न ८ पाथी चामल छुट्याई बाँकी ५ पाथी चामल जगेडा राख्ने। ५ वर्षमा गुंलाधर्म चलाउने। लेखक दैवज्ञ शिवहरि। मिति नेपाल संवत् ८३७ फाल्गुन वदि ७ शुभम्।

**लिपि उतार तथा अनुवाद : छत्रबहादुर कायस्थ**

●



# बनेपाकी चण्डेश्वरी र पशुपतिनाथ

नेपालीहरूका आराध्य देव श्री पशुपतिनाथसँग बनेपालीहरूको ऐतिहासिक सम्बन्ध रहेको पाइन्छ। देशका अन्य भाग अथवा गाउँ-सहरका मानिसहरूको पनि पशुपतिनाथसँग सम्बन्ध हुनाले हिन्दू होउन् चाहे बौद्ध, सबै नेपालीहरूले पशुपतिनाथलाई श्रद्धा र भक्तिका साथ मान्दै आएका छन्। तापनि बनेपालीहरूको भने यी देवतासँग छुट्टै किसिमको सम्बन्ध रहेको पाइन्छ।

ने० सं० ४७० (वि० सं० १४०६) मा बङ्गालका सुल्तान समसुद्दीन नेपालमा आएपछि स्वयम्भू चैत्यलाई ध्वस्त पारी पशुपतिनाथको मूर्तिलाई पनि तीन टुक्रा पारिदिए।[१] त्यस बखत तिनीहरूले ७ दिनसम्म यहाँ रही यहाँका अत्यन्तै महत्त्वपूर्ण हिन्दू र बौद्धमन्दिरहरू ध्वस्त पार्ने काम गरे।

त्यसको ठीक दस वर्षपछि अर्थात् ने० सं० ४८० (वि० सं० १४१६) मा राजा जयार्जुनदेवका महामन्त्री जयसिंहराम वर्द्धनले चारै वेदका आधारमा अर्थपूर्ण र उच्चतम कलायुक्त पशुपतिनाथको प्रतिमा बनाउन लगाई द्विज श्रीराज श्रमण (पुरोहित श्रीरांज शर्मा) द्वारा यज्ञ गराएर सो प्रतिमाको प्रतिस्थापन गराएका थिए।[२] त्यस बखत जयार्जुनदेवको पनि उपस्थिति थियो। जयार्जुनदेव बनेपाका पनि राजा थिए। जयसिंहराम बनेपाली थिए। राजा र महामन्त्रीका पुरोहित यिनै श्रीराज शर्मा थिए।

बनेपाका रण मल्लको शासनकालमा ने० सं० ६२२ (वि० सं० १५५८) मा बनेपाका मोहनसिं मानन्धरलाई कुमारीकुण्ड (चण्डेश्वरी) ले राँगाको सुनको टाउको र त्यसको केही समयपछि एक संन्यासीले एकमुखे रुद्राक्ष दिएको कुरा

---

१ गोपाल राजवंशावली, सम्पादक : धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल, प्रकाशक : नेपाल रिसर्च सेन्टर पब्लिकेसन, सन् १९८५

२ बनेपा, हरिराम जोशी, 'वनेपा सात गाउँ' स्मारिका, प्रकाशक : वनेपा नगरपालिका

'देवमाला वंशावली' र डानियल राइटको 'हिस्ट्री अफ द कन्ट्री एन्ड द पिपल' मा उल्लेख गरिएको छ ।[३]

'रुद्र' को अर्थ 'महादेव' हो भने 'अक्ष' को अर्थ 'आँखा' हो । त्यसैले 'रुद्राक्ष' को अर्थ 'महादेवको आँखा' हो । भनिन्छ यसको मुख अर्थात् अघिल्लो भाग ब्रह्मा हुन् भने यसको माथिल्लो खुला भाग शिव र तलको खुला भाग विष्णु हुन् । तसर्थ रुद्राक्षमा ब्रह्मा, विष्णु र महेश्वर हुन्छन् ।

एकताका दानवराज त्रिपुरले स्वर्गका देवताहरूलाई साह्रै दुःख दिएको देख्ता शिवका तीनै आँखाबाट आँसु बगेर धरातलमा पर्नेबित्तिकै रुद्राक्षका रूखहरूको उत्पत्ति भयो । तिनै रूखहरूबाट ३८ किसिमका रुद्राक्षहरू उत्पन्न भए । दायाँ आँखा (सूर्य) बाट झरेको आँसु परेको ठाउँमा उम्रिएको रूखबाट १२ किसिमका राता र पहेंला, बायाँ आँखा (चन्द्र) बाट झरेको आँसु परेको ठाउँमा उम्रिएको रूखबाट १६ किसिमका सेता र तेस्रो आँखा (अग्नि) बाट निस्केको आँसु परेको ठाउँमा उम्रिएको रूखबाट १० किसिमका काला रुद्राक्षहरू उत्पन्न भए । यी रुद्राक्षहरू एकदेखि चौधमुखेसम्मका हुन्छन् ।[४]

रुद्राक्षको माला बनाएर लगाउनु भगवान् शिवको ज्ञान पाउनका लागि मात्र नभई दुःख र पीडाबाट मुक्ति पाउनका लागि पनि हो । मानिसहरू थरीथरीका रुद्राक्षका माला लगाउने गर्दछन् । ब्राह्मणहरूले सेतो, क्षत्रियहरूले रातो, वैश्यहरूले पहेंलो र शूद्रहरूले कालो रङ्गको रुद्राक्षको माला लगाउने चलन थियो । एकमुखे रुद्राक्ष अति दुर्लभ छ । यसलाई शिवको साँच्चिकै आँखा मानिएको छ ।

एकमुखे रुद्राक्ष साह्रै पवित्र मानिन्छ । भनिन्छ – एक युगमा केवल तीनवटा मात्र रुद्राक्ष फल्दछन् । तिनमा एउटा स्वर्गतर्फ अकासिँदै उडेर जान्छ भने अर्को पातालतिर लाग्छ र तेस्रोचाहिँ धरातलमा बाँकी रहन्छ भन्ने विश्वास गरिन्छ । एकमुखे रुद्राक्षलाई भुइँमा राखेर माथिबाट पानी खन्याउँदा पानीको धारासँगै माथि उठेर आउँछ र बगिरहेको नदीमा राखिदियो भने पनि तलतिर नबगी माथितिर बगेर गई उत्तरवाही हुँदै शिवको वासस्थान हिमालयमा पुग्दछ ।

---

[३] (क) देवमाला वंशावली, प्रकाशक : श्री पीरमहन्त क्षिप्रानाथ योगिराज, गोरक्षराष्ट्र नेपाल, सिद्धाचल, मृगस्थली, २०१३
(ख) History of the Country and the People, Daniel Wright, Cosmo Publication, New Delhi, 1989 A. D.

[४] देवीभागवत (द्वितीय संस्करण), नीलहरि र एकदेव उपाध्याय, प्रकाशक : सुरेश पुरी, श्री हितैषी कम्पनी, कर्णघण्टा, वाराणसी, २०३६



मोहनसिं मानन्धर एक भाग्यमानी मानिस थिए । त्यसैले उनको हातमा एकमुखे रुद्राक्ष पर्न सक्यो । मोहनसिंले एकमुखे रुद्राक्ष कसरी पाए भन्नेबारेमा एउटा कथा छ ।

भोर भयो होला भनेर मोहनसिं मानन्धर सधैँझैँ चण्डेश्वरीको दर्शन गर्न मन्दिरतिर लागेका थिए, तर समय मध्यरात नै थियो । चण्डेश्वरीमन्दिरमा पुग्दा उनले देवालयभित्र भैरव, काली, ब्रह्मायणी, गणेश, कुमार, वाराही, चण्डेश्वरी, गन्धर्व, किन्नर आदि विविध देवीदेवताहरू विभिन्न कार्यक्रमका साथ ठूलो भोजको पनि प्रबन्ध गरी तयार भइरहेका देखे । त्यहाँ शिर काटिएको एउटा राँगो पनि पल्टाइराखिएको थियो । कार्यक्रमको सुरुमा गन्धर्वहरूले गीत गाउनेबित्तिकै किन्नरहरूले विविध बाजाहरू बजाए । बाजाको 'घिन तानानाना' को तालमा गणेशले फनफनी घुमी आफ्नो नृत्य सुरु गर्नेबित्तिकै अन्य देवीदेवताहरू पनि आ-आफ्ना हतियार समाई नाचे ।

यस्तो अद्भुत दृश्य देखेर मोहनसिं भय र त्रासले टोलाइरहे । उनलाई त्यो सपना हो या साँच्चै नै घटेको घटना हो, थाहै भएन । त्यो दृश्य हेरिरहने हो अथवा घर फर्कने हो भनी उनी दोधारमा परे । त्यसै बखत भैरवले पछाडि फर्केर हेर्दा एकजना मानिसले ढोकाको प्वालबाट भित्र चियाइरहेको देखे । । भैरवले तुरुन्तै ढोका खोले र मोहनसिंलाई तानेर देवीदेवताका बीचमा राखे । नृत्य रोकियो । सबै देवीदेवताहरू किंकर्तव्यविमूढ भए । मोहनसिं भय र त्रासले काँप्दै थिए । त्यहाँ भएका सबै देवीदवताको धारणा त्यो समय मनुष्यको होइन, देवीदेवताको हो भन्ने थियो ।



**मोहनसिं देवीदेवताको कार्यक्रममा / चित्र : नेपालसुधार भैल**

शान्त वातावरणमा चलिरहेको कार्यक्रम भङ्ग गर्न आउने मोहनसिंसँग काली क्रूर भई आफ्नो खड्गले प्रहार गर्न लाग्दा देवी चण्डेश्वरीले उनको हात च्याप्प समाएर भनिन् – "हे काली ! हे सकल देवीदेवताहरू हो ! यो मानिसको केही भूल छैन । भोर भयो भनेर यो त सधैँझैं यहाँ मेरो दर्शन गर्न आएको हो । यसलाई यस्तो व्यवहार नगरौं ।"

चण्डेश्वरीको त्यस्तो कुरो सुनेर सबैले 'अब के गर्ने ?' भन्ने प्रश्न गर्न लागे । त्यसै बखत चण्डेश्वरीले भनिन् – "हेर्नुहोस्, यो मानिस भाग्यले गर्दा यहाँ आइपुगेको हुनुपर्दछ । त्यसैले हामी यसलाई यो राँगाको टाउको दिएर घर फर्काऔं ।"

सबैले मन्जुर गरे । अनि देवी चण्डेश्वरीले त्यो टाउको मोहनसिंलाई दिँदै भनिन् – "हे मनुज ! तिमी नडराऊ । यो लेऊ । तिमी भाग्यमानी रहेछौ । अब घर जाऊ ।"

मोहनसिं सबै देवीदेवताहरूलाई दण्डवत गरी चण्डेश्वरीको वरप्रसाद लिएर घर फर्के ।

यसरी देवी चण्डेश्वरीबाट राँगाको सुनको टाउको वरप्रसाद पाएपछि मोहनसिं साह्रै धनी भए भनी 'देवमाला वंशावली' मा उल्लेख गरिएको छ । त्यही सुनबाट मोहनसिंले काठमाडौं असनका एक शाक्यलाई चण्डेश्वरीदेवीका लागि एउटा मुकुट र पशुपतिनाथलाई एउटा कवच भनिने गहना बनाउन लगाए ।

गहना बनाइसकेपछि काठमाडौंको त्यस बखतको केन्द्रीय स्थल असनको शाक्यको एउटा पसलमा गहनाको प्रदर्शन भयो । त्यस बखतमा गहना हेर्न आउने मानिसहरूको भीडमा सहिना दिनअघि मोहनसिं चण्डेश्वरीको दर्शन गर्न जाँदा भएको घटनाका विषयमा गाइँगुइँ चलिरहेको थियो ।

त्यसै बखत एकजना योगी त्यहाँ आई ती गहनाहरूका विषयमा जानकारी लिए । मोहनसिंले देवीदेवताहरूप्रति श्रद्धा र भक्ति देखाएकोमा उनी खुसी भए । अनि आफूसँग भएको एकमुखे रुद्राक्ष आफ्नो खल्तीबाट झिकेर मोहनसिंलाई दिँदै उनले भने – "यो एकमुखे रुद्राक्ष ॐ श्री पशुपतिनाथलाई चढाऊ ।" त्यसपछि उनी त्यहाँबाट हिँडे ।

मोहनसिंले चढाएको उक्त एकमुखे रुद्राक्ष पशुपतिनाथको मन्दिरमा अद्यापि छँदैछ । बनेपालीहरू मोहनसिंलाई धलंछेखलकका मानन्धर भन्ने गर्दछन् भने काठमाडौंका मान्छेहरू उनलाई सिँचाखलकका मानन्धर भन्दछन् ।



काठमाडौंको सिँचाखलकका ११ परिवार मानन्धरहरूले प्रतिवर्ष ज्येष्ठ मास शुक्लपक्ष सप्तमीका दिन मल्लकालमा प्रयोग गरिने पुरानो कुरुवाले अखण्ड बत्ती बाल्न पशुपतिनाथको मन्दिरको दक्षिणपट्टिको ढोकाबाट ३६ कुरुवा खानेतेल चढाई त्यसको रसिद पशुपतिभण्डारबाट लिने गरेका छन् । यो चलन अद्यापि चल्दै आएको कुरा सिँचाखलकका नाइके श्री सानुनाति (गणेशभक्त मानन्धर) भन्नुहुन्छ । त्यसपछि ती मानन्धरहरूलाई पशुपतिनाथको दर्शन गराइन्छ र त्यहाँको मण्डपमा रहेको छ पैसा सिँचाखलकका नाइकेलाई दिने गरिन्छ । अनि बालाचतुर्दशीको भोलिपल्ट अर्थात् औंसीका दिन ती मानन्धरहरूलाई उक्त एकमुखे रुद्राक्ष दर्शन गराइन्छ । त्यसपछि गुह्येश्वरीमन्दिरमा गई देवीको पूजा गरिसकेपछि त्यहीँ बसेर भोज खाने चलन अद्यापि चल्दै आएको छ ।

काठमाडौंमा मोहनसिंको खलकका मानन्धरहरूलाई 'सिंचाखल' भनिन्छ । मोहनसिंको पछिल्लो अक्षर 'सिं' जोडेर 'सिंचाखल' भनिएको हुनुपर्छ । 'काठमाडौंका सिंचाखलकका मानन्धरहरू बनेपाबाट बसाइँ सरी आएका हुन्' भनी मलाई रामप्रसाद मानन्धरले बारम्बार भन्ने गर्नुभएको थियो । त्यस्तै ठाकुरलाल मानन्धरले पनि 'हामी बनेपाबाट आएका हौं, हामी भोमि (बनेपाली) हौं' भनेर मलाई भन्नुभएको थियो । तर ठाकुरलाल मानन्धरका ज्येष्ठ पुत्र गिरिधरलाल मानन्धरले चाहिँ 'हामी बनेपाबाट आएका होइनौं, बरू हाम्रो खलक प्रशासनिक प्रमुख भएर बनेपामा गएका थिए' भन्नुभएको थियो । यस सन्दर्भमा जीतबहादुर मानन्धरले यसरी लेख्नुभएको छ – "मेरो आफ्नै विचारमा भन्ने हो भने 'सिंचाखल' पुरुषहरू भ्वँत (बनेपा) बाट सक्व (साँखु) र साँखुबाट काठमाडौं आएका हुनुपर्दछ ।"[५]

११ परिवारका यी सिंचाखलकका मानन्धरहरूको सीगुठी (मुर्दा उठाउने गुठी) छ, तर सनागुठी भने छैन । काठमाडौंका सिंचाखलकका मानन्धरहरूमा ठाकुरलाल मानन्धर र रामप्रसाद मानन्धर अत्यन्त ख्यातिप्राप्त व्यक्तित्व हुनुहुन्थ्यो ।

ठाकुरलाल मानन्धर (सन् १९१२ – १९९१) अध्यात्म विषयमा विशेष रुचि भएका व्यक्ति हुनुहुन्थ्यो । उहाँ नेपालभाषाका शब्दशब्दमा गहिरो विचार गरिरहने, त्यसको अर्थ र प्रयोगमा ध्यान दिने गर्नुहुन्थ्यो । उहाँले 'नेपालभाषा शब्दकोश' नै लेख्नुभयो । साहित्यक्षेत्रमा पनि उहाँको हात उत्तिकै चल्दथ्यो । नेपालभाषामा लिखित 'भाजु निबन्ध' पुस्तक यसको उदाहरण हो । प्राचीन

---

[५] सिंचा खलया मानन्धर, जीतबहादुर मानन्धर, सन्ध्या टाइम्स, ने० सं० ११२७ दिल्लथ्व ५



इतिहास, संस्कृति र वंशावलीको विश्लेषण गर्ने उहाँको तरिका धेरै आकर्षक र अर्थपूर्ण थियो । उहाँलाई सिल्भान लेभीका शिष्य प्रा० फिलियोजाले फ्रान्सको 'पेरिस विश्वविद्यालय' मा शब्दकोशका सम्बन्धमा प्रवचन दिन आमन्त्रण गरेका थिए र 'नेवारी-अङ्ग्रेजी शब्दकोश' तयार पार्न पनि अनुरोध गरेका थिए । प्रा० फिलियोजालाई उहाँले पनि नेपालसम्बन्धी अध्ययन र अनुसन्धानमा राम्रो सहयोग दिनुभएको थियो । 'लन्डन विश्वविद्यालय' का प्रा० डा० बाके नेपालमा आउँदा नेपालसम्बन्धी उनको खोजमूलक काममा उहाँले २-३ वर्षसम्म सहयोग गरिदिनुभएको थियो । त्यसै बेला उहाँले नेपालको प्राचीन शास्त्रीय सङ्गीतको अनुसन्धान पनि गर्नुभएको थियो । त्यस्तै प्रा० पेटेकलाई 'मेडिभल हिस्ट्री अफ नेपाल' लेखाउन उहाँले गर्नुभएको योगदान अत्यन्त प्रशंसनीय थियो । 'लन्डन स्कुल अफ एसियन-अफ्रिकन स्टडिज' मा २ वर्ष र जर्मनीको 'किल विश्वविद्यालय' मा उहाँले ३ वर्षसम्म काम गर्नुभएको थियो । 'जर्मन ओरिएन्टल सोसाइटी, बर्लिन' मा नेपालबाट लगिएका प्राचीन अभिलेखहरूको डकुमेन्टेसन (अभिलेखहरू र तिनको प्रस्तुतीकरण) र तिनको सूचीपत्र (Catalogue) बनाइदिनु उहाँको सबैभन्दा महत्त्वपूर्ण काम थियो । किनभने नेपालको संस्कृति र इतिहास आदिका सम्बन्धमा पीएच० डी० गर्नेहरूका लागि यो एउटा राम्रो बाटो बन्यो । तर उहाँले अरू क्षेत्रमा भन्दा आध्यात्मिक चिन्तनमा बढी समय बिताउनुभयो । शिवपुरीबाबाका अनुयायी भएर उहाँ पशुपतिपरिसरको ध्रुवस्थली आश्रममा बरोबर गइरहनुहुन्थ्यो ।



रामप्रसाद मानन्धर (सन् १९१४ – १९८८) सानै उमेरदेखि असाधारण मस्तिष्कको प्रस्फुटन देखिएको विलक्षण प्रतिभाका व्यक्ति हुनुहुन्थ्यो । तीक्ष्ण बुद्धिको प्रभावले गर्दा कक्षा १ देखि एम० ए० (अङ्ग्रेजी साहित्य, भारतको पटना विश्वविद्यालय) सम्म सधैँ पहिलो हुने नेपालको असाधारण व्यक्ति उहाँ नै हुनुहुन्थ्यो । मानन्धरहरूमा सबैभन्दा पहिलोपटक उहाँ नै परराष्ट्र मन्त्रालयका



सचिव, पहिलोपटक बेलायत, सोभियत सङ्घ, फ्रान्स, पश्चिम जर्मनी आदि राष्ट्रहरूका राजदूत हुनुभएको थियो । उहाँ पहिलो राजसभा स्थायी समितिका सदस्य पनि हुनुभएको थियो । संसारका विभिन्न मुलुकहरूमा भएका अन्तर्राष्ट्रिय सम्मेलनहरूमा भाग लिएर उहाँले नेपालको इज्जत बढाउनुभएको थियो । उहाँले स्वदेशी तथा विदेशी सरकारहरूबाट मानपदवी र तक्माहरू पाउनुभएको थियो ।

रामप्रसाद मानन्धरको विषयलाई लिएर धूस्वाँ सायमिले मलाई एकचोटि सोध्नुभयो – "ज्ञानकाजी ! रामप्रसाद मानन्धरसँग तिम्रो राम्रै खालको सम्बन्ध भएको रहेछ । तर उहाँ कस्ता व्यक्ति हुनुहुन्छ, थाहा छ ?"

मैले भनेँ – "गोविन्ददाइ, मलाई त्यो त थाहा छैन ।"

अनि उहाँले भन्नुभयो – "उहाँ बेलायतमा राजदूत हुँदाको कुरा म भनिदिन्छु । महारानी एलिजावेथलाई दिक्क लागेमा उनी सबै राजदूतहरूलाई पार्टीमा बोलाएर रामप्रसाद मानन्धरलाई भाषण गर्न लगाउँथिन् र उहाँको भाषण सुनेर आनन्द लिने गर्थिन् ।"

सिंचाखलकका ठाकुरलाल मानन्धर र रामप्रसाद मानन्धरहरूका पूर्वजहरू काठमाडौँको वटु भन्ने ठाउँमा बस्तथे । तर पछि ठाकुरलाल मानन्धर धरहरातिर बस्नुहुन्थ्यो भने रामप्रसाद मानन्धर प्याफलमा । सिंचाखलकका यी मानन्धरहरूका विषयमा वरिष्ठ इतिहासकार तथा संस्कृतिविद् भुवनलाल प्रधानले लेख्नुभएको छ – "वटुका मानन्धरहरूको सम्बन्ध भद्रकाली देउतासित भइआएको छ । किंवदन्तीअनुसार बालिकाका रूपमा लिएकी ती देवीलाई तुपा: (सिंहदरबारको उत्तरस्थित कालिकास्थान रहेको थुम्को) सम्म बोकेर लाने र पछि देवीको दर्शन पाएका कृषकचाहिँ वटुकै एकजना मानन्धर थिए । यही वटुकुलको मानन्धरपरिवारमा रामप्रसाद मानन्धरको जन्म इ० १९१४ जनवरी १५ तारिखमा भएको थियो ।"[६]

तर बनेपाको धलंछेखलकका मानन्धरमा बौद्धिक प्रतिभा हुने व्यक्तिहरू त्यति देखापरेका छैनन् । उनीहरूले धर्ममा आस्था राखेका र धर्मका कामहरू गरेका अभिलेखहरू भने प्रशस्त पाइएको छ । चण्डेश्वरीमन्दिरअगाडि दुई लामो शिलास्तम्भ उठाई एउटा ने० सं० ९६१ सालमा मानन्धर सत्यसिं, जसराम, भाजुवीर, धिजनारां, धर्म्मलक्ष्मी, कर्म्मल आदि नाम भएको सुवर्णनिर्मित सिंह

[६] स्व० प्रो० रामप्रसाद मानन्धर, भुवनलाल प्रधान, केन्द्रीय मानन्धर सङ्घ स्मारिका, पौष २०५०

स्थापना गरेको अभिलेखले देखाउँछ भने ने० सं० ९७२ साल फाल्गुनमा दिवङ्गत सत्यसिं नै नाउँ भएका धिर्जनारां, धर्म्मलक्ष्मी आदि नामहरू समावेश गरी शिलास्तम्भ उठाएर मयुरको स्थापना गरेको कुरा अभिलेखले देखाउँछ।[७] तर ने० सं० ९३६ को बनेपा चण्डेश्वरीस्थानको एउटा शिलालेखमा बनेपाका धलंछेका सत्यसिं, भाइ जसराम, पुत्र भाजुवीर, स्त्री कर्म्मलक्ष्मी, धर्म्मलक्ष्मी आदि नामहरू कुँदिएका छन्, जसमा बनेपा वकुटोलदेखि चण्डेश्वरी र तल घाटसम्म ढुङ्गा बिछ्याई बाटो बनाएको, देवालयको वरिपरि पर्खाल बनाइएको, घाँस उखेल्ने काम उल्लेख भएको र देवीप्रति विधिपूर्ण पूजाहरू गर्ने कुराहरू उल्लेख गरिएको छ।[८]

बनेपाको पूर्वी द्वार वकुटोलदेखि चण्डेश्वरीसम्म चण्डिपूर्णिमाको ४ दिनअगाडि बाटोमा भएका घाँस उखेली सफा गर्ने र यताउता परेका ढुङ्गाहरू बाटोमा मिलाउने काम धलंछेखलकका गुठीयारहरूले उहिल्यैदेखि गर्दै आएको कुरा बनेपालीहरू सबैलाई थाहा छ। यहाँको जनश्रुतिअनुसार मोहनसिंलाई एकचोटि एकजना फकिरले ३ वटा हीरा दिएका थिए। ती ३ हीरामध्ये उनले एउटा हीरा बिक्री गरेर सडक बनाएका थिए, बाँकी रकम गुठीमा राखेका थिए। अर्को हीरा बिक्री गरेर धनसम्पत्ति जम्मा गरेका थिए। तेस्रो अमूल्य हीराचाहिँ देवी चण्डेश्वरीको मुकुट बनाएर त्यसमा जडान गरिदिएका थिए। यो कुरा ६० वर्षपहिले कन्हैयालाल श्रेष्ठले एउटा जमघटमा आफूले बूढापाकाहरूबाट सुनेको कुरा भनेर सुनाउनुभएको थियो। त्यो भनाइ मेरो स्मरणमा अहिलेसम्म पनि ताजै छ।

चण्डिपूर्णिमाको दुई दिनअघि देवी चण्डेश्वरीलाई पूजा गरी घाँस उखेल्नेहरू सबैलाई भोज खुवाउँथे। चण्डेश्वरी र धलंछेखलकका मानन्धरहरूका बीच विशेष सम्बन्ध छ। चण्डिपूर्णिमाको साँझपख पोंख (खाली रथ) जात्रा गरेर चण्डेश्वरीमा पुऱ्याएपछि देवीलाई विविध बाजागाजासहित अनेकौं विधिले रथमा विराजमान गराइन्छ, त्यसपछि त्यहाँ देवीलाई पूजा गर्न व्रत बस्ने श्रद्धालु आइमाईहरूको भीड लाग्दछ। धलंछेको सर्वप्रथम पूजा नभएसम्म अरूहरूको पूजा नहुने चलन अद्यापि चल्दै आएको छ।

धलंछेखलकका मानन्धरहरू 'साहु' कहलिन्थे। २५ वर्षपहिले म धलंछेमा गएर करिब २७५ वर्षपहिले लेखिएको 'पञ्चरक्षा' भन्ने एउटा रङ्गीन बौद्ध

[७] वनेपा सात गाउँ, स्मारिका, सम्पादक : हरिराम जोशी, प्रकाशक : वनेपा नगरपालिका, जेठ २०५३

[८] ऐ० ऐ० नं० ७



ग्यासफू हेरेको थिएँ। पुस्तकको अन्त्यमा मिति र 'धलंछेका साहु .......... को मनमा धर्मचित्त उत्पन्न भएर यो पुस्तक लेखाएको' भनी नेपालभाषाको लिपिमा लेखिएको थियो। तर त्यो पुस्तक लेखेको मिति र लेखाउने व्यक्तिको नाम भने अहिले मलाई सम्झना भएन। जे होस्, उनीहरू धनी थिए। उनीहरूको घर पनि बलियो ढङ्गले बनाइएको थियो। वि० सं १९९० सालको महाभूकम्पमा पनि त्यो घरमा कुनै कतै क्षति भएको थिएन। त्यो घर अहिलेसम्म पनि यथास्थितिमा छ। घर ठूलो भएकोले त्यहाँ धलं (श्रावण मासभरि बस्ने बौद्धव्रत) हुन्थ्यो। सधैं सुविधाजनक भएको त्यो घरमा 'धलं' हुने हुनाले नै सम्भवतः त्यो घरको नाम नै धलंछे भएको थियो। ने० सं० ८३७ को एउटा ताडपत्रमा लत्नसिं र उनैका भाइ लक्षरामले गुंलाधलं गुठीका लागि ३ रोपनी जग्गा र एउटा ३ तले घर राखिदिएको कुरा अभिलेखले देखाउँछ।



**तस्विर : प्रकाश मानन्धर**

धलंछेखलकका मानिसहरूका विषयलाई लिएर बनेपामा ४-५ वटा किंवदन्तीहरू छन्। तर तीमध्ये चण्डेश्वरीबाट वरप्रसाद प्राप्त भएका मोहनसिंको किंवदन्ती धेरै नै प्रचलित छ। त्यही कारणले वंशावलीमा समेत उनको नाम उल्लेख भयो र उनी नामी पुरुष बने। धलंछेखलकका छुट्टिएर

गएका केही मानन्धरहरूबाहेक हाल पनि १० परिवारको एउटा गुठी छ । त्यो गुठी बनेपाको केन्द्रीय स्थल तीनधाराको माथिल्लो भागमा अवस्थित एउटा धेरै पुरानो चैत्यसँग सम्बद्ध छ । प्रत्येक वर्ष कतिं पुन्हि (आश्विन शुक्लपक्ष पूर्णिमा) का दिन चैत्यलाई सफा गरी चुन लगाउने, प्रत्येक परिवारबाट १-१ पूजासामग्री ल्याई वज्राचार्यबाट विधिवत् पूजा गराउने र चैत्यको चारैतर्फ १०८ दीप बालेर भोज खाने चलन अद्यापि चल्दै आएको छ । त्यही दिनमा पालो पर्ने कुनै एकजना व्यक्ति नमोबुद्धमा जानुपर्छ र उसले नमोबुद्धचैत्यको दायाँपट्टि आफ्ना पुर्खाले बनाएर राखेको चैत्यलाई पनि चुन लगाउने र पूजा गर्ने गर्नुपर्छ । कतिं पुन्हिका दिनमा ती गुठीयारहरूले पूजाको काम सिध्याएपछि भोज खाने गर्दछन् ।

उहिल्यैदेखि त्यहाँ एउटा ठूलो थाल थियो । अत्यन्त कलात्मक ढङ्गले बनाइएका बहुमूल्य धातुनिर्मित अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धि नामका चार बुद्धहरू राखी त्यही थालमा नै एक चैत्यको निर्माण गरिएको थियो । त्यसमा अन्य चैत्यहरूमा जस्तै बीचमा हुने वैरोचन अदृश्य नै थिए । भोज खाइसकेपछि उक्त चैत्य गुठीकै एकजनालाई हस्तान्तरण गरी अर्को वर्षका लागि गुठीको सबै भारको पालो दिने प्रथा चलाइएको थियो । ती बुद्धहरू अत्यन्त मूल्यवान् थिए । प्रत्येक बुद्धका प्रतिमामा बहुमूल्य जन्तरहरू लगाइएका थिए । त्यो दिन ती बुद्धहरूको पनि पूजा हुन्थ्यो । तर दुर्भाग्यवश झन्डै ४० वर्षअघि उक्त मूल्यवान् र ऐतिहासिक चैत्य गायब भइदिएकोले बनेपाको इतिहासलाई नै ठूलो धक्का पर्न गएको छ । हाल ती गुठीयारहरूले धातुनिर्मित त्यस्तै बुद्धहरू राखी बनाइएका प्रतिमाहरू हस्तान्तरण गरेर पालो फेर्ने काम गरिरहेका छन् ।



**थालमा बनाइएका नयाँ बुद्धमूर्तिहरू**
**तस्बिर : प्रकाश मानन्धर**



बनेपाको तीनधारामाथि रहेको त्यो चैत्यका विषयमा ने० सं० ५११ सालको धलंछेखलकको एउटा ताडपत्रमा बनेपाको महत्त्वपूर्ण इतिहासका कुराहरू फेला परेको छ । उक्त ताडपत्रमा त्यो लयन चेतभाद (चैत्यगुठी) का लागि मोहनसिं मानन्धरभन्दा १११ वर्षपहिलेका धलंछेखलकका निकेस मानन्धरले आषाढ कृष्णपक्ष औँसी, बुधबार सूर्यग्रहण महापर्वका दिनमा ख्वात बुं नाउँको ३ रोपनी जग्गा र कोलख्वात बुं नामको १ कर्ष (४ आना) जग्गा दत्त राखिदिएको कुरा उल्लेख छ । ताडपत्रको विवरण पढ्दा त्यो चैत्य कहिले बनाइएको थियो भन्ने कुरा थाहा पाउन सकिँदैन, खालि ने० सं० ५११ मा गुठीका लागि जग्गा दत्त राखिदिएको कुरा मात्र त्यसमा लेखिएको छ । त्यसैले उक्त चैत्य त्यसभन्दा धेरै पहिले नै बनाइएको स्पष्ट हुन्छ । त्यसका साथै त्यसमा सोधार यिति (तीनधारा, स्वधा:हिटी) उल्लेख भएबाट ती धाराहरू पनि पहिले नै बनाइएका थिए भन्ने बुझिन आउँछ । अझ बढी महत्त्वपूर्ण कुरा त के भने बनेपाकी देवी चण्डेश्वरीसम्बन्धी हालसम्म प्राप्त अभिलेखहरूध्ये सबैभन्दा पुरानो अभिलेखका रूपमा वि० सं० १६६४ को अभिलेख मात्र छ, तर यो धलंछेखलकको ताडपत्रमा 'चन्देश्वरयात नेन्हु' (चण्डेश्वरीजात्रामा दुई दिन) र 'एन्दयात न्हसन्हु' (इन्द्रजात्रामा सात दिन) सम्म दिनहुँ ५ बत्ती बाल्ने कुरा उल्लेख भएको छ । यसरी चण्डेश्वरीसम्बन्धी हालसम्म प्राप्त अभिलेखमा यो अभिलेख नै सबैभन्दा पुरानो देखिएको छ । यीबाहेक उक्त गुठीका गुठीयारहरू कनक, जयकित, जयसिंह, रूपकेराजा, जयरूपसिङ, जितासिङ, जिकेसिङ र लखमसिङ उल्लेख भएका छन् । ती व्यक्तिहरू मोहनसिंका पूर्वजहरू थिए ।

●

# परिशिष्ट

## ने० सं० ५११ या ताडपत्र



**(ने० सं० ५११ को ताडपत्र)**

१. शुभ ॥ ॐ अद्य वाराहकल्पे वैवस्वत मन्वन्तरे कलियुगे भर्तखण्डे जाम्वुदीपे हेमन्त पादे नैपाल देशे पशुपति संनिधाने वाशुकी क्षेत्रे वाग्मत्यां पूर्व्वक्षुले, कौशिक्यायां पश्चिम क्षुले, श्री विनयापूरी स्थाने आर्यावर्त्त देशे, एहेव पुन्यत्तमे ॥ ॐ अद्य जगातोविधार्ण्णाथदे, प्रथमाषाढमासे कृष्णपक्षे, अमावास्यांतिथौ, पुनर्वशु नक्षत्रे, हर्षण योगे, जथाकर्ण्ण मुहुर्त्ते बुधावासरे

२. जेठ संक्रान्ति माहापार्व्वस्य दिने, मानधर, निकेसकेस्य स्वकामनार्थेन, सोधार यिति थंवने बिज्या कशं श्रीश्रीश्रीलयनचेतभाद गुठिसं प्रदक्तं, रोव ३ नासिंख्वाट बुं, कर्ष छि १ कोल सेख्वात बुं, थ्वतेया वरसानन दवथ्वं, वर्षप्रति दितला गाक त्रयोदशी कोन्हु चेतभाडससके पुजा याय

३. जुछि १ सगोन, जुछि १ जुगंडि कोन्हु बिय, देवस्तं के डा कुड ५ वंदेजुटों बिय, के डा कुड ५ देखना ओहो कोत खुकोत ६ कति निपुनि पुनिशि कोन्हु, देव सनखोलन पाय, साखोल फंछि १ धरिपात फि ४ देव स्नान याय, पञ्चामृत जुछि १ मितं नियप्वाठ २० छोयके, चंदेश्वरयात नेन्हुं, एन्द यात न्हसन्हु न्हिन डाप्वाठ ५ धारे मितं छोयके, दिन बुदिडा

४. कपुधारे बियमाल, उयइता शेबं छि कोसिं ख्वाट बुं, थ्वते हाडन परशेष गुठिमाडस्यं भख्या भोजन याय, थम भोपाथ्यं जोगियातं छतु बियमाल, गुठिमाडसं, कनक, जयकित, जयसिङ, रूपकेराजा, थ्वतेस्यं वर्षप्रति, दिनप्रति, अछिद्र याङ निस्तरेमाल, मनिस्तरपं लोपा लिपि याडसंकाले पञ्चमहापातक लाक जुरों, अनेन .....

५. एनस्य स्वर्ग्ग संप्राप्तमस्तु ॥ सम्वत् ५११ प्रथमाषाढ कृष्ण, अमावास्यांन्तिथौ शुभ ॥ उपलिथ्यं गुठियाओ, जयरूपसिङ, जितासिङ, जिकेसिङ, लखमसिङ, गुदमादत्वं, श्रीलुंग डुजुशं बोने जुरो ।





शुभ ॥ ॐ अद्य वराहकल्प, वैवश्वत मन्वन्तर, कलियुग, भरतखण्ड, जम्बुद्वीपमा हेमन्तको फेदमा नेपाल देश छ । पशुपतिको सन्निधानमा, वासुकीको क्षेत्र, वागमतीको पूर्व, कोसीको पश्चिममा श्री विनयापुरीस्थान आर्यावर्त देश नाउँको यस पुण्यभूमिमा आषाढ कृष्णपक्ष औँसी, पुनर्वसु नक्षत्र, हर्षण योग, बुधबार, ज्येष्ठ सङ्क्रान्ति महापर्व, कर्कट राशि, चन्द्रमसि, सूर्यग्रहण महापर्वको दिनमा निकेस मानन्धरले स्वकामनाले सोधाल यिति (हिटी) को माथिल्लो भागमा अवस्थित श्री ३ लयन चैत्य गुठीलाई ख्वात बुं नाउँको ३ रोपनी, कोलख्वात बुं नाउँको १ कर्ष (४ आना) जग्गा दत्त राखिदियौँ । यी जग्गाको जति आयस्ता हुन्छ, त्यो आयस्ताले दितला गाक त्रयोदशी (श्रावण कृष्ण त्रयोदशी) का दिन पञ्चोपचार पूजा १, सगुन भाग १ सहित चैत्यपूजा गर्नु । जुगादि अर्थात् भाद्र कृष्ण त्रयोदशीका दिन १० माना चामल चैत्यलाई र वदेजु (वज्राचार्य र शाक्य) हरूलाई १० माना चामल र चाँदीको मोहोर ६ दक्षिणा दिने । कतिनिपुन्हि अर्थात् आश्विन पूर्णिमाका दिन देव अर्थात् चैत्यलाई सफा गर्न १ पाथी साखोल अर्थात् चुन लाउने (पोत्ने) । ४ वटा (धौपिंग) दहीसहित पञ्चामृतले स्नान गराई पूजा गर्ने । २० वटा बत्ती बाल्ने । चण्डेश्वरीजात्रामा २ दिन, इन्द्रजात्रामा ७ दिन दिनहुँ ५ वटा बत्ती बाल्ने । कोसिख्वाट बुं नाउँको १ रोपनी जग्गाको बालीले चैत्यको बुसाध्वं अर्थात् वार्षिक पूजा गरी कपूर बाल्ने । यति गरी बाँकी आयस्ताले गुठीयारहरूले भोज खानु । यसरी भोज खाने बेलामा जोगीलाई आफूहरूलाई खाएसरहको भोग भाग १ दिने । यस गुठीका गुठीयारहरू कनक, जयकित, जयसिङ, रूपकेराजा हुन् । यी गुठीयारहरूले वर्षवर्षको पूजा अटुट रूपले गर्नुपर्छ । अटुट रूपले नगरी गुठी लोप गरेमा पञ्चमहापाप लाग्छ । अटुट रूपले पूजा सञ्चालन गरेमा स्वर्ग प्राप्त हुन्छ । नेपाल सम्वत् ५११ आषाढ कृष्ण अमावास्या । अरू गुठीयारहरू जयरूपसिङ, जितासिङ, जिकेसिङ, लखमसिङ हुन् । पुरोहित वज्राचार्य श्री लुंगडुजुलाई निमन्त्रणा गर्ने ।

●

# बनेपाका एक बहुमुखी प्रतिभा



मोहनलाल खिँ मानन्धर

"मोहनलालदाजु ! यसरी जिद्दी नगर्नुस् । छोरालाई पठाउनुस् । उसलाई त बाटोघाटो, गाउँठाउँ थाहा छ र मानिसहरूलाई पनि चिन्दछ । तपाईं त बूढो पनि भइसक्नुभयो ।"

"यस काममा त मै जान्छु राजदासजी ! छोराले ढङ्ग पुऱ्याई गर्दैन होला । अब त धान काट्ने र बाली भित्र्याउने बेला पनि भइसक्यो । खेतीको काम धेरै नै छ । उस बेला पनि काठमाडौँमा पर्चा छर्दा 'म पनि छर्न जान्छु' भनेँ । तपाईंले पठाउनुभएन । अब त म नै जान्छु । बरु केही गरी मलाई गिरफ्तार गरे यो सानो छोरो एकजनालाई तपाईंहरूले केही पढाउने काम गरिदिनुस् । के गर्ने ! यो एक वर्षको छँदा यसकी आमा परलोक भइन् । बरु पेस्तोल र बन्दुक मात्र कि बम पनि ल्याउनुपर्ने ?"



"त्यो त उताबाट जे दिई पठाउँछन्, त्यही लिएर आउने ।"

त्यस बखत मोहनलाल खिँ ५९ वर्षका हुनुहुन्थ्यो । आठजना भरियाहरू लिएर पाँगुको बाटो गरी उहाँ कलकत्ता जानुभयो । राजदास बादे, हंसराज श्रेष्ठ र हर्षलाल ख्वाखल बादे यता भीमफेदीबाट गई सीतामढीमा भेट्ने कार्यक्रम थियो । तर ठोरी भन्ने ठाउँमा गणेशमान सिंह समातिए । त्यसपछि राजदास बादे, हंसराज श्रेष्ठ, हर्षलाल ख्वाखल बादे, सुन्दरराज चालिसे र अरूहरूलाई धमाधम गिरफ्तार गरियो र जेलमा राखियो । उता सीतामढीको एउटा होटलमा बसेपछि मोहनलाल खिँले त्यहाँबाट त्यसै फर्कनुपऱ्यो । त्यसै बेलादेखि उहाँले होसियार भई लुकीलुकी हिँडडुल गर्नुपऱ्यो । बाहिर निस्कनुपरे पनि डराई-डराई निस्कनुपऱ्यो ।

केही समयपछि नेपालमा वि० सं० २००७ सालको क्रान्ति चल्यो । पूर्वतर्फबाट मुक्तिसेना यतातिर अगाडि बढ्दै आए । राणासरकारको फौज पनि बनेपाको घोगेचौरमा राख्न ल्याइयो । बनेपा दिउँसै भय-त्रासले व्याप्त भयो । मोहनलाल खिँको हंसले ठाउँ छोड्यो । तर पनि आफ्नो पसलमा तेल किन्न आउनेहरूसँग चाल नपाइँदो तरिकाले काठमाडौँको जानकारी लिँदै गर्नुभयो । २००७ साल फागुन ४ गतेको दिन घोगेचौरमा बस्ने सिपाहीहरू आई मोहनलाल खिँको घर घेरे, घरभित्रका सबै ठाउँमा खानतलासी गरे तर घरमा कुनै पनि त्यस्तो वस्तु भेट्टाउन नसकेका हुँदा पल्टनका नाइकेले मोहनलाल खिँका अगाडि आएर भने – "बूढाबा ! तपाईंको केही दोष रहेनछ । तपाईंलाई मन नपर्ने व्यक्तिहरूले गर्दा यस्तो हुन गएको हो । चिन्ता लिनुपर्दैन है !"

"अरूको त होइन होला हजुर, यहाँ (औँल्याउँदै) सुबेदारसाहेबको काम होला । मेरो दोकानबाट चार पाथी तेल लिएर जानुभएको थियो । तेलको पैसा माग्दा मलाई 'देशद्रोही काङ्ग्रेस !' भन्नुहुन्छ । म गरिबले पैसा पाएको छैन हजुर !"

पल्टनका नाइकेले सुबेदारसँग 'हो त ?' भनी सोध्दा सुबेदार केही बोल्न सकेन । अनि नाइकेले चार पाथी तेलको पैसा पनि त्यसै बेला दिलाइदिए ।

केही दिनपछि नेपालमा प्रजातन्त्रको घोषणा भयो । मोहनलाल खिँको हर्षको सीमा भएन ।

जातले साल्मी मोहनलाल खिँ बौद्धधर्मका अनुयायी हुनुहुन्थ्यो । तिब्बतबाट आएका लामाहरू र नेपालमा बस्ने बौद्धधर्मका गुरुहरूसँग सङ्गत गर्दै उहाँले बौद्धधर्मका धेरै कुरा सिक्नुभयो । सधैँ-सधैँ भिक्षु-लामाहरूको मात्र

सङ्गत गर्ने हुँदा बनेपालीहरू उहाँलाई 'मोहनलाल भिक्षु' भन्ने गर्दथे । बनेपाली साल्मीहरूमा प्रत्येक देवाली-गुठीहरूका साल्मीहरूका छुट्टाछुट्टै खलक-नामहरू छन्, जस्तै : ध्वँ (स्याल), इमा (चील), कमिचा (गिद्ध), ब्याँ (भ्यागुतो), गैंरा (गैंडा), भू (भूत), चखूँ (भँगेरा), बखूँ (परेवा), सुलु (सारौं), हाम (तिल), छुञ्चुमरी (गहुँको पिठाको रोटी), छ्याकँ (काठको टुक्रो) आदि-आदि । मोहनलाल खिँ 'खिँ' (ठूलो खालको मादल) खलकका साल्मी हुनुहुन्थ्यो ।

खिँ उहाँको पुर्ख्यौली बाजा हो । त्यसमा पनि उहाँ वाङ्ख्यः भजनका कजी (नाइके) हुनुहुन्थ्यो । भजनखलका गुरुबा हुनुभएकाले उहाँ धिमे, पछिमा, दबदब, नायखिँ (कसाइबाजा), ढोलक आदि विविध बाजा बजाउने मात्र नभई पुराना-पुराना भजन-गीतका ज्ञाता पनि हुनुहुन्थ्यो । गीतको अर्थ बुझ्ने, व्याख्या गर्ने, कुन गीत कुन बेला गाउने र त्यसमा कुन बाजाको कुन ताल भनी भन्ने र सिकाउन जाने काम पहिले-पहिले उहाँ गर्नुहुन्थ्यो । पुराना-पुराना गीत, कथा, शास्त्र आदिमा अभिरुचि राख्नुहुने उहाँ सानैदेखि बौद्ध र हिन्दूधर्मका कुराहरू सुन्न, बुझ्न जहिले पनि तत्पर र अग्रसर भइरहनुहुन्थ्यो । उहाँ नाटककार पनि हुनुहुन्थ्यो । पुराना-पुराना राजकुमार र देवीदेवताका आख्यानलाई नाटक-नाटिकाका रूपमा जनसमक्ष प्रस्तुत गर्न उहाँ धेरै नै सिपालु हुनुहुन्थ्यो । त्यसमाथि पनि उहाँ विभिन्न बाजाका ताल र पुराना-पुराना भजनका गीतहरू आफ्ना नाटकमा ढङ्ग पुऱ्याई समावेश गर्न जान्ने हुँदा उहाँका नाटकले मानिसहरूलाई साह्रै प्रभावित पार्दथे ।

विविध बाजा बजाई नाटक देखाउन मन पराउने मोहनलाल खिँ १२ वर्षका छँदा एउटा अद्‌भुत घटना घटेको थियो ।

पहिले-पहिले साँखुका मानिसहरू नाटक देखाउन साह्रै नै सिपालु थिए । एकचोटि साँखुका केही मानिसहरू बनेपामा 'सुधन राजकुमार' नाटक देखाउन आए । अर्को वर्ष बनेपाका काजीमान द्वारेको नेतृत्वमा त्यही नाटक देखाउने कार्यक्रमको आयोजना गरियो । नाटक सिकाइने घरमा केटाकेटीहरूको हुल जम्मा भयो । नाच्ने मानिसहरूले केटाकेटीहरूलाई बाहिर धपाइदिए । मोहनलाल खिँ भऱ्याङदेखि तलतिरको एउटा खाडलमा लुकेर बसिरहनुभयो । नाटक सिकाउने काम सुरु भयो । खिँ बाजा बजाइयो र नाचियो । खिँ बाजा बजाउनेको हात मिलेन, ताल बिग्रियो । नाच्ने मानिसहरूको खुट्टाको चाल त्यसै रोकियो । त्यसै बखत लुकेर हेरिरहने साना केटा मोहनलाल खिँले अनायास भन्नुभयो – "खिँको बोली मिलेन, खुट्टाको चाल पनि उल्टो भो ।"

सानो केटोले त्यसरी बोलेको सुनेर त्यहाँ भएका सबै टोलाए । अनि काजीमान द्वारेले भने – "ए बाबु ! तँलाई नाच्न आउँछ ?"



मोहनलाल खिँले भन्नुभयो – "यहाँ मानिसहरू धेरै छन् । मलाई त लाज लाग्छ ।"

द्वारेले मानिसहरूलाई बाहिर पठाए र मोहनलाल खिँलाई नाच्न लगाए । त्यसपछि मोहनलाल खिँले चुरोटपेटीको कागजमा आफूले रचेका नृत्य, दोहा अनि खिँको ताल र बोली आदि ल्याएर द्वारेका हातमा राखिदिनुभयो । ती सबै कुराहरू राम्ररी लेखिएको देखेर मानिसहरू आश्चर्यचकित भए । अनि द्वारेले सोधे – "तिमीले यी सबै कहिले लेख्यौ ?"

"साँखुका मानिसहरू नाटक देखाउन आउँदा दिउँसो वनमा गएर एकभारी दाउरा घरमा ल्याउने गर्थें । जङ्गलमा दाउरा खोज्न जाँदा अघिल्लो साँझमा देखाइएको नाटक सबै मनमा गुनगुनाउँथें र घर आएपछि ती सबै चुरोटका पेटीमा लेखिराख्थें ।" – मोहनलाल खिँले भन्नुभयो ।

"ए बाबु ! त्यसो भए तिमी यो नाटक सिकाउन सक्छौ ?"

"सक्छु ।"

त्यसपछि त्यो नाटक मोहनलाल खिँको नेतृत्वमा ३ महिनासम्म सिकाइयो र नौ दिनसम्म डबलीमा देखाएर टुङ्गियो । त्यसपछि त 'केटाले सिकाएको नाटक साह्रै राम्रो थियो' भन्ने हलचल नै भयो । नाटक धेरै नै राम्रो र प्रभावकारी भएको हुँदा पनौतीका मानिसहरू पनि त्यो नाटक आफ्नो सहरमा देखाउनका लागि अनुरोध गर्न आए । अनि पनौतीमा समेत त्यो नाटक देखाइयो । पनौतीका मानिसहरू धेरै नै खुसी भए । नृत्य गर्नेहरूलाई रु. ३०।- र भोज खानलाई एउटा राँगो पनि दिइयो । नाटक सफल भएको हुँदा द्वारे पनि साह्रै खुसी भए । त्यस बेला सिपाहीहरूले मानिसहरूलाई समाती समय-समयमा सरकारले ठाउँठाउँबाट ल्याउने तोरा बोक्न लगाउँथे । द्वारेले मोहनलाल खिँसँग हर्षित भई उहाँलाई त्यसरी तोरा बोक्नुनपर्ने गरिदिए ।

यसरी जीवनमा सबैभन्दा पहिले गर्नुभएको प्रयास सफल भएकाले पछि मोहनलाल खिँले अरू नाटक पनि सिकाई मञ्चन गरेर देखाउनुभयो । पहिले देखाइसकेका नाटक फेरि दोहोऱ्याएर पनि देखाउनुभयो । यसरी उहाँले सुधन राजकुमार, कबीर राजकुमार, इन्द्रसभा, बलिराजा, शिवकुमार, पद्मकेतु राजा, कीर्तिसेन, चण्डेश्वरी, नमोबुद्ध आदि गरेर नेपाली भाषा, नेपाल भाषा र हिन्दी-नेपाली मिश्रित भाषामा १५ वटाजति नाटक देखाउनुभयो ।

म १२ वर्षको हुँदाको एउटा कुरा – सुधन राजकुमारको नाटक फेरि मञ्चित गरियो । विविध बाजाको तालमा एक-एक पात्र बाहिरिँदै नाटकीय ढङ्गले नृत्य गरेर प्रदर्शनमा सम्मिलित भए । लयात्मक दोहामा सम्वादहरू

बोलिए । मचाहिँ त्यसमा दूतको भूमिकामा थिएँ । नाटक-प्रदर्शनका सन्दर्भमा एउटा दृश्य दुई पक्षका बीचको युद्धको थियो । आ-आफ्ना पक्षले दोहा पढेर जवाफ दिइरहेका थिए । युद्ध गर्ने राक्षसको मुकुन्डो लगाएर आउने एक पात्रलाई त्यहाँको एउटा मट्टितेलको टिनमाथि बसालियो । राक्षस थरर काँप्यो । टिन थिचियो । त्यसै बखत मोहनलाल खिँ आउनुभयो र राक्षसलाई आफ्नो हातले बिस्तारै पिट्नुभयो । राक्षस चुप लागेर बस्यो । दर्शकहरू आश्चर्यचकित भए । मोहनलाल खिँले राक्षसलाई खासी (तन्त्रले जीउ काम्ने विद्या) चढाएर ल्याएका रहेछन् भन्ने गाइँगुइँ चल्यो ।

दुःख र सुखको धागोले उनेर राखिएको जीवन मानिसहरूका अगाडि प्रदर्शन गर्नु नै नाटक हो । नाटक एक जीवनचक्रको तस्बिर हो । आँसुले भिजेको दृश्यले दर्शकहरूको हृदयलाई पगालिदिन्छ । यो चिरस्मरणीय पनि हुन्छ ।

२०२८ सालको कुरो थियो, बनेपाको लायकुदरबारको चौरमा नाटक-प्रदर्शन गरियो । 'नाटक राम्रो छ' भनेर पहिले नै हल्ला चलेको थियो । लायकुचौरभरि दर्शकहरूको भीड लागेको थियो । नाटकमा वियोगयुक्त एउटा दृश्य आयो । मोहनलाल खिँले स्वर्गकी रानी इन्द्रावती बनेर खेल्ने पात्रालाई आफ्नो तान्त्रिक शक्तिले रुवाइदिनुभयो । वातावरण दुःखद हुँदै गयो । वियोगको गीतको एक चरण पनि गाउन नपाउँदै इन्द्रावती डाको छोडेर रुन थालिन् । मोहनलाल खिँले मन्त्र गरी जल खुवाउनुभयो । इन्द्रावतीको रुवाइ टक्क रोकियो । मलाई आश्चर्य लाग्यो – विश्वास गर्ने कि नगर्ने ? नाटकको ठूलो प्रशंसा भयो । अर्को वर्ष पनि त्यही नाटक फेरि देखाइयो । मानिसहरूले त्यस बेला पनि त्यति नै प्रशंसा गरे । यसरी नाटक देखाउन सधैं-सधैं अग्रसर हुनुहुने माहेनलाल खिँको ठूलो इच्छा सत्यनारायणसम्बन्धी नाटक देखाउनु रहेको थियो ।

मोहनलाल खिँ बनेपाका साह्रै नामी ज्योतिषी पनि हुनुहुन्थ्यो । चिना देखाउन आउने मानिसहरूसँग कुरा गरेर समय बिताउन पाइने हुँदा जति बूढो हुनुभए पनि उहाँले नियास्रो जीवन बिताउनुपरेको थिएन । आफूकहाँ आइरहने मानिसहरूलाई पुराना-पुराना कथाहरू भनेर, पुराना-पुराना गीतहरू गाएर, गीतको अर्थसमेत व्याख्या गरिदिएर, अनि टोलका मानिसहरूलाई खिँ यसरी बजाउने भनी आफूले त्यो बाजा बजाइदिएर समय बिताउन पाएकाले उहाँको जीवन अति नै सरस र रोचक थियो । आफ्नो जीवनकालमा तीनपटकसम्म ठूला-ठूला अपरेसन भई उहाँ ८९ (वि० सं० २०३९ मा) वर्षको हुँदा पनि उहाँ स्वस्थ र बलियो हुनुहुन्थ्यो । चस्मा नलगाईकन पनि पात्रोका साना-साना अक्षर



पढी २०४६ सालसम्म पनि मानिसहरूको सेवा गर्दै आउनुभएको थियो । अवतारी लामाहरूसँग सङ्गत गर्ने उहाँमा बोक्सी समात्ने, बहुलाएकालाई निको पार्ने, नाटकमा रुवाउने, काँप्न लगाउने आदि कामको खुबी भएको हुँदा उहाँ आफ्नो क्षेत्रमा साह्रै नै लोकप्रिय हुनुहुन्थ्यो ।

एकदिनको कुरो, मेरो भेट एकजना साथीसँग भयो । उहाँ कवि हुनुहुन्छ अनि नेपाली र नेपाल भाषाका लेखक पनि । यसअघि कहिल्यै नआएका साथी आएको देखेर मैले सोधें – "तपाईं किन आउनुभएको होला ?"

"अँ, मोहनलालबालाई एकचोटि भेट्न भनेर आएको । उनी (आफ्नी श्रीमतीलाई देखाउँदै) दिनदिनै कामिरहन्छिन् । बोक्सी लागेको रे ! त्यसैले एकचोटि देखाउन ल्याएको ।"

"तपाईं पनि यस्ता कुरामा विश्वास गर्नुहुन्छ र ? डाक्टरकहाँ लगेर देखाउनुभएन ?"

"देखाइसकें, तर भएन । मलाई पनि विश्वास त छैन, तर उनले मानिनन् । त्यसैले आइहालें, एकचोटि देखाएर जाने ।"

हामी माथि गयौं । मोहनलाल खिँले सबै कुराको जानकारी लिनुभयो । अनि उहाँले धुप बाली उपचार गर्नुभयो र जल खुवाउनुभयो । मोहनलाल खिँले दिनुभएको बुटी लिएर उहाँहरू फर्कनुभयो ।

२-३ महिनापछि उहाँलाई मैले काठमाडौंको नयाँसडकमा भेटें । मैले सोधें – "अचेल तपाईंकी जहानलाई कस्तो छ ?"

"ओहो ! अद्‌भुत नै भयो, राम्ररी नै निको भयो । अहिले काम्दिनन्, डराउँदिनन् । एक्लै बस्ता पनि केही भएन । रुँदा पनि रोइनन् । कसरी विश्वास नगर्ने !"

अर्को एउटा कुरा, त्यस बेला बनेपामा अस्पताल थिएन । अरनिको राजमार्ग पनि बनेको थिएन । आइमाईहरू बच्चा जन्माउन नसक्ने हुन्थे, जीवन-मरणको सवाल भइरहेको हुन्थ्यो । त्यस बेला दुःखले पीडित भइरहेका नाला, पनौती आदितिरका मानिसहरू रातदिन आई मोहनलाल खिँलाई बोलाएर लैजान्थे । उहाँले दिनुभएको जल खुवाइसकेपछि बच्चाको जन्म हुन्थ्यो । यसरी पनि उहाँले धेरैजनाको सेवा गर्नुभएको थियो ।

त्यति मात्र होइन, उहाँले साल्मीसमाजमा प्रचलनमा रहेको चाहिने-नचाहिने बेलामा पनि भोज खाने चलन हटाइदिनुभयो, अरू नराम्रा व्यवहारहरू सुधार गरिदिनुभयो, प्रत्येक घरले एक-एकवटा देवालीमा एउटा-एउटा भाले

बलि दिने प्रथा हटाइदिनुभयो, झारारकम हटाउने काममा बल दिनुभयो । घरजग्गा किन्नेहरूलाई सहयोग गर्नका लागि उहाँले ज्योतिषशास्त्रको पुरानो पुस्तकमा माटो हाल्न लगाई हुने-नहुने, राम्रो-नराम्रो आदि हेरेर आफ्नै किसिमले सल्लाह दिई घरको जग हाल्ने, छाना छाउने, घर भत्काउने, विवाह गर्ने कामको साइत हेर्ने पनि गर्नुभयो । डकर्मीको नाइके हुनुभएकाले र उहाँलाई शास्त्रको पनि धेरै ज्ञान भएकाले बनेपामा बनाइएका घरहरूमध्ये ७५ प्रतिशत घरको शिलान्यास आफैँ गई उहाँले गर्नुभएको थियो ।

त्यसैले मलाई मोहनलाल खिँप्रति गर्व लाग्दछ, किनभने उहाँ मेरा बुबा हुनुहुन्थ्यो ।

मेरा बुबा मोहनलाल खिँका विषयमा वरिष्ठ कवि तथा लेखक श्री मोहन दुवाल यसरी लेख्नुहुन्छ – "यी जातिका अर्थात् मानन्धरहरूका गुरु मानिनुहुन्छ मोहनलाल खिँ मानन्धर । बुद्धधर्मका कट्टर अनुयायी भएकै कारणले उहाँलाई 'मोहनलाल भिक्षु' पनि भनिन्छ । धर्मका गुरु, तन्त्रमन्त्रका योगी, तान्त्रिक, प्राचीन नाट्यविधाका प्रयोगकर्ता, वैद्य, समाजसुधारक व्यक्तिका रूपमा पनि मोहनलाल खिँ मानन्धरको सम्झना गर्न सकिन्छ ।

जीवनको उत्तरार्द्धमा 'लायकु साः दापा खलः' काठमाडौँबाट स्वर्णपदक प्राप्त गर्नुभएका मोहनलालको सम्मान 'मानन्धर समुदाय, काठमाडौँ' बाट पनि भए-गरेको देखिन्छ ।"[1]

जतिसुकै स्वस्थ भएर धेरै वर्षसम्म बाँच्न पाए तापनि वर्ष बित्दै गएपछि उमेरले समयको भार थाम्न नसक्ने हुँदो रहेछ । ९७ वर्षका हुँदा पनि उत्तिकै बलिया, उत्तिकै फुर्तिला र उत्तिकै जाँगरिला मेरा बुबा मोहनलाल खिँको स्मरणशक्तिमा कत्ति पनि कमी देखिएको थिएन । यो सालमा यो घटना भएको, त्यो सालदेखि त्यो जात्रा चलेको आदि कुरा किटानका साथ भन्न सक्ने मेरा बुबा ९८ वर्षमा पदार्पण गरेपछि नै उहाँ शारीरिक रूपले कमजोर हुँदै जानुभयो । उहाँ धेरै नै बिरामी हुनुभयो ।

टोलका सबै मानिसहरूलाई बाजागाजा र भजन सिकाउने, अन्य राम्रा कुराहरूमा प्रोत्साहन गर्ने, दुःखमा पर्दा आफू अग्रसर भएर दुःख टारिदिने, नराम्रो बाटोमा लागेका मान्छेहरूलाई अर्तिबुद्धि दिने र बालकदेखि बृद्धसितसम्म मिलनसार भई व्यवहार गर्ने मोहनलाल खिँ सबैका प्रियपात्र हुनुहुन्थ्यो ।

[1] तान्त्रिक गुरु मोहनलाल खिं मानन्धर, प्रतिविम्वित विम्वहरू, लेखक : मोहन दुवाल, प्रकाशक : जनमत प्रकाशन, बनेपा – ७, २०५६ चैत्र



मानन्धरसमुदायका युवा-युवतीहरूले बाटोमा भेट्ता शिर निहुराएर ढोगी उहाँको सम्मान गर्ने गर्दथे ।

२०४७ सालको पौष महिनातिर उहाँ सिकिस्त बिरामी हुनुभयो । टोलका धेरै युवायुवतीहरू कोठाभित्र बसेर, अझ कोठामा नअटाई बाहिरै बसेर डाको छोडी-छोडी रोए । म त्यस बखत आत्तिएर छटपटाएँ । कसैले 'नारायण ! नारायण !' भने त कसैले 'नमो बुद्धाय' र 'नाम सङ्गीति' भने ।

अन्तमा वि० सं० १९५० साल आश्विन शुक्लपक्ष प्रतिपदाका दिनमा जन्मनुभएका मेरा पूज्य बुबा मोहनलाल खिँ मानन्धर २०४७ साल पौष शुक्ल षष्ठीका दिन अपराह्न ३ बजे स्वर्ग हुनुभयो । म पनि पौष शुक्ल षष्ठीकै दिन जन्मिएको थिएँ ।

उहाँ स्वर्ग हुनुभएपछि घरमा आएका लामागुरुहरूले भुइँमा पल्टाइराखिएको लासको चारैतर्फ १०८ देवा (दीप) बाले र तिब्बती भाषाका बौद्धस्तोत्रहरू वाचन गरे । भीडका भीड मानिसहरू घरमा हेर्न आए र मोहनलाल खिँको निधनमा दुःख व्यक्त गरे । हामी सबै रातभर नै जाग्राम बस्यौँ । रातभरि नै १०८ पालाहरू बलिरहे ।

भोलिपल्ट बिहान गुठीयारहरू सबै आए । अन्तिम यात्राका लागि सबै सामानहरूको तर्जुमा गर्नतिर लागे । बनेपाका सबै टोलका धेरै मानिसहरूको उपस्थिति थियो ।

काठमाडौँबाट शान्तदास मानन्धर, जीतबहादुर मानन्धर आदि व्यक्तिहरू पनि उपस्थित हुनुभयो । नाय्‌बाजा (कसाईबाजा) का मानिसहरू पनि आए ।

लास बाहिर ल्याइयो र कुर्ता (लास राख्ने खट) मा राखियो । दर्शकहरूको रोदनपूर्ण स्वरमा 'नारायण' र 'नमो बुद्धाय' शब्दहरू गुन्जिए । चारजना गुठीयारहरूले खट बोके । नायखिँ बाजा बजाइयो ।

त्यो दिन मलामीहरू छोटो बाटो गरी मसानतिर गएनन्, बरु घरको पूर्वपट्टिबाट माथिल्लो टोलतिर लगेर एक घुमुवा लिई ठूलो भीडका साथ थारुदीपतिर लागे ।

तिब्बती लामागुरुहरू र अन्य स्थानीय महायान बौद्धधर्मावलम्बीहरू (लोग्नेमानिसहरू र केही स्वास्नीमानिसहरू पनि) बाटोभरि बौद्धस्तोत्रहरू गुनगुनाउँदै हिँडेका थिए ।




**मोहनलाल खिँलाई नाति डा० मदनकाजी मानन्धर अँजुलीपानी दिँदै**

मलामीहरू दीपमा पुगे । मोहनलाल खिँको निष्प्राण शरीरलाई दाउराको चाङमा लम्पसार पारियो । मलामीका रूपमा आएका सबैजनाले एक-एक गर्दै आ-आफ्ना अँजुलीले शवलाई पानी अर्पण गरे । अन्त्यमा मेरा दाजु आशाकाजी खिँले शवलाई तीनपटक घुमेर आफ्ना पूज्य बुबाको खुट्टा ढोग्नुभयो र दागबत्ती दिनुभयो । यसरी सर्वप्रिय मोहनलाल खिँ मानन्धर सबैसित हमेसाका लागि बिदा हुनुभयो ।

●



# सन्दर्भ पुस्तक-पत्रिका सूची


१. उद्धव आचार्य, चण्डेश्वरीमन्दिरको कला वास्तुकला, श्री चण्डेश्वरी महात्म्य, प्रकाशक : श्री चण्डेश्वरीमन्दिर पुनर्निर्माण तथा छानासुधार समिति, २०६१

२. कृष्णा श्रेष्ठ (अमात्य), बनेपास्थित चण्डेश्वरीमन्दिरको वास्तुकला, चण्डेश्वरी स्मारिका, प्रकाशक : बनेपा नगरपालिका, २०५०

३. ख्वपया बाहा बही, प्रकाशक : मैत्रेय युवा सङ्घ, ख्वप, २०६१

४. गोविन्द टण्डन, काठमाडौं अधित्यकाका गणेशमूर्तिहरू, प्रकाशक : नेपाल र एसियाली अनुसन्धान केन्द्र, त्रि० वि०, कीर्तिपुर, २०४२

५. चेतोनाथ शर्मा आचार्य, गणेश एक : स्वरूप अनेक, प्रकाशक : सूर्यचन्द्र बादे श्रेष्ठ, २०६०

६. जगत्केशरी : श्री चण्डेश्वरीस्तोत्र

७. जीतबहादुर मानन्धर, विरिञ्चिनारायण, प्रकाशिका : श्रीमती तारादेवी मानन्धर, लायकुसाल, काठमाडौं, २०४६

८. --------, श्रीगणेशाय नमः, प्रकाशिका : श्रीमती तारादेवी मानन्धर, लायकुसाल, काठमाडौं, २०३१

९. --------, बनेपाका आठ विनायक, कन्या स्मारिका, सनातन कन्यापूजा प्रबन्ध समिति, बनेपा, २०५९

१०. --------, सिंचा खलया मानन्धर, सन्ध्या टाइम्स, ने० सं० ११२७ दिल्लथ्व ५

११. ज्ञानकाजी मानन्धर, कुमारी, प्रकाशक : सुखवेती मानन्धर, ने० सं० ११२३

१२. ------- बनेपा एक सिंहावलोकन, आजाद मा० वि० स्मारिका, प्रकाशक आजाद मा० वि० बनेपा, २०३५

१३. ------- सायमि तयगु साः, स्वर्णजयन्तीवर्ष स्मारिका, प्रकाशक : केन्द्रीय मानन्धर सङ्घ, २०६०

१४. ------- भक्तपुरकी नवदुर्गा, पूर्वीय दर्पण, वर्ष १ अङ्क २८०, शनिबार १२ वैशाख २०६१

१५. ------- कीर्तिपुरका बाघभैरव, काभ्रे हटलाइन, वर्ष १ अङ्क ११, शुक्रबार १६ श्रावण २०६१

१६. ज्ञानमणि नेपाल, नेपालको पूर्वमध्यकालको इतिहास, प्रकाशक : नेपाल र एसियाली अनुसन्धान केन्द्र, त्रि० वि०, कीर्तिपुर, २०५४

१७. तुलसी दिवस, अष्टमातृका मुकुन्डो नृत्य-नाटक : एक जीवन्त सांस्कृतिक परम्परा, मधुपर्क, वर्ष २५ अङ्क १२, वैशाख २०५०

१८. देवमाला वंशावली, प्रकाशक : श्री पीरमहन्त क्षिप्रानाथ योगिराज, गोरक्षराष्ट्र नेपाल, सिद्धाचल, मृगस्थली, २०१३

१९. धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल, गोपाल राजवंशावली, प्रकाशक : नेपाल रिसर्च सेन्टर पब्लिकेसन, सन् १९८५

२०. धनवज्र वज्राचार्य, लिच्छविकालका अभिलेख, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, कीर्तिपुर, आषाढ २०३०

२१. -------, शक्तिशाली भारदार रामवर्द्धनहरू र तत्कालीन नेपाल, पूर्णिमा (अङ्क ७), २०२२

२२. नीलहरि र एकदेव उपाध्याय, देवीभागवत (द्वितीय संस्करण), प्रकाशक : सुरेश पुरी, श्री हितैषी कम्पनी, कर्णघण्टा, वाराणसी, २०३६

२३. बनेपा सात गाउँ, प्रकाशक : बनेपा नगरपालिका, २०५३

२४. भुवनलाल प्रधान, स्व० प्रो० रामप्रसाद मानन्धर, केन्द्रीय मानन्धर सङ्घ स्मारिका, पौष २०५०

२५. मनवज्र वज्राचार्य, नेपालको मध्यकालीन कला, प्रकाशक : सूचना तथा प्रसार मन्त्रालय, सूचना विभाग

२६. मीनबहादुर शाक्य, Sacred Art of Nepal, प्रकाशक : Handicraft Association of Nepal, 2002 A. D.

२७. मेचीदेखि महाकाली (भाग २), श्री ५ को सरकार, सूचना विभाग

२८. मोहनप्रसाद खनाल, बनेपाको ऐतिहासिक रूपरेखा, प्रकाशक : नेपाल र एसियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर, २०५२



२९. मोहन दुवाल, तान्त्रिक गुरु मोहनलाल खिं मानन्धर, प्रतिबिम्बित बिम्बहरू, प्रकाशक : जनमत प्रकाशन बनेपा, चैत्र २०५६

३०. सं० योगेशराज, पन्तिया अभिलेख, प्रकाशक : नसंचा पुचः, ने० सं० ११२०

३१. डा० रुद्रदेव त्रिपाठी, श्री बटुकभैरव साधना

३२. शेखरसिंह गौतम, भरतखण्ड और नेपाल, प्रकाशक : मानव-जीवन-संस्थान (न्यास), गोरखपुर, सन् १९६९

३३. हरिराम जोशी, चण्डेश्वरी, चण्डेश्वरी स्मारिका, प्रकाशक : बनेपा नगरपालिका, २०५०

३४. -------, बनेपा, बनेपा सात गाउँ, प्रकाशक : बनेपा नगरपालिका

३५. -------, हिन्दू देवीदेवता, प्रकाशक : श्री ५ को सरकार, सञ्चार मन्त्रालय, सूचना विभाग, २०४०

३६. हेमराज शाक्य, स्वयम्भू महाचैत्य, प्रकाशक : स्वयम्भू विकास मण्डल, ने० सं० १०९८

३७. Daniel Wright, Nepal - History of the Country and the People, Cosmo Publication, 1983 A. D., New Delhi

३८. Gills Begwin, Nepal : Valley of Gods

३९. Pro. Dr. J. A. Van Ginke, Depicted Deities

●